खाना बनाउँदा यस्तै उच्च भावना मनमा हुनुपर्छ। यदि त्यस बापत नालका कुराहरू सोचियो भने कामको परमाणुबाट भोजन दूषित हुन्छ। भोजन बनाउने समयमा मनको असल खराब विचारको परमाणु भोजनमा गएर मिल्दछ। भोजन बनाउने समयमा, रोटी बेल्ने समयमा, 'हरे कृष्ण, हरे कृष्ण' को जप गर्दै रह्यौ भने भोजन सात्त्विक हुनेछ। पवित्रताद्वारा खाना बनायौ भने भोजन गर्नेवालाको कल्याण हुनेछ।

आजकालका नारीहरू चलचित्रका गीतहरू मात्र गुनगुनाइरहन्छन्। खाना बनाउने समयमा पनि चलचित्रका गीत गाइरहन्छन्। यसो गर्नाले भोजन अपवित्र हुन जान्छ। भोजन बनाउने समयमा चलचित्रका अमङ्गल, शृङ्गारी, वासनायुक्त गीत गाइरहनाले भोजन दूषित हुन्छ, त्यसमा संस्कारहीनताको असर आउँछ। यदि गीत गाउनै पर्ने हो भने कृष्ण भक्तिको गीत गाऊ।

प्रेम की लगन लगी है उसको, क्या मथुरा क्या काशी रे।
गोविन्द के गुन गाते फिरते, वृन्दावन के वासी रे॥

मैले भोजन चाहिँ सावधान भएर बनाएँ। अन्तमा मोहनभोग बनाउन लागें तब विचार आयो— कृष्णलाई यो बड़ो मन पर्छ। हृदयमा कृष्णलाई मोहनभोग ख्वाउने इच्छा भयो। मेरो मन तब हातबाट जान लाग्यो जस्तो भयो। मलाई आभास हुन थाल्यो कृष्ण आँगनमा आएका छन्। घरमा आइरहेछन्, भान्सा घरमा आइपुगेका छन्।

यसप्रकार मन कृष्णाको कल्पनामा डुबेको थियो। उता मोहनभोगमा चिनीको साटो नून परेछ। मोहनभोग नुनिलो भैसकेको थियो, तर त्यसमा भक्तिको पुट लागेको थियो। त्यसकारण पाहुनाले चाहिँ त्यसको प्रशंसा गर्दै खाए। 'यो भोजन होइन अमृत हो', भने। भगवान्‌को नामामृतको पुटले नूनको स्वाद गुलियो भएको थियो। मेरा क्रोधी ससुराले पनि भोजनको र मेरो प्रशंसा गर्नुभयो। यी मेरी पुत्रवधू होइनन्, अन्नपूर्णा हुन्, भने।

अन्तमा जब मैले खाना खाएँ तब थाहा पाएँ मोहनभोग मीठो छैन, नुनिलो थियो। माता, मेरो तर यी कृष्णले लाज बचाइदिए। अर्की एउटी गोपिनी भन्न लागी—'माता, के भनुँ म। म दूध-दही बेच्न निस्कें। म भन्न सक्दिनँ कसरी मलाई लाग्यो दहीको ठेकीभित्र कृष्ण लुकेका छन्। शिरबाट ठेकी झिकेर हेर्दा त्यसमा कृष्णको दर्शन भयो। अब कृष्णलाई पनि कतै बेच्न सकिन्छ ? केही पनि नबेची म घर फर्किएँ भने बड़ो फजीहत हुने छ।'

आफ्नो बुद्धिरूपी मटुकीमा कृष्ण अटाएका हुनाले जहाँ पनि उनको दर्शन भइरहने हुन्छ। गोपिनीहरू आफ्नो बुद्धिमा मनमा कृष्णलाई राज गराई राख्थे।

यदि आफ्ना शिर, हृदय, मन, बुद्धिमा जड़ पदार्थ भयो भने जहाँ पनि त्यही देखिइरहन्छ र श्रीकृष्ण हुनुभयो भने कणकणमा उहाँको दर्शन भइरहनेछ।

माता, हामी जहाँ पनि जान्छौं हामीलाई कृष्णको मात्र दर्शन भइरहन्छ।

यी गोपिनीहरू घरको काम गर्दा-गर्दा निवृत्त भएपछि पनि श्रीकृष्णलाई संझिरहन्छन्।

बड़ा-बड़ा योगी महात्माहरूले परमात्माको नित्य स्मरण गर्दै रहने प्रयत्न गर्नुपर्दछ, तर व्रजका गोपिनीहरूले कृष्णलाई बिर्सन कोशिश गरे पनि बिर्सन सक्दैनथे। कृष्णले पनि यिनीहरूलाई बिर्सन नसक्नुहोला।

गोपिनीहरू गेरुआ वस्त्र लाउँदैनन् र पनि तिनको मन कृष्ण-प्रेममा रङ्गिरहन्छ। यो चाहिँ गोपिनीहरूको प्रेम-संन्यासको कथा हो।

यही हो गोपिनीहरूको मनको तन्मयता र निरोध।

बालकृष्णका विविध लीलाहरू हेर्दै गोपिनीहरू घरकाज बिर्सिएर पागल जस्ता हुन्थे। *'प्रेक्षन्त्य उज्झित गृहाः'* घरको कामकाज छोड़ेर लीलाहरू हेरिरहन्थे। 'मनसोऽनवस्थाम'। कृष्णका लीलाहरू देखेर उनको मन अस्थिर भई लीलाहरूमा तन्मय हुन्थ्यो। यो चाहिँ गोपिनीहरूको तन्मयता हो।

कृष्णमा मात्र तन्मयता हुनाको कारण गोपिनीहरू संसार व्यवहारको काम गर्न पाउँदैनथे। कृष्णप्रेममा सुद्धिबुद्धि हराएर नगर्ने योग्य काम गर्थे। प्रभुमाथि त यस्तै तन्मयता हुनुपर्छ।

कृष्णकथा—कृष्णलीलामा जो व्यक्ति गोपिनीहरूको जस्तो तन्मय हुन्छ, त्यो मुक्त हुन्छ। भागवत मृत्युको पहिले मुक्ति दिन्छ। हो, तन्मयता गोपीजस्तै हुनुपर्छ। गोपिनीहरू घरको कामकाज गर्दा पनि कृष्णलाई बिर्सदैनथे।

भक्तिमार्गमा व्यवहार र परमार्थ भिन्न होइन एउटै हो।

प्रत्येक कार्यमा प्रभुको संधान हुनु पुष्टिभक्ति हो।

प्रत्येक कार्यलाई, व्यवहारलाई प्रभुमय मान्नुनै भक्ति हो। गोपिनीहरू यस भक्तिमार्गका आद्य आचार्य हुन्। यसै सिद्धान्तलाई आचार्य महाप्रभुले अगाड़ि बढ़ाए।

सबै कामकाज निवृत्त भएपछि भक्ति गर्नु चाहिँ मर्यादा-भक्ति हो।

सुबोधिनीमा महाप्रभुले गोपिनीहरूलाई प्रेम संन्यासिनी भनेको छ। गोपिनीहरूका साथमा थियो केवल निःस्वार्थ प्रेम। उनको प्रेमनै संन्यास थियो।

वस्त्रसंन्यासको अपेक्षा प्रेम-संन्यास उत्तम हो। कृष्णप्रेममा हृदय पग्लिएपछि संन्यास हुन पुग्छ अनि प्रकाशित हुन्छ। सबै कर्महरूको न्यास-त्यागनाश हो। ईश्वरका निमित्त जो बाँच्दछ, त्यही संन्यासी हो। गोपिनीहरू ईश्वरका निमित्त मात्र बाँचेका थिए, त्यसकारण उनलाई प्रेम-संन्यासिनी भनेको हो।

ज्ञान र योगमा भक्ति विजय भनिएको छ। भक्तिले भगवान्लाई आबद्ध गर्दछ, वशीभूत गर्दछ।

नौनी-चोरी लीलाको यही रहस्य हो। मन नौनी जस्तो कोमल छ। मनको चोरी भनेकै नौनी-चोरी हो। कृष्ण अरूको चित्तचोर हुनुहुन्छ र पनि चोर समातिंदैन। पक्रिइने चोर तर सामान्य चोर हुन्छ। तर कृष्ण चाहिँ अनौठो चोर हुनुहुन्छ। उहाँलाई ती गोपिनीहरूको मनको निरोध गर्नु थियो। कुनै पनि अन्य विषयहरूमा जानबाट जोगाउनु थियो।

गोपी अर्थात् इन्द्रिय। सबै इन्द्रियहरूले सदा ईश्वरकै मात्र चिन्तन गरिरहोस् भन्ने हेतुले यी सबै लीलाहरूको रचना भएको हो।

यशोदाजीले गोपिनीहरूलाई भन्नुभयो—बेस हुन्थ्यो यदि तिमीले नौनी लुकायौ भने।

एउटी गोपी—'माता, तिमीले हामीलाई के सिकाउँछ्यौ ? म यसै ठूली छु, तैपनि कसरी भन के भएको थियो।' एकपटक कृष्णसँग बाटामा भेट भएको थियो। उनले हाँस्दै मलाई भने—'भोलि तिम्रो घर आउनेछु।' मैले सारा नौनी आफ्नो माइत पुऱ्याइदिएँ। कृष्णाले भोलिपल्ट आएर हेर्दा नौनीको नामोनिसान छैन। उनी रिसाएर आगो भए। पलङ्गमा सुतिरहेको मेरो बालकलाई चुट्की मार्दै भन्न थाले—तिम्री आमा बड़ी कंजूस छिन्। घरमा केही राख्दै राख्दिनन्।

माता ! घरभित्रबाट केही पाइएन भने कृष्ण रातोपीरो हुन्छन् र हाम्रा सुतेका बालकलाई चुट्की मारेर रुवाइदिन्छन्।

भगवान्को आगमन भएपछि यदि तिमी सुतेका फेला पऱ्यौ भने रुवाइदिन्छन्। कुनै न कुनै रूपमा आइपुग्छन् र सत्कार नपाएमा रुवाइदिन्छन्।

ईश्वरले आफ्नो आगमनको समयमा सुतेको फेला पारे बिउँझाइदिन्छन्।

ईश्वर कुन रूपमा आउने हुन् यो कसैले भन्न सक्दैन। उनी तर बालक, वृद्ध, ब्राह्मण, शूद्र कुनै रूपमा आउन सक्छन्। त्यसकारण घरमा आएजति सबैको सम्मान हुनुपर्छ।

वेदान्तका अनुसार ईश्वर अरूप र वैष्णवानुसार अनन्त रूप छन्।

ईश्वरको कुनै एक रूप चाहिँ हुँदैन। उनी अनेक रूप धारण गर्दै रहन्छन्। *'अनेक रूपरूपाय विष्णवे प्रभविष्णवे'।* उनी आकाररहित पनि छन् र अनेक आकारवाला पनि। उनी अरूप पनि छन् र अनेक रूपधारी पनि। उनी कुनै पनि स्वरूपमा आउँछन्। जीव प्रमादवश सुतिरहन्छ, त्यसकारण उसलाई थाहा हुन पाउँदैन।

यशोदा—'सखी, किन तिमी सबै आफ्ना केटाकेटीलाई माइत पुऱ्याइदिन्नौ ?'

एउटी गोपी—मैले नौनी र केटा केटीलाई माइत छोड़ेर आएकी थिएँ। कृष्णले मेरो घरमा केही नभेट्टाएपछि भने—'जुन घरमा मेरा निमित्त केही हुँदैन त्यो श्मशानजस्तो हुन्छ।'

जुन घरमा भगवान्का निमित्त कोही पनि नहोस् त्यो घर उजाड़िएर श्मशान हुन्छ।

मौज-मजामा सम्पत्तिको अपव्यय गर्ने राक्षसै हो।

जब कृष्णले घरमा केही भेट्टाएनन्, उनले साथीहरूलाई बोलाएर भने—'यो घर श्मशान जस्तै छ त्यसकारण चूल्हो, आँगन, कोठा सबै बिगारिदेओ।' यसरी मेरो सारा घर फोहर गरिदिएका थिए।

माता, कृष्ण यस्ता छन्।

यशोदाले भनिन्—'तिमी भनिरहेकी छौ कृष्ण शरारती छ, तर उ मैले केही गरेको छैन भनी मसँग भनिरहेछ। तिमीले उसलाई प्रमाणसहित समातेर ल्यायौ भने म मान्नेछु ऊ चोरी गर्छ, म उसलाई सजाय दिनेछु।'

प्रभावती नाउँकी एउटी गोपीले भनी—'यसमा कुन ठूलो कुरा छ र? मै उसलाई सबूत सहित समातेर ल्याउने छु।' त्यो गोपिनी अलि अभिमानी थिई।

कृष्णले निश्चय गरे अब आज प्रभावतीको घर हामी जाने। प्रभावती लुकेर बसेकी थिई। बिस्तार-बिस्तार सबै बालक घरमा आइपुगेर 'कफल्लम् कफल्लम्' भन्न थाले। कृष्णले ताकबाट नौनी ओन्हालेर आफूले खाए, साथीहरूलाई ख्वाए र वानरहरूलाई पनि दिए।

उपकार थोरै पनि किन नहोस् भगवान् कहिले बिर्सनुहुन्न। रामावतार वानरहरूले वृक्षको पात खाएर मेरो सेवा गरेका थिए। त्यस अवतारमा म तपस्वी थिएँ। त्यसकारण यिनलाई केही दिन पाएको थिइनँ। यस अवतारमा उनीहरूलाई दही-नौनी खुवाउने छु।

मानिस तर कतिपटक वानरजति पनि संयम राख्न सक्दैन। वानर र राम सीताका सेवक हुन्। त्यसकारण उनीहरू रामफल र सीताफलको आहार कहिले गर्दैनन्। यदि मानवले वानरजति पनि मर्यादाको पालन गर्न पाएन भने तब ऊ त्यसभन्दा पनि गएगुज्रेको हुने भयो।

सबैले पेटभरि नौनी खाए, यत्तिकैमा बिस्तारै प्रभावती बाहिर निस्की। मित्रहरूले देखेपछि भन्न थाले—'ए कृष्ण, भाग, ऊ आइपुगिछ।' तर कृष्णले भने—'आउन देऊ। त्यसले के गरिहाल्ली?'

प्रभावतीले कृष्णलाई समाती। उनी ऊसँग भन्नलागे, 'अरे, छोड़िदेऊ मलाई, होइन भने मेरी आमाले तिमीलाई पिट्नुहुन्छ। मलाई छोड़िनौ भने तिम्रो आफ्नो ससुराको कसम, आफ्नो पतिको कसम छ।'

प्रभावती—'आज म किन छोड्थें तँलाई? सबूतसहित समातेकी छु। म तँलाई यशोदाको नजिक लैजाने छु।'

कृष्ण—'छोड़िदेऊ मलाई।'

प्रभावतीको छोरो पनि यस नौनी चोर-मण्डलीको सदस्य थियो। उसले सोचेको थियो—'यशोदाले कृष्णलाई पिट्नेछिन्।' ऊ आफ्नी आमा प्रभावतीलाई भन्न लाग्यो—'आमा, कृष्णले चोरी गरेको छैन। मैले सबैलाई बोलाएको थिएँ। मलाई जे सजा दिन चाहनुहुन्छ दिनुहोस् तर कृष्णलाई छोड़िदिनोस्। अब म चार महीनासम्म नौनी खाने छैन।'

प्रभावतीले सोची—'यशोदा हाम्रो कुरा कहिले पनि पत्याउँदिनन् त्यसकारण म उसलाई साँचो कुरा देखाउन चाहन्छु। यशोदाले कृष्णलाई हप्काइन् भने पनि केही कुरा भएन, म पिट्न दिनेछु र कृष्ण मेरो पनि पुत्र हो।'

अभिमानका साथ-साथ दुर्गुण पनि आइहाल्छ।

प्रभावतीले संझिराखेकी थिई ऊ सिवाय कृष्णलाई कसैले समात्न सक्दैन। त्यसकारण कृष्णलाई उसले छोड़िन। सबै बालक रुन लागे। कृष्णले भने—'किन डराउँछौ ? म बड़ो राम्रो खेल गर्नेछु।'

साधना गर्नाले प्रभु हातमा आउन चाहिँ आउनुहुन्छ तर साधनामा यदि श्रद्धा उठ्यो भने प्रभु पनि जानुहुनेछ।

प्रभावती कृष्णलाई समातेर गइरहेकी थिई तब बाटामा एक वृद्ध आइरहेको थियो। उसलाई देखेर प्रभावतीले घुम्टो तानी। कृष्णले प्रभावतीलाई भने यो हात दुख्यो। अर्को हात समातिदिए बेस हुने थियो। प्रभावतीले हात फेर्न लाग्दा कृष्णले ईशाराबाट नजिकको साथीलाई बोलाई उसको हात समात्न लगाए।

यस प्रकार कृष्ण मुक्त भए। उनले भाग्दै आएर आमालाई भने—माता, एउटी गोपी मलाई पिट्न आइरहिछ। मैले उसको केही बिगारिदिएको छैन। माताले उसलाई कोठाभित्र गएर बस भनिन्।

उता प्रभावती बड़ो उमंगले चोरलाई समाती आइरहेकी थिई।

उसले बाहिरैबाट चिच्याउँदै भनी, 'ए यशोदाजी, सुन्नुहुन्छ। हेर्नुहोस् तपाईंको कृष्णलाई आज सबूद प्रमाणसहित समातेर ल्याएकी छु। यस चोरलाई सजाय दिनैपर्छ।'

यशोदाले बाहिर निस्किएर भनिन्—'ऐ पागल भइस् क्या हो तँ ? मेरो छोरा घरमै छ। यो कसलाई समातेर ल्याइस् तैंले।'

ईश्वरलाई खोज्नु छ भने आफूभित्रै खोज। उसलाई जसले बाहिर खोज्छ त्यो दुःखी हुन्छ। इन्द्रियरूपी गोपी भन्दछे 'ईश्वर बाहिर छ परमानन्द बाहिर छैन। यशोदा-निष्काम बुद्धि ईश्वरानन्दलाई घररूपी हृदयमा हेरिरहन्छिन्। इन्द्रियरूपी ईश्वर-आनन्दलाई बाहिर खोज्दछन् त्यसकारण पाउन सक्तैनन्। निष्काम बुद्धि ईश्वरलाई हृदयभित्रै खोज्दछ त्यसकारण छिट्टैनै पाइन्छ।'

यो जीव आनन्दलाई सांसारिक विषयहरूमा खोजिरहन्छ त्यसको हालत प्रभावतीको जस्तो हुन्छ। सबै उसको खिल्ली उड़ाउँछन्।

यशोदा—'ए सखी! हेर् सही, तेरो हातमा को आएको छ।'

प्रभावतीले हेर्दा उसको हातमा उसैको पुत्र थियो। ऊ असमञ्जसमा परी। मैले कृष्णलाई समातेकी थिएँ। बाटामै पक्कै केही गड़बड़ी भयो होला।

प्रभावती अभिमानी छ। घमण्ड, अहङ्कारवाला बुद्धि भनेकै प्रभावती हो। यस्तो बुद्धिले ईश्वरलाई कहिल्यै पाउन सकिँदैन। निष्काम बुद्धिले मात्र ईश्वरलाई पाउन सकिन्छ।

ईश्वरलाई सकाम होइन, निष्काम बुद्धिले खोजेमा अवश्य पाइन्छ। ईश्वरको प्राप्ति भएपछि प्राप्तिको अहङ्कार हुन्छ र ईश्वर हातबाट गुम्दछन्। परमात्मा भेटिन सक्नुहुन्छ तर आउनासाथै अदृश्य पनि हुनुहुन्छ।

परमात्मा भेटिनासाथ साधकका मनमा घमण्ड उत्पन्न हुन्छ। यस्तो घमण्ड हुनासाथ साधना उपेक्षित हुन थाल्दछ, साधनाको उपेक्षाको कारण भगवान् अप्रसन्न भएर फर्किनु हुन्छ। साधना गर तर साधनाको अभिमान कहिल्यै पनि नगर। निष्काम बुद्धिमा गर्व उत्पन्न हुनासाथ भगवान् कुलेलम ठोक्नु हुन्छ।

गोपिनीहरूले यशोदालाई भने—'आमा, गणपितको पूजा गरेर पुकारा गर्नोस्, उनी बुद्धि-सिद्धिका स्वामी हुन्। त्यसकारण कृष्णको बुद्धि सुधारिदिनु हुन्छ।'

यशोदाले गोपिनीहरूको कुरा मानिन्।

कृष्ण गणपतिको महिमा बढ़ाउन चाहन्थे। त्ससकारण आफ्ना मित्रमण्डलीलाई भने— हामी केही दिनका निमित्त बड़ो शान्त बनौं, सारा प्रवृत्ति बन्द गरिदिऊँ।

कृष्ण घरमा बसिरहन्थे, यशोदाले सोचिन्' गणपतिले मेरो कृष्णको बुद्धिलाई ठीक गरिदिएका छन्।'

एकपटक गोपालहरूले यशोदालाई कुरा लाए—कृष्णले माटो खाएको छ।

कृष्ण—आमा यिनीहरू सबै झूठो बोल्छन्। मैले माटो खाएकै छैन।

**नाहं भक्षितवानम्ब सर्वे मिथ्याभिशंसिनः।**

कृष्णले तर माटो होइन व्रजरज खाएको छ। मैले माटो होइन ब्रजरज खाएको छु।

तुलसीजी साधारण वृक्ष-वनस्पति होइनन्, गंगाजी सामान्य नदी होइनन्, ब्रजरज साधारण माटो होइन।

श्री वल्लभाचार्यले भन्नुभयो—ज्ञानमार्ग अनुसार कृष्ण केही खानुहुन्न। वैष्णव मार्गका अनुसार भगवान्ले ब्रजरज खाएको छ। भक्त मान्दछन् भगवान् भोजन पनि गर्नुहुन्छ।

यशोदाले कृष्णलाई भनिन्—'आफ्नो मुख खोल्। साँच्चिनै तैले माटो खाएको हो वा होइन?'

कृष्णले मुख खोले र यशोदाले छोराको मुख हेरिन् तब उसमा सारा ब्रह्माण्ड अटाएको रहेछ।

मुखदर्शनको बहानाले कृष्णले आमालाई आफ्नो विश्वरूप देखाइदिए।

शुकदेवजी वर्णन गर्नुहुन्छ।

ईश्वरको स्वरूप ज्ञानलीलामा बाधक छ।

**वैष्णवीं व्यतनोन्मायां पुत्रस्नेहमयिं विभः।**

पुत्रस्नेहा वैष्णवी माताको हृदयमा कृष्णले योगमायाको सञ्चार गरेर यशोदालाई कृष्णको वास्तविक स्वरूप भुल्याइदिए र फेरि उनलाई आफ्नो पुत्र मात्र मान्ने पारिदिए।

पूतनाले धेरै बालकहरूको वध गरेकी थिई। तिनीहरू सबै पूतनाको स्तनद्वारा प्रभुको पेटमा पुगे।

अविद्याको संसर्गमा आएर जीवहरूको उद्धार सच्चा सन्तहरूको चरणरज विना हुन सक्दैन।

गोकुलमा धेरै ऋषि-मुनि गाईको अवतार लिएर आएका छन्। उनका चरणको रज मेरो पेटमा गएपछि ती सबै जीव मुक्त हुनेछन् जो मेरा पेटमा छन्। अर्थात् आफ्नो पेटमा बसेका ती जीवहरूको उद्धार गर्नका निमित्त मात्र कृष्णले माटो ब्रज-रज खाएका थिए।

प्रभुको हृदयमा बस्नु अथवा परमात्मालाई आफ्ना हृदयमा राख्नु यो हो कृष्णको लीला, निरोधलीला। आत्मा त्यसो तर निराकार स्वतन्त्र-बन्धनमुक्त छ तर मनको कारणले त्यो आबद्ध हुन जान्छ।

भगवान् तर मृत्युको अगावै मुक्ति दिनुहुन्छ। प्रभुप्रेममा हृदय द्रवीभूत हुनु भनेकै मुक्ति हो। प्रभुप्रेममा संसारलाई बिर्सनु मुक्ति हो। मन मऱ्यो भने मुक्ति पाइहालियो। मनको मृत्यु हुनाले निरोध हुन्छ र निरोध भएपछि मुक्ति पाइन्छ।

मृत्युपछि मात्र होइन मृत्युको पहिले पनि मुक्ति पाउन सकिन्छ।

जसले मृत्यु हुनुभन्दा पहिले मुक्ति पाउन सक्दैन त्यसलाई मृत्युपछि पनि मुक्ति पाउन बड़ो कठिन छ। शरीर र इन्द्रियहरूको उपस्थितिमा जसलाई भजनानन्द प्राप्त हुन्छ त्यसलाई शरीर त्यागेपछि पनि परमानन्दको अनुभव हुन्छ।

भागवत, मृत्युका पछि मुक्ति दिलाउने शास्त्र होइन। त्यसले बाँच्दा-बाँच्दै मुक्ति दिलाउँछ। मृत्युका पछि मुक्ति मिलोस् वा नमिलोस्, यो कसले थाहा पाउन सक्छ। यसै कारणले महात्मा जीवनमुक्तिको गुण गाउँछन्।

त्यसो तर देह र इन्द्रियसँग सम्बन्ध छ। त्यसकारण उनको उपस्थितिमै हामीले मुक्ति पाउनुपर्छ।

मुक्तिका दुइ प्रकार छन्—विदेहमुक्ति र कैवल्यमुक्ति।

पानीमा भएर पनि कमल पानीबाट अलिप्त हुन्छ। ज्ञानी पुरुष पनि संसारमा बस्छन् तर अलिप्तभावले।

जगत् नदेखियोस् भनी ज्ञानी पुरुष आँखा बन्द गरेर बस्छन् तर जगत् यस्तो बदमास छ जो आँखा बन्द गरेपछि मात्र देखिन्छ। बाह्य संसारभन्दा आन्तरिक संसार ज्यादा बाधक छ। मनभित्रबाट उसलाई हटाइदिएपछि मात्र भक्ति ठीक तरहसँग गर्न सकिन्छ।

नाउलाई बस्नु तर पानीमै पर्छ तर यदि पानी नाउमा चढ्यो भने चाहिँ नाउ डुब्दछ।

बाह्यसंसारलाई मनमा आउन नदिनलाई ज्ञानीजन बड़ो सतर्क हुन्छन्।

त्यसो तर संसार स्वयं बाधक होइन तर उसको चिन्तन, उसको आसक्ति बड़ो बाधक छ। संसार सुखदाता छ, यस्तो कल्पना पनि भक्तिमार्गमा बाधकरूप छ।

ज्ञानी पुरुष शरीरलाई एक आवश्यक रूपमा स्वीकार गर्छन् तर यो पनि स्पष्टतः जान्दछन् सांसारिक सुख भ्रामक छ। त्यो केवल आभासित सुख हो।

दृश्य पदार्थ मध्येबाट हटेर द्रष्टामा जब दृष्टि स्थिर हुन्छ, तब आनन्द पाइन्छ। दृश्य दुःखरूप मात्र हो। द्रष्टामात्र आनन्द रूप हो। दृष्टिलाई दृश्यमध्येबाट हटाएर द्रष्टामा स्थिर गऱ्यौं भने तब आनन्द पाउनेछौं।

जगत्‌मा बस्नु छ विषय पनि हुन्यै भयो। शरीर, मन र जगत्‌बाट भाग्यौ भने जान सक्दैन तर आसक्ति छोड्नु छ।

अज्ञानी जीव जगत्‌लाई भोगदृष्टिबाट र ज्ञानी भगवद्-दृष्टिबाट हेर्छ।

मायाको अर्थ हो लौकिक नामरूपमा आसक्ति।

भक्तिको अर्थ हो अलौकिक नामरूपमा आसक्ति।

भक्तिमार्गमा भावना र श्रद्धाका विना सिद्धि पाउन सकिन्न।

आत्मालाई के मुक्ति गरौला, त्यो मुक्त छ। प्रभुको हृदयमा निवास गर्नु निरोध हो। विरोध र वासना निरोधलाई प्रतिबन्धित गर्छन्। जबसम्म हृदयमा विरोध छ, तबसम्म निरोध हुन सक्दैन। जीवन मध्येबाट विरोध र वासना जानासाथै आफ्नो स्वयं निरोध हुन्छ।

मुक्ति कहिले पाइन्छ ? शरीर मर्नाले मुक्ति पाइने होइन, मन मर्नाले मुक्ति पाइन्छ। मनको निरोध मुक्ति हो।

दशम स्कन्धमा निरोधलीला छ। सबै सांसारिक विषयहरूमध्येबाट मन हटेर जब ईश्वरसँग मिल्न जान्छ तब मुक्ति आइहाल्छ।

परमात्मा आनन्दस्वरूप हो। मन अर्धचेतन छ। मन सांसारिक विषयहरूका साथ एक हुन सक्दैन किनभने संसार जड़ छ र मन अर्धचेतन छ। सजातीय वस्तु मात्र एक हुन पाउँछ। मन ईश्वरको सिवाय अन्य कुनै पनि वस्तुसँग एक हुन सक्दैन। अभिन्न हुन पाउँदैन।

मनुष्य जतिसुकै कामी किन नहोस् कामसुखको उपभोगपछि उसको मन नारी देहबाट टाढ़ा हुन जान्छ। कामैषणा दोस्रो पटक जाग्न सक्छ तर तत्काल नारीदेहबाट हटिजान्छ।

अब त्यो उदासीनता यदि सदाका निमित्त मनमा जम्न सक्यो भने सफल भइहालियो, वैराग्य क्षणिक होइन, स्थायी हुनुपर्छ।

विषय-भोगका पछि छिट्टै उत्पन्न हुनेवाला वैराग्य, वैराग्य होइन, उसको आभास मात्र हो।

कतिपटक वैराग्य उत्पन्न हुन्छ तर मायाले उसलाई टिक्न दिन्न।

मन संसारका ज़ड़पदार्थहरूका साथ होइन, ईश्वरका साथ मात्र एकाकार हुन सक्छ।

कृष्णलीला मनको निरोध ( हृदयमा प्रभुको निवास ) गर्नका निमित्त हो।

पूर्वजन्मको शरीर मरिसकेको छ तर मनले नयाँ शरीर लिएर आएको छ। जीवात्मा मनको साथमै जान्छ। उसले शरीरको अपेक्षा मनको चिन्ता धेरै गर्छ।

मृत्युपछि मन साथमै आउँछ। पति-पत्नी, माता-पिता, पुत्र-परिवार तिम्रो मृत्युपछि यहीं रहन्छन् तर मन सँगै जानेछ। अन्य सबैका तर्फबाट आसक्ति कम गरेर मनको चिन्ता ज्यादा गर।

यदि कुनै सांसारिक वस्तु बिग्रियो भने अथवा हरायो भने अर्को पाइन्छ तर मन बिग्रियो भने अर्को मन कुनै पनि बजारमा पाइँदैन। जीवात्माले तनलाई छोड्छ तर मनलाई सँगै लैजान्छ। त्यसकारण मनलाई सँधै जोगाएर राख।

गीतामा भनेको छ—

मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति।
अधिष्ठाय मनश्चायं विषयानुपसेवते॥

( गीता १५-७-९ )

जीवहरूमा बसेको मेरो अंश त्रिगुणमयी मायामा स्थिर भएर मनसहित पाँचै इन्द्रियहरूलाई आकर्षण गर्नु हो। मनको आश्रय गरेरै जीवात्मा यी विषयहरूको उपभोग गर्छ। त्यसकारण मनुष्यको मरणपछि मन पनि साथैमा रहन्छ।

शरीर मर्दछ तर मन मर्दैन। मन त्यसबेला मर्छ जब त्यो मनमोहनका साथ एकरूप हुन जान्छ अर्थात् मुक्ति पाएपछि मन मर्छ।

विषयहरूका पछि दौड़िएको मन मर्दैन।

मनले यदि ईश्वरको चिन्तन, ध्यान, मनन गर्‍यो भने उसलाई पाउन पनि सकिन्छ।

कसैको गुरु हुने इच्छा कहिल्यै नगर्नु। पहिले आफ्नै मनको गुरु बन। रामदास स्वामीले भन्नुभएको छ—

मन सज्जना भक्तिपंथेची जावे,
तरी श्रीहरि पाविजेतो स्वभावे।

जनो निंद्यते कर्म सोडोनी द्यावे,
जनो वंद्य ते सर्व भावे करावे॥

हे मन ! जुन भक्तिमार्गबाट सज्जनहरू जान्छन् त्यसैको तैले अनुसरण गर। अनिमात्र सजिलैसँग श्रीहरि भेटिनुहुनेछ। संसारका निन्दनीय कर्महरूको त्याग गरियोस्। संसारको वन्दनीय काममा एकाग्र होइयोस्।

ए मन, तँ पाप किन गर्छस्। तँ सज्जनजस्तो भएर पनि दुर्जनजस्तो काम किन गर्छस्। यदि कसैले यो लड्डुमा विष छ भनिदियो भने तँ खान्छस् ? यस्तै किसिमले मनलाई पनि संझाऊ, यी सारा विषय विषैला छन्, तिनको कहिल्यै उपभोग नगर्नू।

संसारका विषयहरूलाई सदा शङ्कालु दृष्टिले हेर स्वामी शङ्कराचार्यले भन्नुभएको छ—

भवसुखे दोषानुसंधीयताम्।

गुरु बन्नको अपेक्षा कसैको शिष्य बन्नु वेस हो यदि तिमी कुनै व्यक्तिको गुरु छौ तर त्यो शिष्यले केही पाप गऱ्यो भने त्यसको जिम्मेवार तिमी स्वयं मानिने छौ।

आत्मा मनको गुरु हो, स्वामी हो, मुक्ति हो। मनलाई मुक्ति पाइन्छ। आत्मा तर मुक्त छ, स्वतन्त्र छ।

निद्रा र समाधिमा अन्तर छ। तैपनि थोर बहुत साम्य छ। समाधिमा मन सबै विषयहरूबाट निवृत्त हुन्छ र चित्तवृत्तिको निरोध हुन्छ। निद्रामा पनि मनले संसारलाई बिर्सिदिन्छ। संसार बिर्सिएपछि मात्र निद्रा आउँछ। निद्राको समयमा पनि मन संसारका विषयहरूबाट टाढ़ा हुन्छ तर निद्रावस्थामा मन पूर्णतः निर्विषय हुन पाउँदैन। निद्राको सुख तामसी हो। त्यसमा अहंभाव शेष रहन्छ। अहंभावको लय हुँदैन।

समाधिको अवस्थामा मन पूर्णतः निर्विषय हुन्छ, अहंभाव पनि हराउँछ।

श्रीमद् शङ्कराचार्य शिवमानसपूजास्तोत्रमा भन्नुहुन्छ—

आत्मात्वं गिरिजा मतिः सहचराः प्राणाः शरीरं गृहं।
पूजा ते विषयोपभोग रचना निद्रा समाधि स्थितिः॥
सञ्चारः पदयोः प्रदक्षिणविधिः स्तोत्राणि सर्वागिरो।
यद्यत्कर्म करोमि तत्तदखिलं शंभो तवाराधनम्॥

हे शंभु, तपाईं मेरो आत्मा हुनुहुन्छ। बुद्धि पार्वती हुन्। सबै प्राण तपाईंका गुण हुन्। शरीर तपाईंको मन्दिर हो। सबै विषय योगहरूको रचना तपाईंको पूजा हो। निद्रा समाधि हो, मेरो हलन-चलन तपाईंको परिक्रमा हो। मेरा सबै शब्द तपाईंका स्तोत्र हुन्। यस भाँतिले मेरा सम्पूर्ण क्रियाहरू तपाईंका आराधना रूप बनुन्।

योगीजन आत्मस्वरूपमा मनको लय गर्दछन्। मनलाई यदि कुनै विषय दिएनौ भने तब त्यो आत्मस्वरूपमा गएर मिल्नेछ र त्यस्तो लय भनेको मुक्ति हो।

विषयहरूको चिन्तनले मन बाँच्छ र तिनको त्यागले त्यो मर्दछ। सांसारिक विषयहरूबाट हटेपछि मन शान्त हुन्छ। दीयोमा तेल नभएपछि त्यो निभ्दछ। सोही प्रकार मनमध्येबाट सांसारिक विषयहरूको निष्काशन भएपछि त्यो शान्त हुन्छ। मनलाई सधैं कुनै आधारको आवश्यकता पर्छ। त्यसकारण उसलाई प्रतिकूल विषयहरूबाट छुटाएर अनुकूल विषयहरूका तर्फ लगाइदिनुपर्छ।

निद्राको समयमा पनि समाधिजस्तै आनन्द पाइन्छ, तर त्यो आनन्द तामस हो। निद्रामा सबै कुरा मेटिएजस्तो लाग्छ तर अहङ्कार बनिरहन्छ। समाधिको अवस्थामा भने नाम, रूप र अहंभाव निःशेष हुन्छन्। समाधिका दुइ प्रकार छन्—जड़ र चेतन।

योगी मनलाई बलपूर्वक वश गरेर प्राणलाई ब्रह्मरन्ध्रमा स्थापित गर्छ। यो भयो जड़ समाधि, तर बलजफ्तीको साटो मनलाई प्रेमद्वारा संझाई-बुझाईकन विषयहरूबाट हटाइलिनु ज्यादा श्रेयस्कर हुन्छ र यही हो चेतन समाधि।

विश्वामित्रले साठी हजार वर्षसम्म तप गरेर पनि उनी मेनकाको सौन्दर्यलाई देखेर लोलुप भए। यसको कारण यही थियो उनको समाधि जड़ थियो।

समाधि तर सजिलो हुनुपर्छ। *साधो सहज समाधि भलो।*

साहजिक समाधि श्रीकृष्णलीलामै छ। कृष्णकथा र बाँसुरीको श्रवण गर्दा चाहे आँखाहरू खुलेकै किन नहुन्, समाधि लागिहाल्छ। गोपिनीहरूले आँखा बन्द गरेर नाक समातेर समाधि लाउने कोशिश कहिल्यै गरेनन्।

गोपिनीहरूको समाधि स्वाभाविक, साहजिक समाधि थियो।

यो भोगी शरीर योगाभ्यास गर्न सक्दैन। भोगी यदि योगी बन्ने प्रयत्न गर्छ भने रोगी बन्ने छ।

योगको सर्वप्रथम साधन हो ब्रह्मचर्य। ब्रह्मचर्यको पालनविना योगसिद्धिको प्राप्तिको प्रयत्न गर्ने मानिस अधोगतिको खाड़लमा पर्छ।

कृष्णकथा यस्तो छ जो त्यसले जगत्लाई अनायासै बिर्साइदिन्छ। जगत्मा बसेर, रहेर पनि उसलाई बिर्सिनु छ।

यो भागवत ग्रन्थ यस्तो दिव्य छ जो सात दिनमै मुक्ति दिलाउँछ। राजा परीक्षित्ले यस ग्रन्थको श्रवण गरेर सातै दिनहरूमा जगत्लाई बिर्सिएर कृष्णमा तन्मय भएका थिए।

बड़ा-बड़ा ज्ञानी महात्माहरूलाई पनि यो आशङ्का थियो राजा परीक्षित्ले मात्र सात दिनमा कसरी मुक्ति पाउलान्।

सातै दिनमा राजाको ज्ञान, भक्ति र वैराग्यको अभिवृद्धि गर्नका निमित्त मात्र यस कृष्णकथाको आयोजना गरेको थियो किनभने कृष्णकथामा तन्मयता भएमा मात्र उसलाई इच्छित मुक्ति पाउनुपर्ने थियो।

यस जगत्लाई बिर्सनका निमित्त योगी आँखा चिम्लिएर प्राणायाम गर्छन्, तर यस जगत्लाई भुल्न सजिलो छैन। योगीहरूका निम्ति जगत्लाई बिर्सिन सजिलो छैन तर गोपीहरूका निमित्त जगत्लाई संझन सजिलो छैन।

कृष्णकथामा आँखा चिम्लनु, नाक समात्नु या प्राणायाम गर्ने आवश्यकता छैन। यसले जगत्लाई अनायासै बिर्सिन सकिन्छ। मनको निरोध तब हुन्छ जब कसैको उसद्वारा विरोध हुँदैन। मनमा विरोध र वासना नराख। विरोध-वासना निरोधमा बाधक छ। जगत्को कुनै पनि जीवका निमित्त विरोध नराख। जगत्का भोग्य पदार्थहरूको वासना नगर। निरोध भएपछि अनायासै मुक्ति पाइन्छ।

श्रीकृष्णलीलाद्वारा अनायासै मनको निरोध हुन्छ। जगत्को विस्मृति र भगवान्को अखण्ड स्मृति भनेकै निरोध हो।

पूतना-वासना आँखाहरूमा आएर बस्दछे। आँखाहरूलाई कृष्णको श्याम-माधुरीमा स्थिर गर र कानलाई कृष्णकथासँग जोड़िदेऊ।

यदि यो संसार सुन्दर छ भने यस सुन्दर संसारका निर्माता नजाने कति सुन्दर होलान्। के यस्तो विचार कहिल्यै तिम्रो मनमा आएको पनि छ ?

मनुष्य सौन्दर्य दर्शनका निमित्त काश्मीर जस्तो टाढ़ा-टाढ़ाका स्थानहरूमा घुम्दै रहन्छ। ए, त्यहाँ किन जान्छौ ? साँच्चिकैको सौन्दर्य अन्तरमा छ, ईश्वरमा छ। त्यसलाई हेर्ने प्रयास गर।

परमात्माको कुनै पनि स्वरूपसँग तन्मय भएर मुक्ति मिल्न सक्छ। भागवतको भनाइमा यस्तो छँदै छैन श्रीकृष्णमात्रको स्वरूपमा लीन भइजाऊ। तिमी जुन रूपमा तन्मय भइजाऊ, ईश्वरको जुन रूपमा तिमीलाई श्रद्धा हुन्छ उसैलाई अपनाऊ। श्री परमात्माको कुनै पनि रूप मुक्तिदाता हो।

श्रीशङ्कराचार्य पनि भन्नुहुन्छ—'भगवान्को कुनै पनि रूपमा श्रद्धापूर्वक तन्मय भइजाऊ। उहाँको अनन्यरूपले भक्ति गर। जुन कुनै रूपमा सम्पूर्ण श्रद्धा हुन्छ उसैको अनन्य भक्ति गर र अन्य रूपलाई उसैको अंश मानेर वन्दना गर। यस प्रकार अन्य रूपहरूमा अंशात्मक प्रेम राख्नाले भक्तिमा राग-द्वेष आउने छैन त्यही अनन्य भक्ति हुनेछ।'

नारी आफ्नो पतिका प्रति अनन्य प्रेम राख्छे। तर पनि आफ्ना अन्य सबै कुटुम्बीहरूको पनि सेवा प्रेमसाथ गर्छे अर्थात् स्त्रीको पति-प्रेम अनन्य छ र आफ्ना अनन्य नातेदारहरूप्रति अंशात्मक 'प्रेम' गर्छे। यस्तो अंशात्मक प्रेमद्वारा पति प्रेममा कुनै कमी भने हुँदैन।

हामीले आफूले रोजेका प्रभुरूपसँग त्यो नारीको जस्तै अनन्य रूपसाथ भक्ति गर्नुछ र साथ-साथै ईश्वरका अन्य रूपको पनि आदर गर्नु छ।

श्रीकृष्ण अनायास मुक्तिदाता हुनुहुन्छ। मुक्ति आत्मालाई होइन मनलाई पाइन्छ। आत्मा नित्यमुक्त छ। बन्धनमुक्त मनलाई गर्नु छ। मनलाई मुक्ति मिलेपछि आत्माले मुक्त भएजस्तो अनुभव गर्छ।

आत्मामाथि जब कुनै बन्धन छैन भने फेरि मुक्तिको प्रश्न कसरी उत्पन्न हुनसक्छ ? विषयहरूको बारंबार चिन्तन गर्दै रहनाका कारणले मन उसमा फँस्दछ र बाँधिन्छ।

आत्मा परमात्माकै अँश हो त्यसकारण उनको बन्धन एक कल्पनामात्रै हो।

कोही आत्मालाई परमात्माको अंश मान्दछन् भने कोही यी दुवैलाई एक मान्दछन्। कति मानिस आत्मा-परमात्मामा अंश-अंशीको भाव मान्दछन्।

जीव ईश्वरको अंश हो। भगवान्ले गीतमा भनेको छ—

**ममैवांशौ जीव लोके।**

यस सूत्रको व्याख्या गर्दै श्रीशङ्कराचार्यले भनेका छन्—'अंश इव जीव।' आत्मा ईश्वरको अंशजस्तो छ। अंश होइन। जीव ईश्वरको अंश हुन सक्दैन। ईश्वरको टुक्रा हुन सक्दैन। अँ, परमात्मा र आत्मा एक हुन्। शङ्कर स्वामीले भनेको छ—ईश्वरत्व मध्येबाट कुनै अंश विभक्त हुन सक्दैन।

गाग्रीभित्रको आकाश र बाहिरको व्यापक आकाश एकै हो। तैपनि घटको उपाधिकारणले अंश-अंशीभावको आभास हुन्छ। यस्तै तरहले परमात्मा र जीव एक हुँदा-हुँदै पनि अलग-अलग देखिन्छन्।

गुलाफको एउटा पत्र काटिदियौं भने त्यो फूल अखण्ड रहँदैन। फूलको स्वरूप भङ्ग हुनेछ तर ईश्वर नित्य हुनाको कारण तिनीहरू अखण्ड रहने छन्।

उपासनाको निम्ति अंशी र अंशको भेद गरिएको छ तर तत्त्वतः दुवै एकै हुन्। व्यवहारमा अंश-अंशी भिन्न हुन सक्छन्, तत्त्वतः होइन।

सागर विन्दुहरूबाट बन्दछ, सागरबाट विन्दु होइन।

जीव ईश्वररूप हो। रामानुजाचार्य आदि सन्तहरूका अनुसार परमात्मा अंशी हो र आत्मा अंश।

केही आचार्यका अनुसार जीव मुक्तावस्थामा अंशी हो, आबद्ध अवस्थामा अंश। अँश-अंशीको भेदलाई मान्दा-मान्दै पनि ती दुवैलाई एकै मान्दछन्।

वल्लभाचार्य आदि वैष्णव आचार्यहरूको भनाइ छ, जीव अंशजस्तो मात्र होइन, अंश हो र ईश्वर अंशी हो। ईश्वर सागर हो र जीव जलबिन्दु। सिन्धुको विशाल जलराशिमध्येबाट केही

विन्दु झिकेमा उसको स्वरूपमा कुनै भङ्ग हुँदैन। यस्तै प्रकार जीव अलग भएपछि ईश्वरको स्वरूपमा कुनै विकृति आउँदैन।

भक्त पहिले द्वैतको नाश गरेर अद्वैतको साधना गर्दछ र फेरि ईश्वरको सेवा गर्नका निमित्त काल्पनिक द्वैतभाव राख्छ।

यी दुवै सिद्धान्त साँचो भनिन्छ। साधकहरू यी सिद्धान्तहरूको खण्डनको चपेटमा नपर।

जे चाहन्छौ मनलाई मानेर अगाडि बढ्दै जाऊ।

यदि जीव ईश्वरको अंश हो भने मायाले उसलाई कसरी बाँध्न सक्छ।

माया न सत् हो न असत्।

जबसम्म हामी स्वप्नबाट जागेका हुँदैनौं तबसम्म त्यो सत्य हुन्छ। ब्यूँझेपछि सत्य असत्य हुन जान्छ। यस प्रकार जबसम्म हामी मायाबाट आवृत्त छौं तबसम्म माया सत्य हुन्छ र माया छिन्नभिन्न भएपछि त्यो असत्य सिद्ध हुन जान्छ।

माया जीवलाई अल्मल्याउन सक्छे, रुवाउन सक्छे। जीवात्मालाई कुनै पनि बन्धन हुँदैन। त्यो सधैं मुक्त छ। मनलाई मात्र बन्धन छ। मनको बन्धन, अज्ञानको कारण आत्मा मानिलिन्छ ऊ पनि बाँधिएको छ। अज्ञानको कारण जीव मानिलिन्छ उसलाई कसैले बाँधिदिएको छ।

ईश्वर अंश जीव अविनाशी।
चेतन अमल सहज सुखराशी॥
सो माया बस भयउ गुसाईं।
बँध्यो कीट मर्कट की नाईं॥

मानिस भन्दछन् मेरो मन बिग्रिएको छ, मेरो मन फँस्यो। कसैले यो भन्दैन म बिग्रिएको छु, मेरो आत्मा भ्रष्ट भएको छ।

आत्मा मनको द्रष्टा हो, साक्षी हो। मनको कुनै स्वतन्त्र सत्ता छैन, आत्माको आदेशानुसार उसलाई काम गर्नुपर्छ। मन नपुंसक हो। त्यो विषयहरूमा फँसेर सुखी र दुःखी हुन्छ, तर आत्मा आरोप आफूमाथि गर्छ।

तुलसीदासजीले एक दृष्टान्त दिएको छ—वानरहरूलाई समात्नका निमित्त शिकारीले एक जुक्ति गऱ्यो। वनमा जुन वृक्षमा वानर हुन्छ त्यसको तल्तिर एउटा सानो मुख भएको गाग्रीमा ऊ चना भरेर राखिदिन्थ्यो। वानर आफ्नो दुवै हातले चना झिक्ने प्रयत्न गर्थ्यो तर मुट्ठीमा चना भएको कारण हात गाग्रीबाट झिक्न सक्दैनथ्यो। कुनै भूतले गाग्रीभित्र लुकेर उसको हात समातिदिएको छ भनी उनीहरूले ठाने। वास्तवमा कुनै पनि भूतले हात समातेको थिएन। मुट्ठी खोलिदिएको भए हात बाहिर निस्किन सक्थ्यो।

संसार पनि त्यस्तै एउटा गाग्री हो। सांसारिक विषयहरू हुन् चना र मन हो वानर। मन
हन्तावश विषयहरूलाई आफ्नो मुट्ठीभित्र बन्द गरिरहेछ र पनि मान्दछ कसैले बाँधिदिएको छ।
वषयहरूलाई ममता-अहम्‌लाई मुट्ठीद्वारा मनले समातिरहेछ र छोड़ेको छैन।

जीवको बन्धन वानरको जस्तै हो। यी दुवैको बन्धन अज्ञानमूलक हो। अज्ञानको नाश
एपछि बन्धन रहँदैन। अज्ञानको उपाधि हट्नासाथ परमात्मा र आत्मा एक हुन्छन्। मायाले
ांसारिक गाग्रीमा विषयहरूको चना भरिदिएको छ। संझीबुझीकन यी विषयरूपी चनाहरूलाई
ोड़िदियौं भने मुक्ति छँदै छ।

आफ्नो छोराको घरमा पुत्रको जन्म भयो र पनि बूढ़ो घर छोड़ेर वृन्दावन या काशीवास गर्न
ाहँदैन। पहिले चाहिँ ऊ भन्थ्यो छोराको विवाह भएपछि घर छोड़िदिनेछु। अब ऊ भन्न लाग्यो
री सानो छोराले मलाई जान दिँदैन। काशी-वृन्दावनमा सेवा-शुश्रूषा पनि कसले गर्ला?

यता बूढ़ाका छोरा विचार गर्न लागे—यदि यी बूढ़ा वृन्दावन गए भने उनको पेंशनबाट हात
नु पर्नेछ। किनभने उनले वहीं मगाउनेछन्। वहाँ उनले सारा रकम साधु-सन्तहरूलाई लुटाइदिनेछन्।
दि यहाँ घरमै बसे भने रकम घरमै खर्च हुन्छ, बजारबाट साग-सब्जी पनि किनेर ल्याउनेछन्,
रा केटाकेटीको पनि यादविचार गरिदिनेछन् र यदि हामी राति चलचित्र हेर्न गयौं भने घर पनि
रिदिने छन्।

यस्ता तरहले बूढ़ो र उसका पुत्रले एक-अर्कालाई छोड्न सकेनन्। दुवैका आफ्ना-आफ्ना
ासना छन्, आफ्ना-आफ्ना स्वार्थ छन्।

मन यदि विषयहरूबाट हटेर ईश्वरको चिन्तन गर्न थाल्यो भने मुक्ति पाइन्छ। देहाध्यास
ट्यो र वृत्ति ब्रह्माकार भयो भने मुक्ति भइगयो।

विषयहरूको मात्र चिन्तन गर्ने मन अशुद्ध हुन्छ। विषयहरूको चिन्तन त्याग्नेवाला मन शुद्ध
न्छ। अनादिकालदेखि विषयहरूको चिन्तन गर्दै रहने मनलाई बानी जस्तो भैसकेको छ। यदि
ही मन श्रीकृष्णकथाको चिन्तन, श्रवण, मनन गर्न लागे तब विषयहरूको विचार गर्ने बानी
ट्न सक्छ।

इन्द्रियहरूका स्वामी हुन् श्रीकृष्ण। आँखाहरूको सम्बन्ध श्रीकृष्णसँग जोड़।

सर्वत्र र सबैमा ईश्वरको दर्शन गर। इन्द्रियरूपी गोपीका आत्माका साथ मिलन गर्नु छ।
ंच इन्द्रियहरूका विषय पाँच छन्। यदि इन्द्रियहरू आफ्ना-आफ्ना विषयहरूबाट अलग भए
ने आत्माका साथ मिलन हुनेछ। इन्द्रिय गोपीलाई प्रभुका साथ विवाह गरिदेऊ।

गोकुललीलाको तात्पर्य हो गोपिनीहरूको ज्यूँदै मुक्ति। श्रीकृष्णले गोपिनीहरूलाई मुक्त
र्नका निमित्त गोकुललीला रचेको थियो। उहाँले गोपिनीहरूलाई ज्यूँदै मुक्त गरिदिन चाहनुहुन्थ्यो।
पिनीहरू चाहे आफ्ना घरमा बसुन्, उनको मन विचलित नहोस्, यस्तो व्यवस्था उहाँले
रेदिनुभयो।

कुनै प्रकारको साधना, धारणा नगरी गोपिनीहरूको मन श्रीकृष्णमा निरोध भयो। गेपिनीहरूले भक्तिमार्गको आचरण गरेका थिए।

महाप्रभु भन्नुहुन्छ, 'मलाई नयाँ केही भन्नु छैन। म चाहिँ गोपिनीहरूले देखाएकै मार्ग देखाउँछु।'

लौकिक रूपका प्रति जति आसक्ति छ त्यति यदि भगवान्‌मा भए संसारको बन्धन छुट्ने छ।

श्रीकृष्णको सौन्दर्य यस्तो छ जो उहाँलाई देखेपछि जगत्‌को सौन्दर्य सुहाउँदैन। श्रीकृष्ण अति सुन्दर हुनुहुन्छ। जगत् सुन्दर छ, यस्तो मान्यो भने कामदृष्टि उत्पन्न हुन्छ।

श्रीकृष्णकथामा तन्मयता अनायासै हुन जान्छ। परमात्माले हाम्रा सबै इन्द्रियहरूलाई विषयहरूमाझबाट हटाएर आफ्नातर्फ आकर्षित गर्नुहुन्छ। जसको मन मधु छ, उसैको घरको नौनी कृष्णले ग्रहण गर्नुहुन्छ।

भगवानसँग सधैं प्रार्थना गरिराख—'नाथ ! मेरो मनलाई जड़ पदार्थहरूमाझबाट हटाएर आफ्ना तर्फ आकर्षित गरिदिनुहोस्।'

मन ईश्वरमा स्थिर भएपछि मात्र मनलाई शान्ति मिल्नेछ।

वेदान्ती मनलाई अर्धचेतन र अर्धजड़ मान्दछन्। सङ्कल्प गर्नाले मन हजारौं कोस टाढ़ा पुग्ने छ। मनको लय जहिले पनि हुनेछ, त्यो जड़ पदार्थमा नभएर ईश्वरमा मात्र लय हुनेछ।

वस्तु सजातीय वस्तुमा मात्रै मिल्न सक्छ। दूधमा मिश्री मात्र मिल्दछ ढुङ्गा होइन।

संसारका सबै पदार्थ नाशवान् छन्। जो क्षण-क्षणमा सरिरहेछ, क्षीण हुँदै गइरहेछ त्यही संसार हो। यो मन ईश्वरमा मात्र गएर विलीन हुन सक्छ, अरू कुनै पदार्थमा होइन।

हे नाथ ! मेरो मन सदा तपाईंमा लागिरहोस्।

ईश्वरबाट मन टाढ़ा हुनु बन्धन हो, ईश्वरका चरणहरूमा मन रहनु मुक्ति हो। मन ईश्वरबाट टाढ़ा भयो भने बिग्रन्छ। भगवान्‌का लीलाको तात्पर्य यही हो।

गोपिनीहरू आफ्ना मनमा श्रीकृष्णलाई सदा बसाएर राखी घर-गृहस्थी चलाई राख्थे। मनलाई मुक्ति दिनु छ, उसैको निरोध गर्नुछ।

निवृत्तिका समयमा यदि मनमा कुनै पनि वस्तुको विचार आयो भने सम्झ मन त्यसैमा जेलिएको छ। गोपिनीहरू निवृत्तिका साथ श्रीकृष्ण लीलाको श्रवण, कीर्तन र ध्यान गर्थे। सङ्कटका समयमा जीवले विश्वासघात गर्छ, तर भगवान् चाहिँ दौड़ँदै आउनुहुन्छ।

सबै विषयहरू छोड़ेर मन ईश्वरमा लगाउनु मुक्ति हो। मनलाई अनायास प्रभुस्मरणका निमित्त लगाउनु यो निरोधलीला हो।

दशम स्कन्धको कृष्णलीलाले जगत्‌को विस्मरण र प्रभुको अखण्ड स्मरण गराउँछ।

गोपिनीहरूले सारा जगत्लाई बिर्सिएर कृष्णमात्रलाई संझिरहुन् भन्ने हेतुले यो कृष्णलीला रचिएको हो।

कृष्णलीलामा मन लगाइदिनाले जगत्लाई बिर्सिन सकिन्छ। शरीर जहाँ पनि रहोस् मनलाई गोकुल वृन्दावनमै बसाइराख।

जो मरेर बाँच्दछ र जो बाँचेर मर्दछ त्यही सच्चा शूर हो। जो मरेर बाँच्दछ त्यसले मुक्ति पाउँछ। मृत्युको मृत्यु भनेकै मुक्ति हो।

गोपिनीहरू घरको कामकाज गर्दै पनि कृष्णमा यस्तो लीन हुन्थे जो नगर्ने काम पनि गर्थे। चूल्हामा दाउराका साथसाथै बेल्ना पनि तिनीहरूले सल्काइदिन्थे।

कालले धकेलेर निकालिदिनु र हामीले रुँदै-रुँदै संसार छोड्नुभन्दा समयमा सावधान भएर संझी-बुझी जञ्जालबाट मुक्त हुनु श्रेष्ठ छ।

बुद्धिले परमात्मालाई समात्न सक्दैन।

**नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुनाश्रुतेन।**
**यमैवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनूस्याम॥**

परमात्मा न वेदाध्ययनले पाइन्छ, न शास्त्रश्रवण या बुद्धिचातुर्यले। आत्माले जुन पुरुषलाई कृपा गर्दछ उसैलाई उसको प्राप्ति हुन्छ अथवा जो उसले प्राप्त गर्न चाहन्छ उसलाई त्यो प्राप्त हुन्छ।

परमात्माले जसलाई आफ्नो भनेर आफन्त तुल्याउनुहुन्छ उसैलाई उहाँ भेटिनुहुन्छ।

अब अगाडि दामोदर लीलाको कथा आउने छ।

परमात्मा श्रीकृष्ण परमप्रेमको स्वरूप हुनुहुन्छ। सामान्य प्रेम र परमप्रेममा अन्तर छ। पुत्र, पत्नी, माता-पिता आदिका साथ जो प्रेम हुन्छ त्यो सामान्य हो। जगत्का सबै पदार्थ र जीवहरूका प्रति जो निःस्वार्थ प्रेम हुन्छ त्यो हो परम प्रेम।

जीव बड़ो अयोग्य छ, अपात्र छ। ऊ मनबाट र आँखाबाट बराबर पाप गरिरहन्छ। तैपनि ईश्वर ऊसँग प्रेम गर्नुहुन्छ। ईश्वर जीवसँग प्रेम गर्नुहुन्छ। उसमाथि प्रेम वर्षा गर्नुहुन्छ र उसबाट प्रेमको अपेक्षा गर्नुहुन्छ। उहाँ प्रेमद्वारा वशमा हुन सक्नुहुन्छ। उहाँ धनबाट वशमा हुनुहुन्न किनभने उहाँ स्वयं लक्ष्मीपति हुनुहुन्छ।

जब शारीरिक बल द्रव्यबल, ज्ञानबल आदि सबैबाट हार्दछन् तब प्रेमबलको जीत हुन्छ, प्रेमबल सर्वश्रेष्ठ हो। प्रेमबल परमात्मालाई वशमा गर्ने साधन हो। केही मानिस प्रश्न गर्छन् भाइ! परमात्मासँग प्रेम कुन प्रकारले गर्न सकिन्छ? घरका मानिस हामीलाई सुख-सुविधा दिन्छन्। त्यसकारण हामी उनीसँग प्रेम गर्छौं। त्यसै प्रकार मान परमात्माकै कृपाबाट हामी सुखी छौं। उहाँको नाउँको सधैं स्मरण गऱ्यौ भने उहाँसँग प्रेम भैहाल्नेछ।

यदि भगवान्‌को इच्छाभन्दा तिम्रो इच्छा भिन्न हुन्छ भने प्रभुका साथ प्रेम हुन पाउँदैन। आफ्नो इच्छाको त्याग गर र भगवान्‌को इच्छालाई मात्र आफ्नो इच्छा बनाऊ। वैष्णव आफ्नो इच्छालाई भगवान्‌का इच्छाका साथ एकरूप गरेर उसमा लीन हुन्छन्। महात्मा प्रभुलाई प्रेमद्वारा जितिलिनुहुन्छ। जीव पूर्णतः प्रेमगर्न थाल्यो भने भगवान् वशमा भैहाल्नुहुने छ। यस्तै प्रेमकथाको नै यस दामोदरलीलामा वर्णन छ।

भागवतमा जहाँ-जहाँ 'एकदा' शब्दको प्रयोग भएको छ वहाँ कोही न कोही विशिष्ट प्रसङ्ग छ। नवौं अध्यायको आरम्भमा पनि 'एकदा' शब्द छ।

परीक्षित् कृष्णकथाबाट अहिले तृप्त हुनुभएको छैन। उहाँ अझ पनि बड़ो विस्तारपूर्वक सुनाउन प्रार्थना गरिरहनुभएको छ।

शुकदेवजी वर्णन गरिरहनु भएको छ राजन् अब अगाड़ि सुन्नुहोस्।

गोपिनीहरूले कृष्णको नाउँ नौनीचोर राखिदिएकाले यशोदालाई यो कुरा राम्रो लागेन। उनी आफ्नो पुत्रलाई भन्छिन्—'बाहिरको होइन, घरको नौनी खानु बेस छ।' कृष्ण भन्नुहुन्छ—'म घरको नौनी खान लागूँ तब घरमा नौनी सकिन्छ, म बाहिरबाटै कमाएर मात्र खान चाहन्छु।'

हेर, स्वाद गोपिनीहरूको नौनीमा होइन प्रेममा थियो। मिठास प्रेममा हुन्छ वस्तुमा होइन।

यशोदाजीले सोच्नुभयो—'घरको काम-काज सेवकले सँभाल्दछ। शायद कृष्णलाई घरको नौनी मन पर्दैन, त्यसैले चोरी गरिरहन्छ। आज म स्वयं दधिमन्थन गरेर नौनी बनाई उसलाई खुवाउँछु र तृप्त गर्नेछु।'

रामायणमा भनेको छ राजा दशरथ चक्रवर्ती सम्राट् थिए र सेवकहरूको कमी उनीकहाँ थिएन। तैपनि महारानी कौशल्या आफ्नै हातले भोजन बनाउँथिन्।

भोजन भगवान्‌का निमित्त हो। पानी बिग्रियो मने वाणी बिग्रने छ। वाणी बिग्रेपछि वीर्य बिग्रन्छ। वीर्य अर्थात् जीवन। अन्नले मनलाई बनाउँछ। तिमीलाई जसको चरित्रमा पूर्णतया विश्वास हुँदैन उसलाई आफ्नो भान्साघरमा कहिल्यै आउन नदिनु। यदि त्यो भान्साघरमा आइहाल्यो भने पनि अन्न-जल दूषित हुन नदिनु।

एक दिन सबै सेवक घरका अन्य कामहरूमा व्यस्त थिए तब यशोदाले आफ्नै हातले दही मथेर नौनी बनाई कृष्णलाई खुवाउने विचार गरिन्। 'मेरो कृष्णले फेरि कहिल्यै बाहिरको नौनी खाने इच्छा नगरे हुन्थ्यो' यस्तो सोच मनमा बनाइन्।

प्रातःकालमा स्नानादि कार्यहरूबाट निवृत्त भएर पहेंलो वस्त्र लगाई यशोदाजी दधिमन्थनको काममा लागिहालिन्। यशोदाजी कृष्णाका निमित्त यो काम गरिरहेकी थिइन्। त्यसकारण यस काममा भक्ति पनि घोलिएको थियो।

हामीले प्रत्येक व्यवहारलाई भक्तिमय बनाउनु छ। घर बढ़ार्नु भक्ति हो किनभने हाम्रो घर पनि भगवान्कै घर हो। यदि घरमा कहीं कसिङ्गर भयो भने भगवान् अप्रसन्न हुनुहुनेछ। भोजन बनाउँदा पनि भगवान्ले भोजन गर्नुहुने छ भन्ने कुरा विचार राख्नुपर्छ। भोजन बनाउनु पनि भक्ति गर्नु हो।

कति पटक बहिनीहरू भन्दछन्—'हाम्रो परिवार ज्यादै ठूलो छ त्यसकारण सारा समय भान्साघरमै बित्तछ। प्रभुसेवाका निमित्त समय पाईंदै पाइन्न।' हरे ! ठूलो कुटुम्ब चाहिँ ठूलो भाग्यवालाले मात्र पाउँछ। घरका सबै मानिसहरूलाई भगवान्कै रूप मानेर उनको सेवा गर्दै रहू।

संसार सागर हो र सांसारिक विषय दही, आरम्भमा विषय मधुर हुन्छ, अन्तमा कटु। सांसारिक विषयहरूको विवेकद्वारा मन्थन गर्नेवालाले भक्तिरूपी नौनी पाउँछ। यस्तो प्रेमरूप, भक्तिरूप नौनी परमात्मालाई अर्पण गर। परमात्मा प्रेमका सिवाय अरू केही माग्नु हुन्न।

माता यशोदा पुष्टिभक्तिकी स्वरूप हुन्। उनको दर्शन पाउन सक्यौ भने कृष्णलाई पाउन सक्नेछौ। यशोदाको दर्शन अर्थात् मुक्तिको आराधना। यशोदाजी शुद्ध भक्तिकी स्वरूप हुन् र यस्तै शुद्ध भक्तिले मात्र प्रभुलाई बाँध्न सक्छ।

दधि-मन्थनको समय माताजीको शोभा कस्तो थियो ? शुकदेवजीले वर्णन होइन माताजीको त्यस शोभायमान स्वरूपको दर्शन गरिरहनुभएको छ।

क्षौमं वासः पृथुकटितटे विभ्रति सूत्रनद्धं।
पुत्रस्नेहस्नुतकुचयुगं जातकम्पं च सुभ्रूः॥
रज्ज्वाकर्षश्रमभुजचलत्कङ्कणौ कुण्डले च।
स्विन्नं वस्त्रं कवरविगलन्मालती निर्ममन्थ॥

सुन्दर भृकुटी भएकी यशोदाजी दधिमन्थन गरिरहेछिन्। रेशमी घँघरा उनले लाएकी थिइन्। सूतको डोरीले त्यसलाई बाँधेको थियो। पुत्र स्नेहका कारण उनका स्तनहरूबाट दूधको धारा बगिरहेको छ। उनको सारा शरीर हल्लिरहेको छ। डोरी तान्दातान्दा हात थाकिसकेका थिए। हातहरूमा पहिरेका कंकण र कानको कुण्डल डोलायमान थियो। मुखमा पसीनाका थोपा झल्किरहेका थिए र कपालमा लगाएको वेणीमाझबाट चमेलीका पुष्पहरूका पत्र झरिरहेका थिए।

आज माता यशोदाका ओठहरूमा, आँखाहरूमा, मनमा, हृदयमा कृष्णका सिवाय अरू कोही पनि थिएन।

श्रीकृष्ण सेवाको समयमा मुखबाट उहाँको नाम उच्चारण भइरहोस्, मनद्वारा उहाँकै स्मरण हुँदै गरोस् र सेवाको श्रमको पसीनाद्वारा सारा शरीर, सबै वस्त्र भिजुन्।

यो चाहिँ भक्तिको कथा हो। धन-सम्पत्तिका निमित्त पसिना चुहाउने मानिस थुप्रै पाइएलान् तर प्रभुसेवाका निमित्त पसिना बगाउने कति होलान्? भगवान्को सेवामा पसिना बगाऊ। उहाँको सेवा स्वयं गर। आजकल मानिस रुपियाँ-पैसाका निमित्त कम्मरसम्म भाँच्छन् तर भगवान्को चन्दन घोट्न नोकर राख्छन्।

माथिको श्लोकमा भक्तिको निरूपण छ। शरीरद्वारा दधिमन्थनरूप सेवाकर्म भइरहेछ, हृदयमा कृष्णस्मरणको नदी बगेर निस्केकी छन्, वाणी बालचरित्रका गानको गुञ्जन गरिरहेछ। भक्ति, तन, मन, वचनद्वारा आफ्ना प्यारा कृष्णको सेवामा संलग्न छन्।

रेशमी वस्त्र पवित्रताको प्रतीक हो। त्यसको डोरी कसेर बाँधिएको छ अर्थात् आलस्य, प्रमोदको अंशसम्म छैन।

त्यसो तर वस्त्र वासनाको प्रतीक हो। सूती वस्त्रको अपेक्षा रेशमी वस्त्र ज्यादा नरम, मसिनो हुन्छ। यो रेशमी वस्त्र भयो सूक्ष्मवासना। शरीरको उत्पत्ति र आधार रजोगुण हो। सूक्ष्मवासना भएन भने शरीर पनि रहने छैन। वासना निःशेष भएपछि जीव ईश्वरसँग एकरूप हुन जान्छ।

सामान्य व्यक्तिको तुलनामा वैष्णवको वासना दिव्य हुन्छ। मन पूर्णतः वासनाहीन भएपछि ईश्वरको हातमा पुगिन्छ। स्वयं सुख भोग्ने इच्छा बाधक हो, अरूलाई सुखी गराउने इच्छा बाधक होइन। अरूको सेवा गर्ने इच्छा सूक्ष्म वासना हो।

भक्ति मार्ग स्वीकार गरेपछि सुखोपभोगको इच्छा नगर। अरूलाई सुखी तुल्याउने इच्छा गर। सुखको स्वयं उपभोग गर्न खोज्ने इन्द्रियहरूको दास हुन्छ।

भगवत् सेवामा शरीरलाई सकिदेऊ। शरीर पसिनाद्वारा चुर्लुम्म हुने गरी भगवान्को सेवा गर। भगवान्को उपयोगमा नआएको शरीर व्यर्थ हो। तुलसीदलविना भगवान्को सेवा कदापि हुँदैन।

यो शरीर श्रीकृष्णको हो, श्रीकृष्णका निमित्त हो। यो शरीर धर्मक्षेत्र हो। धर्मक्षेत्र अर्थात् विष्णुक्षेत्ररूपी यो देह भोगोपभोगका निमित्त होइन।

यशोदाले शारीरिक सेवा गरिन्। शारीरिक सेवा गर्नैं पर्छ, तर यदि मनद्वारा सेवा गरिएको छैन भने आनन्दलाभ हुनेछैन। सेवा गर्दा-गर्दा आँखा रसाऊन्, हृदय पग्लियोस्, यस्तो सद्भावपूर्वक सेवा गर्नेवाला मानिस आजकल बहुत थोरै छन्।

सेवारत यशोदाजीका आँखाहरूमा श्रीकृष्ण हुनुहुन्छ र हृदयमा पनि। दधिमन्थनको समयमा उनको दृष्टि कृष्णतर्फ मात्र स्थिर छ।

कामकाज गर्ने समयमा हाम्रो दृष्टि यशोदाजीको जस्तै श्रीकृष्ण तर्फ हुनुपर्छ। सबै गोपिनीहरू पनि खानपान, काम-काजका समय पनि गोपाल कृष्णका तर्फ मात्र टकटकी लगाएर हेरिरहन्थे।

व्यवहार छुट्दैन, त्यसलाई छोड्नु पनि हुँदैन, तर व्यवहारका साथ-साथ परमार्थलाई संझ, आफ्नो लक्ष्य कहिल्यै नबिर्स। सबै सन्त-महात्मालाई केही न केही कामकाज गर्नैपर्थ्यो। कामकाजका समयमा भगवान्लाई बिर्सनु अपराध हो।

यस संसारमा कोही धनका निमित्त बाँच्छ र कोही स्त्रीका निमित्त, कोही सम्पत्तिका निमित्त बाँच्छ र कोही पुत्र-परिवारका निमित्त। यस्तो व्यवहार इष्ट होइन। पैसा होइन, परमात्मालाई हेर्नु पर्छ।

आदर्शलाई, लक्ष्मीलाई ध्यानमा राखेर गरेको व्यवहार भक्ति हो। व्यवहार शुद्ध भयो भने भक्ति आउनेछ। लक्ष्यलाई बिर्सिएर गरेको व्यवहार बाधक हुनेछ। लक्ष्यलाई बिर्सियौ भने तब जन्म-मृत्युका चक्रमा पर्न जानेछौ।

व्यवहारपालन गर्दा दृष्टि भगवान्‌तर्फ स्थिर राख्यौ भने त्यो व्यवहार मात्र भक्ति बन्न जानेछ।

यशोदा हुन् पुष्टिभक्ति। पहेंलो वस्त्र वैष्णवी भक्तिको प्रतीक हो। संसार गाग्रो हो। मथेर प्रेमरूप नौनी पाउनु छ। परमात्माको माग हो प्रेम।

घरको काम-काज गर्दा यशोदाजीको जस्तै मुखमा प्रभुको नाम र दृष्टिमा प्रभुको स्वरूप हनुपर्छ।

पुष्टिभक्तिमा भक्ति र व्यवहार भिन्न छैन। भक्तको प्रत्येक व्यवहार भक्तिमय हुनुपर्छ। जे काम गर,भगवान्‌को आज्ञा सम्झेर गर। कामकाज गर्दा-गर्दा प्रत्येक हर पाँच-दस मिनटमा भगवान्‌लाई हेर्दै गर।

जबसम्म व्यवहार पूर्णतः शुद्ध हुँदैन, तबसम्म भक्ति राम्ररी हुन सक्दैन। व्यवहारमा छल, कपट, असत्य हुनु हुँदैन।

यशोदाको दृष्टि सदा श्रीकृष्णका तर्फ लागिरहन्छ। भगवान्‌को स्मरण गर्दा-गर्दा माताको हृदय पग्लियो, वक्षःस्थलको लुगा भिजेको छ।

बाह्रौं अध्यायमा भनेको छ भगवान्‌को कुण्डलमा सांख्ययोग छ। यो यशोदाको होइन, भक्तिको शृङ्गार हो। सांख्ययोगको सहायता विना भक्ति गर्न सकिँदैन। महाप्रभुजीले भनेको छ, 'यशोदाको कुण्डल सांख्ययोग हो। सांख्ययोगको सहायताले भक्ति स्थिर हुन्छ। दुःखको प्रसङ्ग आएपछि मनुष्य भक्ति गर्न थाल्छ, तर उसमा स्थिरता आउन पाउँदैन। त्यसकारण सांख्ययोगको विना भक्ति अपूर्ण छ।'

योगशास्त्रले मनलाई एकाग्र बनाउँछ। योग मनलाई एकाग्र बनाउन उपयोगी छ। सांख्यशास्त्रको अभ्यास नगरिकन चेतन आत्मा जड़ शरीरबाट पृथक् हुन पाउँदैन। सांख्यशास्त्रले मनलाई शुद्ध गर्छ। यी दुवैको आवश्यक छ।

यदि भक्ति गर्नु छ भने आत्मालाई शरीरबाट पृथक् गर र मनलाई एकाग्र गर। शारीरिक आनन्द आफ्नो होइन। बराबर सोच चेतन आत्मा र जड़ शरीर दुवै एक होइनन्, भिन्न हुन्।

सँधै मङ्गल गीत गाउँदा कृष्ण ब्यूँझन्थ्यो, नौनी तयार भएपछि मात्र आज ब्यूँझाउँला भन्ने इच्छा थियो। बुद्धिलाई ईश्वरबाट टाढ़ा हुन नदेऊ। बुद्धि यशोदा विषयहरूतर्फ बढ़ी भने त्यहाँ

फँस्छे। यसैले कृष्णजी आमालाई टाढ़ा जान दिनुहुन्न। बुद्धि यदि ईश्वरबाट टाढ़ा भएर विषयहरूका तर्फ लाग्छ भने विपत्तिमा फँस्ने छ। ईश्वर यो चाहनु हुन्नथ्यो र त्यसैले यशोदालाई अरू कुनै काम गर्नैं दिनुहुन्नथ्यो।

आज यशोदा दधिमन्थनमा तन्मय भएकी थिइन्। उनको वाणीमा, मनमा, हृदयमा श्रीकृष्ण हुनुहुन्छ। यो यशोदाको कथा होइन, भक्तिको कथा हो।

यशोदाका तन, मन, वचन एक भैसकेका थिए। उनले मन, वचन र कर्मले ईश्वरको सेवा गरिरहेकी थिइन्। त्यसकारण कृष्ण स्वयं जागा हुनुभयो। सँधै तर कृष्णलाई जागा गराउन मङ्गल गान गर्नुपर्थ्यो, आज उहाँलाई जगाउने कार्य गर्नुपरेन।

अनन्य भक्तिले कृष्णलाई जगाउँदछिन्। श्रीकृष्ण आज स्वयं जागा हुनुभयो।

कृष्णलाई ब्यूँझाउनु छ। यशोदाको हृदयमा बस्नुभएका कृष्ण जाग्नुभयो तर हाम्रो हृदयका कृष्ण चाहिँ अहिलेसम्म सुतिरहनुभएको छ। वहाँलाई ब्यूँझाउनुपर्छ।

ईश्वरलाई जगाउनु छ। त्यसो तर श्रीकृष्ण सर्वव्यापी ब्रह्म हुनुहुन्छ। सबैका हृदयमा उहाँको वास छ, तर त्यो सुषुप्तावस्थामा मात्र। उहाँलाई जागा गराउनु छ। यशोदाको जस्तो भक्ति गर्‍यौं भने तब सुषुप्त कृष्ण अवश्य जाग्नुहुन्छ।

श्रीकृष्ण अर्थात् आनन्द। हृदयमा आनन्द छ। उसलाई जगाउनु छ। जीव संसारका जड़पदार्थहरूमा आनन्दको खोजी गर्दै रहन्छ तर भेट्टाउँदैन। ईश्वरका साथ जीवलाई तन्मय गराउनु छ। ईश्वरलाई कुनै पनि वस्तुको आवश्यकता छैन। भित्र सुतेका भगवान्‌लाई जगाउनु छ। भगवान् ब्यूँझनुभयो आनन्द नै आनन्द हुनेछ।

सच्चा वैष्णवको शरीरको पसीना चुहेमा भगवान् जागा हुनुहुन्छ। वैष्णव दुःखी भएमा कृष्ण आरामले सुत्न सक्नुहुन्न।

शुद्ध प्रेमीको परिश्रमले सताउन सक्दैन। यदि यशोदाको जस्तो सेवा गर्‍यौ भने तिम्रो भक्तिलाई देखेर तिम्रो हृदयमा सुतेका कृष्ण अवश्य जागा हुनुहुन्छ।

यशोदाजीको निष्काम भक्तिलाई देखेर भगवान् सकाम बन्नुभयो। भक्ति उम्लनथाल्छ त भगवान् सकाम-स्तन्यकाम बन्नुहुन्छ।

उपनिषद्‌ले भगवान्‌लाई निष्काम भनिदिन्छ। शुकदेवजी भगवान्‌लाई सकाम भन्नुहुन्छ।

**तां स्तन्यकाम आसाद्य मथ्नन्तीं जननीं हरिः।**

भगवान् श्रीकृष्ण स्तनपान गर्ने इच्छाले दधिमन्थन गरिरहेकी माताका नजिक आउनुभयो।

त्यसो तर भगवान् निराहारी हुनुहुन्छ तर यो चाहिँ भक्तका हृदयको भावना हो। भक्तको हृदय जब प्रेमार्द्र हुन्छ, तब भगवान् भोको हुनुहुन्छ।

कृष्णजी ब्यूँझेपछि आमालाई खोज्दै त्यहीं आइपुग्नुभयो। उहाँले पछिल्तिरबाट आमाको सरको तान्नुभो। यशोदाजी आफ्नो काममा यति तल्लीन थिइन् उनले केही थाहै पाइनन्। कृष्ण आमासँग भन्न लाग्नुभो—आमा, मलाई भोक लागेको छ। पहिले दूध खुवाउनुहोस्।

यशोदा साधक हुन्, दधिमन्थन साधन हो, श्रीकृष्ण साध्य हुनुहुन्छ। साधना यस्तो गर जसले साध्य आफैं आएर मिलोस्। साधन तन्मय साधकलाई साध्यले स्वयं जगाउँछ।

मनुष्य साधारणतया साँचो हृदयले साधना गर्दैन। त्यसकारण उसले भगवान्लाई देख्न पाउँदैन। यदि तिमी कृष्णका पछि लाग्छौ भने उहाँ अवश्य भेटिनुहुनेछ। कृष्ण जीवसँग भेट्नका निमित्त स्वयं आतुर हुनुहुन्छ, तर जीवले उहाँको अपेक्षा गरिरहन्छ। साधना यस्तो तन्मयतासाथ गर देहभानसम्म शेष नरहोस् र साध्य स्वयं तिम्रापछि दगुर्न थालोस्।

यशोदाको भक्ति देखेर कृष्णले पछिल्तिरबाट सप्को समात्नुभो। तिमी पनि सेवासाधनामा यस्तो डुब जसमा साध्य तिम्रो द्वारमा आओस्। यही पुष्टिभक्ति हो।

शरीरद्वारा भक्ति गर्दाखेरि आँखाहरूमा र मनमा श्रीकृष्णलाई बसाइराख। यशोदा सर्वाङ्ग भक्ति गर्दै श्रीकृष्णको नाउँ जपिरहिछिन्।

शरीरबाट सेवा, वाणीबाट कीर्तन गर्‍यौ र मनलाई श्रीकृष्णमा रमाईराख्यौ भने तिम्रो हृदयमा पनि कृष्ण ब्यूँझनुहुन्छ।

घरको सारा कामकाज कृष्ण-कीर्तन गर्दै गर। उहाँको कीर्तन गर्नाले, आँखाहरू खुला भए पनि जगत् बिर्सन सकिन्छ।

योगीजन आँखा चिम्लिएर ब्रह्मचिन्तन गर्दै जगत्लाई बिर्सने प्रयास गर्छन् र पनि उनीहरूले त्यसलाई बिर्सन सक्दैनन्।

वाणीद्वारा कीर्तन, आँखाहरूद्वारा दर्शन, शरीरद्वारा सेवा गर्नकै कारणले यशोदाका हृदयमा श्रीकृष्ण जागा हुनुभयो।

प्रेमसहित स्मरण गर्नाले हृदय द्रवित हुन्छ र आनन्द प्राप्त हुन्छ। आनन्द ब्रह्मको स्वरूप हो। निद्रावस्थाको आनन्दको जस्तै जागृत् अवस्थामा मुक्ति पाइन्छ।

कृष्ण घुँड़ाका बलले आमाका नजीक आएर सरको समातेर भन्न थाल्नुभो—'मलाई भोक लागेको छ। मलाई खान दिनुहोस्।' यता यशोदा काम अलपत्र छोड्न चाहन्नन्।

यो जीव बड़ो दुष्ट छ। तैपनि भगवान् उसलाई धन-सम्पत्ति, प्रतिष्ठा दिनुहुन्छ। जीव अधम छ र पनि भगवान् आशा राख्नुहुन्छ ऊ कनै न कुनै वेला अवश्यै सुध्रिएला।

भोका कृष्ण रुन थाल्नुभो। आमाले काम छोड़िदिइन् र आफ्नो पुत्रलाई काखमा बसाएर दूध ख्वाउन थालिन्। दूधको धारा बगेर गयो। भक्तिमा हृदय द्रवित भयो भने आनन्द अवश्य पाइन्छ र यो आनन्द भनेकै ईश्वर हो।

के शुकदेवजी स्तनपानको कथा भनिरहनुभएको थियो ? श्रीधरस्वामी भन्नुहुन्छ—'यो कथा बालकलाई दूध पिलाउनेजस्तो सामान्य कथा होइन। यो ब्रह्मसम्बन्धको कथा हो। यशोदा जीव र कृष्ण परमात्मा। माता-पुत्रको मिलन कस्तो छ, त्यो अरू कसले जान्न सक्छ ? यशोदाजी बालकलाई

दूध ख्वाइरहनुभएको छ, यति मात्र होइन, यहाँ तर ब्रह्मसम्बन्ध स्थापित भएको छ। यो चाहिँ अद्वैतको कथा हो। माता यशोदा बालकृष्णलाई काखमा लिएर परमात्माका साथ एक भएकी छिन्।'

यो जीव र ब्रह्मको मिलन हो। यस्तो मिलनको समयमा बाहिरी संसारलाई मनमा घुस्न नदिनु। ब्रह्ममिलनको समय, ईश्वरमिलनको समय सांसारिक विषयहरूबाट टाढै बस्नु। यशोदासँग ब्रह्मसम्बन्ध भयो अनि अलौकिक आनन्दको वृष्टि भइरहेको थियो।

स्तनपान गर्दा-गर्दै कृष्णले सोच्नुभो—'आज अलिकति आमाका प्रेमको परीक्षा गर्नुपर्‍यो। मातालाई म ज्यादा प्यारो छु या यो संसार। आमाको मसँग ज्यादा सम्पर्क छ या सांसारिक व्यवहारसँग।'

परमात्माले कुनै जीवको कसौटीबाट परीक्षा नगरीकन आफ्नो तुल्याउनुहुन्न।

क्षुद्र मनुष्य दुइ-चार पैसाका निमित्त पनि पाप गर्दै रहन्छ। साना-साना पाप मिलेर महापाप हुन्छ। पाप नगर्नु चाहिँ सबभन्दा ठूलो पुण्य हो।

कसौटीबाट पार उत्रनलाई परमात्मा कृपा पनि गर्नुहुन्छ। उहाँ सबै जीवलाई कसीमा राखेर जाँचेपछि मात्र आफ्नो तुल्याउनुहुन्छ। उहाँ चाहनुहुन्छ जीवले उहाँलाई सबैभन्दा धेरै प्रेम गरोस्।

ईश्वरको माला भिरिसकेपछि यदि अरूहरूसँग प्रेम गर्न थाल्यो भने तब ईश्वर अप्रसन्न भइहाल्नु हुनेछ। ईश्वर चाहनुहुन्छ जीव एकमात्र उहाँसँग प्रेम गरोस्। प्रेम गर्न योग्य ईश्वर मात्र हुनुहुन्छ किनभने जगत्का पदार्थहरूसित प्रेमगर्नाले कुनै न कुनै वेलामा निश्चयै रुवाउँछ।

कृष्णले आमाको परीक्षा लिन सोच्नुभो—'म अग्निलाई हावा लगाइदिन्छु। ऊ प्रज्ज्वलित हुन्छ तब चूल्हामाथि राखेको दूध उम्लेर पोखिने छ। अब यदि आमाले मलाई छोडेर दूध जोगाउन दगुर्नु भयो भने म मान्नेछु, आमालाई म होइन सांसारिक सम्पत्ति मात्र ज्यादा प्यारो रहेछ।'

कति मानिस सोच्दछन् संसार-व्यवहारको सबै काम राम्ररी सकेपछि भक्ति गर्नेछु। हरे! संसारको व्यवहार न कहिल्यै राम्ररी सकिएको छ, न कहिल्यै सकिएला।

महापुरुषहरूले भनेका छन्, 'यस जगत्मा हरकिसिमबाट सुखी न कोही भएको छ न कोही होलान्। यदि कोही सुखी भयो भने पनि त्यसले आफ्नो गौरव गुमाउनेछ।'

संसारमा कठिनाइहरू आउँदै रहन्छन् तर एक क्षण पनि परमात्माको स्मरण नछोड्ने प्रतिज्ञा गर्नुपर्नेछ। यस्तो गरेपछि पापबाट पुण्य बढ्ने छ। जब मनुष्य जन्म मिल्छ तब पाप र पुण्य दुवै भोग्नुपर्ने हुन्छ। दुःखद प्रसङ्ग आएमा मनलाई संझाइयोस् पाप घटिरहेछ।

कृष्णको आज्ञाले अग्नि प्रज्ज्वलित भयो र दूध उम्लिँदै बाहिर पोखिन थाल्यो।

यी साधुहरूको अरू कामै छैन। दिउँसो एकपटक स्वादरहित भोजन गरेर सारा दिन 'राधेकृष्ण' को चिन्तन गर्दै रहन्छन्। दूध उम्लेको प्रसङ्गमा उनीहरूले केही कारण यस प्रकार दिएका छन्—

( १ ) त्यो दूध ऋषिरूपा गाईको थियो। ऋषि तप र साधना गर्दा-गर्दा थाके र फेरि पनि उनको मनमा बसिरहेको कामको नाश हुन पाएको छैन। त्यस बुद्धिवासी कामको नाशका निमित्त ऋषि गाईहरूको रूप लिएर गोकुलमा आई बसेका थिए। दूध कृष्णको पेटभित्र पर्नु थियो। 'यदि श्रीकृष्णले मेरो आहार गरिदिनुभयो भने तब मेरो कल्याण हुने थियो।' जड़ पदार्थ पनि भगवान्को इच्छा राख्छन्। कामीको उपयोगमा आएपछि भोगविलासबाट पदार्थको विनाश हुन्छ।

तिमी यदि स्वयं श्रीकृष्णको उदर ( हृदय )मा बस्न पाउने हो या उहाँलाई तिमीले आफ्ना हृदयमा बसाउन सक्ने हो, अनिमात्र तिमीलाई शान्ति मिलेछ। योगीजन परमात्माको स्वरूपमा मिलिहाल्छन्। वैष्णव श्रीकृष्णलाई आफ्ना स्वरूपमा उतार्दछन्। दुवै मार्ग एउटै हो।

'यदि यशोदाजीले कृष्णलाई धेरै स्तनपान गराउनुभयो भने उहाँलाई भोक रहने भएन र उहाँले मेरो आहारा गर्नु हुन्न। यदि भगवान्को सेवा मैले गर्न पाइनँ भने मेरो अस्तित्व वृथा हुने भयो। त्यसकारण मैले अग्निमा हाम्फालेर आफू स्वयंलाई समाप्त गरिदिनुछ।'

जीना है उसका भला जो इन्सान के लिए जिए।
मरना है उसका भला जो अपने लिए जिए॥

आफ्ना निमित्त बाँच्नु कुनै बाँच्नु होइन। काग पनि असल हो जो आफ्नो र कुटुम्बका निमित्त बाँच्दछ र आफ्ना भाईहरूलाई बोलाउँदछ। परोपकारका निमित्त बाँच्नु पो बाँच्नु हो।

स्वयं सुखोपभोग गर्ने वासना भक्तिका निमित्त बाधक छ, अरूहरूलाई सुखी गराउन खोज्ने भावना भक्तिसाधक हो।

समयको नाश, सर्वस्वको नाश।

दूधले मानिलियो—'कृष्णले मलाई पिउनुहुन्न त्यसकारण ऊ अग्निमा होमिन थालेको।'

( २ ) दूध चाहन्थ्यो र मान्दथ्यो पनि यशोदाले अलिकति दूध ख्वाउने होला, भोक बाँकी रहन जाला र यो पिउने होला। तर कृष्णले माताको दूध पिउँदै हुनुहुन्थ्यो। दूधले सोच्यो कृष्णले मलाई पिउने होइनन् त्यसकारण ऊ 'मलाई पनि पिऊ मलाई पनि पिऊ' भनेर विन्ति गर्दै भाँड़ाबाट बाहिर उम्लिएर आयो।

( ३ ) अर्का महात्मा भन्नुहुन्छ—'दूध यशोदाजीको घरको थियो। अतः उसलाई कृष्ण-कीर्तन, कृष्णकथा श्रवण, सत्सङ्गको लाभ मिलेको थियो। एक करोड़ जपमाला दिव्यताको सञ्चार गर्छ तर दूध स्वयं कृष्णको घरको निवासी थियो र त्यो दूध ऋषिरूपा गाईको

थियो। दूधले बालकृष्णको दर्शन पायो र ऊ भेट गर्नका निमित्त आतुर भएर, अधीर भएर दौड़िहाल्यो।'

यस्तो लीला सबैको घरमा सधैं भई रहन्छ। विषयसुख उम्लनु दूध उम्लनु हो। दूधको उम्लाइ विषय सुखहरूको संझना हो। संसारका सुखहरूको उपभोग यस प्रकार गर मन ऊसँग नटाँसियोस्, संझना बाँकी केही नरहोस्। भगवान्‌को सेवाका समयमा विषयसुखहरूको संझना आउनु दूधको उम्लाइजस्तै हो र यसो भएपछि भक्ति मेटिन्छ।

हिजो-आज मानिसहरूलाई घरको कामकाज गर्ने समयमा केही पनि संझना आउँदैन तर माला हातमा लिनासाथ घर-गृहस्थीको सारा झंझट मनमा उम्रेर आउँछ। केही प्राप्त गर्ने समय नजिक आउनासाथै साधकको मनमा संसार खड़ा हुन आउँछ। परीक्षा लिनका निमित्त कृष्ण यस्तो माया रच्नुहुन्छ। ब्रह्मसम्बन्ध हुने समयमा वासनाको संझना, दूधको उम्लिने भाँती आउनुपर्ने होइन। प्रभुस्मरण गर्दै-गर्दै विषयसुखहरूको स्मरण भएमा भगवान् विस्मृतिको अँध्यारोमा लुकिहाल्छन्।

सेवा गर्दा-गर्दा जगत्‌को संझना हुनु या गर्नु इष्ट होइन। मानिस डाकोरका रणछोड़ रायजीको संझना गर्दैनन् तर उहाँको गोटा ( एक खाद्य विशेष ) संझना गर्छन्। डाकोरजीको सुन्दरताको होइन, गोटाको सम्झना र स्वादले दुःख दिइरहेछ।

ईश्वरको सेवा गर्दा-गर्दा यदि विषयसुख सम्झना आयो भने मानिलेऊ दूध उम्लन थाल्यो, सेवा गर्दाखेरि आँखाहरू कान र मन कुनै अरूलाई नदेऊ। कोहीसँग कुरा नगर। आँखा निहुर्‍याएर 'जय श्रीकृष्ण' भनेर सेवामा लागिराख। यदि यस समय कसैसँग आँखा जुधायौ भने मन चञ्चल हुनेछ, सेवाको काम अधूरो हुनेछ।

( ४ ) एक अन्य महात्माले यसप्रकार भनेको छ—'यशोदाजीलाई त्यसो तर कृष्ण मात्र ज्यादा प्यारा थिए तर चूल्हामा जुन दूध थियो त्यो गङ्गी नाउँकी गाईको थियो। कृष्णलाई यस गाईको दूध बहुतै मन पर्थ्यो र सोही पिउँथे। यशोदाले सोचिन् यदि यो दूध उम्लेर गयो र कृष्णले दूध माग्यो भने के खुवाउँला ? यस प्रकार यशोदा दूध बचाउनलाई होइन तर कृष्णको प्यारो भोजन जोगाउनलाई दौड़ेकी थिइन्।'

प्रियजनभन्दा प्रियजनको वस्तु अधिक प्रिय लाग्छ।

( ५ ) कति महात्माको भनाइ यस प्रकार छ—दूधले परमात्मालाई यशोदाको काखमा देख्यो, ईश्वरदर्शनपछि पनि मैले अग्निको जाँच सहनुपर्दछ। मेरो दुःखताप अहिलेसम्म कम भएको देखिएन। मेरा पाप धेरै छन्। म बाँच्नेलायक रहेनछु। मैले अग्निमा हाम्फालेर मर्नुपर्छ। यसो भनेर दूध उम्लन लाग्यो। यशोदाजीले कृष्णलाई एकातिर सुताएर चूल्होमाथिको दूधको भाँड़ो झिक्न दगुरेर गइन्।

जीव पनि बड़ो विचित्र छ। आफ्नो व्यावहारिक काम गर्ने समयमा ईश्वरलाई संझँदै गर्छ। तर जब ईश्वर उसको काखमा आएर बस्नुहुन्छ ईश्वरसँग सम्बन्ध जोरिन्छ, तब ऊ ईश्वरलाई एकतर्फ राखेर, छोड़ेर त्यो सांसारिक कार्यका पछि दौड़ लाउँछ। ब्रह्मसम्बन्ध भएपछि संसारको स्मरण हुन आउनु त्यस दूधको उम्लनु जस्तै हो। कति मानिस माला चाहिँ घुमाउँछन् तर उनको मन साग-सब्जी खरीदमा, घर-गृहस्थीको चिन्तामा लागेको हुन्छ। यस्तो जप प्रभुको होइन ती वस्तुको जप भइरहन्छ।

वियोगमा अपेक्षाको जान्नु गुणदर्शन हो। संयोगमा उपेक्षाको भाव दोषदर्शन हो। कृष्ण टाढ़ा हुनुहुन्थ्यो तर यशोदा उहाँलाई काखमा उठाउनलाई लालायित थिइन् र अब काखमा आउँदा उहाँको उपेक्षा गरेर दूधका पछि भाग्न लागिन्।

सुलभ वस्तुको उपेक्षा गर्नु जीवको स्वभावै हो। भगवान्ले सोच्नुभयो, 'यशोदाले कैयौं व्रतजप गर्नुभएर म उहाँसँग भेट्न पुगें। तर अब सेर, दुइ सेर दूधका निमित्त मलाई छोड़ेर जानुभो।'

कृष्णलाई छाड़ेर यशोदाजी सांसारिक काम गर्न गइन्। कृष्णले सोच्नुभो मातालाई म होइन संसारै ज्यादा प्यारो छ। तब आमालाई शिक्षा दिने हेतुले कृष्णले ढुङ्गा हानेर एक मन दहीको घड़ा फोरिदिनुभयो।

श्री महाप्रभुले आज्ञा दिनुभयो—श्रीकृष्णको सेवा लौकिक भावले कहिल्यै नगर्नु। अलौकिक सेवा छोड़ेर लौकिक कार्य सुधार्न गयौ भने भगवान् त्यसलाई अझ बिगारिदिनुहुन्छ।

प्रभुलाई अलौकिक र लौकिक दुवैको चिन्ता छ। उहाँलाई हाम्रो बड़ो चिन्ता रहन्छ। यदि मनुष्य चिन्ता गरेर आफ्नो हृदयलाई पोलिराख्छ भने मेरो के गति होला—यस्तो उहाँ सोच्नुहुन्छ।

म समर्थ छु र मेरो स्वामी झन सर्वसमर्थ, सर्वशक्तिमान् हुनुहुन्छ। यस्तो मानेर निश्चिन्त भई भगवान्को स्मरण, मनन, चिन्तन गर्दै रहू।

भगवत्स्मरण, सेवा गर्दा सो समयमा घरमा यदि कोही नोक्सानी भए हुन देऊ। तन भगवान्सँग होस् र मन भान्साघरमा तब त्यो सेवालाई सेवा कसरी भन्ने ?

भगवत् सेवालाई अलपत्र छोड़ेर लौकिक काम सुधार्न गयौ भने तब अरू पनि बिग्रिनेछ। यसैले कृष्णले दहीको घड़ा फोरिदिनुभयो।

श्रीकृष्णले विषयासक्तिरूपी घड़ा फोरिदिनुभयो। यशोदाको विषयासक्ति नष्ट गर्नका निमित्त दहीको भाँड़ो फोरिदिनुभयो।

संसार आसक्तिको नाशविना भगवद्-प्रेम उत्पन्न हुँदैन।

हरिमाथि विश्वास गरेर ईश्वरसेवा श्रीकृष्णको भक्तिसाथ गर्नुपर्छ। श्रीकृष्ण-भक्ति, प्रभुसेवा गर्नेको लाज प्रभुले सदा बचाइदिनुहुनेछ।

हरिने भजताँ हजी कोईनी लाज जता नथी जाणी रे
जेनि सुरता शामलिया साथ वदे वेद वाणी रे। ........हरिने
बहाले उगार्यो प्रहलाद, हिरणा, कंस मार्यो रे
विभीषणने आप्युं राज, रावण संहार्यो रे। ........हरिने
वहाले नरसिंह मेहता ने हार हाथो हाथ आप्यो रे
ध्रुवने आप्युं अविचल राज, पोतानो करी स्थाप्यो रे। ........हरिने
वहाले मीरां ते बाईना झेर हलाहल पीधां रे
पांचालीनां पूर्या चीर, पांडव काम कीधाँ रे। ........हरिने
आओ हरि भजवानो लहावो, भजन कोई करशे रे
कर जोड़ी कहे प्रेमलदास, भक्तोनाँ दुःख हरशे रे। ........हरिने

जबसम्म संसारासक्ति जाँदैन तबसम्म भगवद्भक्ति सिद्ध हुँदैन।

संसारका विषयभोगहरूबाट कहिल्यै तृप्ति हुँदैन। मानिस तरकारी, दाल, अचारमा तेल हाल्छन्। तेलबाट सरावोर भएपछि मात्र स्वादले खान्छन्। अब अलिकति विचार गर, आजसम्म हाम्रा पेटमा तेलका नजाने कति डब्बा पुगे होला र अन्नका पनि अनगिन्ती बोराहरू हाम्रा पेटले स्वाहा पाऱ्यो, तर पनि हामी तृप्त भएका छौं र?

ईश्वरलाई खोपामा राखेर लौकिक कार्यमा लागिरहनु राम्रो होइन। सांसारिक कार्यहरूका पछि यस्तै प्रकारले लागिरह्यौ भने उहाँ अझ रिसाउनुहुनेछ।

यत्तिकैमा अलिकति बालसखाहरूले आएर कृष्णलाई सोधे—'कृष्ण, आज कुनचाहिँ घरको निशाना लाउनुपर्ने हो हामीले?' कृष्णले भन्नुभो—आज आफ्नै घरको नौनी उड़ाउनु छ आज भगवान् आफ्नै घरको दही-नौनी ख्वाइरहनुभएको छ।

गरेको उपकारलाई भगवान् कहिल्यै बिर्सनुहुन्न। रामावतारमा बाँदरहरूले उहाँको धेरै सेवा गरेका थिए, त्यसकारण श्रीकृष्ण आज उनलाई पनि दही-नौनी ख्वाइरहनुभएको छ।

यशोदाले फर्किएर आएर हेर्छिन् तब हाँड़ी फुटेको, दही यताउता छ्याल्ल-ब्याल्ल भएको थियो र कृष्ण हराएका।

कृष्णले रिसाएर यो पराक्रम गरेको थियो। कृष्णले सीकाबाट नौनी झिकेर बालसखाहरू र बाँदरहरूलाई ख्वाइरहनुभएको थियो।

बाँदर अर्थात् मन। मन बाँदरजस्तो चञ्चल हुन्छ तर श्रीराम र श्रीकृष्णका सामुन्ने तर ती हात जोड़ेर, शिर नुहाएर उभिन्छन्। उनका विना चञ्चल मन-बाँदर शान्त हुँदैनन्। बाँदर फलाहार गर्छन् र निःवस्त्र रहन्छन्। तिनीहरू साधुजस्ता छन्। कृष्ण उनलाई नौनी ख्वाइरहनुभएको छ।

यशोदाले कृष्णलाई चोरी गर्दै गरेको देखिन् र गोपिनीहरूको कुरा साँचो मानिन्। कृष्णको चोरी गर्ने बानी छ। 'कृष्णलाई समातेर बाँध्नुपर्‍यो। जुन ओख्लीमा उभिएको छ त्यसको साथै म उसलाई बाँधिदिनेछु।' यशोदा लट्ठी लिएर कृष्णका पछि दौड़िन्।

मित्रहरूले कृष्णलाई भने—'आमा आउनुभयो, भाग।' जुन ईश्वरलाई योगीले भेट्टाउन पाएका छैनन् उनैलाई समात्न यशोदा दगुरिरहेछिन्। यशोदा दगुर्दा-दगुर्दा थाकेर चूर भइन् तर कृष्णलाई भेट्न सकिनन्। यस्तो किन भएको ?

श्रीधरस्वामी भन्नुहुन्छ—'आफ्नो एउटा भूलको कारण यशोदाले कृष्णलाई समात्न पुग्दिनथिइन्। कृष्णका पछि दगुर्दा यशोदाको दृष्टिमा कृष्णको मुखारविन्द र चरणकमल होइन पिठ्यूँ थियो। तृतीय स्कन्धमा भनेको छ, कृष्णको पिठ्यूँमा अधर्म छ। अधर्म त्यहाँबाटै उत्पन्न भएको छ। अधर्मलाई दृष्टिमा राखेर दगुराउने ईश्वरलाई कसरी भेट्टाउन सक्ने।'

भक्ति धर्मको मर्यादामा बसेर गर, भक्ति धर्मानुकूल हुनुपर्छ। भक्तिमा अधर्म पर्‍यो भने त्यो भ्रष्ट भयो। कर्ताले जसलाई जो कर्तव्य दिएको छ, त्यसलाई बराबर पूर्ण गरोस्। जसले आफ्नो धर्म छोड्दछ उसको भक्ति सफल हुन पाउँदैन। सन्ध्या कर्म नगरीकन सेवा गर्ने ब्राह्मणको सेवा ईश्वरले कहिल्यै पनि स्वीकार गर्नुहुन्न। यदि घरमा पतिदेव बिरामी छन् उनको उपेक्षा गरेर स्त्री मन्दिर जाओस् तब उसको भक्ति-पूजा भगवान् किन स्वीकार गर्नुहोला ? आफ्नो पति र सन्तानको उपेक्षा गरेर कथा-कीर्तन गर्ने या मन्दिर जाने स्त्रीको सेवा कहिल्यै सफल हुँदैन।

प्रभु भन्नुहुन्छ, 'मलाई कर्त्तव्यको, धर्मको मर्यादा बहुत प्रिय छ।' उहाँको भक्ति गर्दा कर्त्तव्य र धर्मका मर्यादाहरूको पालन गर्नुपर्छ।

यशोदाले कृष्णलाई समाउन सकेकी छैनन् किनभने ती ( भक्ति ) अधर्मको पछि दगुरिरहेछिन्।

एक महात्माले दोस्रो कारण बताएका छन्—यशोदाको हातमा लट्ठी थियो। लट्ठी लिएर उनी दौड़ेकी कृष्णलाई मन परेन, उनलाई डर लाग्दछ। लट्ठी अभिमानको प्रतीक हो। पुष्टि सम्प्रदायले कृष्णको सेवा गर्नु भन्छ। लट्ठी लिएर दौड़नुको अर्थ हो, अभिमानलाई साथमा लिएर दगुर्नु। अभिमानी सेवा गर्दैन। कृष्ण भन्नुहुन्छ—'आफ्नो अभिमान छोड़ेर मात्र नजिक आउनु।'

बल्लभाचार्य भन्नुहुन्छ—'भक्ति यदि अभिमानलाई लिएर भगवान् पाउन हिँड्छे भने त्यो सफल हुन सक्तिन।' यशोदाजीले, बुद्धि-भक्ति-लट्ठी ( अभिमान ) लिएर कृष्णलाई समाल खोज्नु नसकिने हो।

सत्कर्म गरेर पनि यदि आन्तरिक अभिमान बढ्दै गयो भने त्यो सत्कर्म के काम ? भगवान् सबै दोषहरूलाई क्षमा गर्नुहुन्छ तर अभिमानलाई होइन। अभिमान भएपछि भगवान्को उपेक्षा

हुन्छ। अभिमान गर्ने जस्तो कुरा जब केही छँदै छैन भने हामीले अभिमान गर्नु पनि किन? राजालाई रंक बन्न र रंकलाई राजा बन्न केही समय लाग्दैन। अहिले धेरै वैभव छ तर केही क्षणमै नै 'अच्युतं केशवम्' पनि भइहाल्छ। तैपनि हामीले अभिमान किन गर्नु?

यशोदा दौड़ँदा थाकिन्। तैपनि कृष्णलाई समाउन सकिनन्। अब लट्ठी पनि बोझ जस्तो हुन लाग्यो। उनले लट्ठी फ्याँकिदिइन्। कृष्ण पनि यही चाहनु हुन्थ्यो 'आमाले लट्ठी ( अभिमान )-लाई छोड़िदिऊन्।' आमाले लट्ठी फ्याँकिदिएपछि कृष्ण रोकिनु मात्र भएन फर्कनुभयो। यशोदाले श्रीकृष्णको मुख देखिन्। मुख-दर्शन भयो र कृष्ण समातिनुभो। कृष्णको मुखमा धर्मनिहित छ।

## त्यक्त्वा यष्टिं

माता यशोदाले लट्ठी—( अभिमान ) त्यागिदिइन्, साधनारहित भइन् तब कृष्ण समातिनुभयो। व्यवहारमा, भक्तिमा दैन्य भावको आवश्यकता छ, जबसम्म जीवले अहन्ता-ममतालाई छोड्दैन तबसम्म भगवान् फेला पर्नुहुन्न जबसम्म 'म' कायम छ तबसम्म भगवत्-दर्शन हुन पाउँदैन। जहाँ 'म' छ त्यहाँ हरि छैन।

कृष्ण रुन थाल्नुभो। आमाले भनिन्—अँ मलाई थाहा छ। सिंत्तैमा रोइरहेछौ।

बाल मण्डलीलाई पीर पऱ्यो जो उनका अध्यक्ष समातिए। सबै बालाक यशोदाकहाँ आए र भन्न थाले—'माताजी कृष्णलाई नबाँध्नुस्। उनले केहि पनि खाएको छैन। सारा नौनी हामीलाई ख्वाइदिएको छ। उनको मन तर बड़ो कमलो छ।' यशोदाले सोचिन्—सबैले मन पराएको कृष्णलाई बाँध्नु ठीक होइन तर म अब के गरूँ? कृष्णको चोर्ने बानी छुटाउनु छ। केही समय यसलाई बाँधेर राख्छु पछि फुस्काइ दिउँला। यशोदाले सबै बालकहरूलाई हप्काइन्। बालकहरूले विचार गरे 'यशोदाले लालालाई पिट्ने छिन्।' त्यसकारण उनीहरूले नबाँध्ने नपिट्ने भनेर विन्ति गर्न लागे।

यशोदाले कृष्णलाई ओखलीमा बाँध्न थालिन्।

उता सबै बालकहरू दौड़ेर आ-आफ्ना घर गएर आ-आफ्नी आमालाई भन्न थाले—'आमा यशोदाले कृष्णलाई बाँधेर पिट्न थालेकी छन्।'

सबै गोपिनीहरू दगुर्दै यशोदाको घर आएर भन्न थाले—'माताजी, जब तिमीलाई पुत्र भएको थिएन त्यसबेला पुत्रका निमित्त पीर गरिरहन्थ्यौ र आज उसलाई बाँधेर पिट्न थालेकी छौ। हामी गरीब छौं। कृष्ण हामीकहाँ आएर सधैं मटकी फोर्दछ, दही-नौनी चोर्छ र पनि हामीले उसलाई बाँध्ने कुरा सोचेका पनि छैनौं। हामी तिमीलाई पाँच मटकी भरेर दही दिनेछौं तिमी यसलाई छोड़िदेऊ। उसले एकाध हाँड़ी फोरिदियो भने पनि के भयो? उसलाई छोड़िदेऊ।'

तर यशोदा आज रीसले चूर भएकी थिइन्। उनले गोपिनीहरूलाई भनिन्—'छोरो मेरो हो, म जे इच्छा लाग्छ गर्छु। तिमहरू को हौ बीचमा बोलिरहने?'

शुकदेवजी वर्णन गर्नुहुन्छ—'राजन् ! कालका पनि काल श्रीकृष्ण आज माताको क्रोध देखेर काँपिरहनुभएको छ।'

यशोदाजी बालकृष्णलाई ओखलमा बाँधिदिन थालिन्। अब आश्चर्यको कुरा यो भयो जति डोरी ल्याई जोड़ेर बाँधे पनि अन्तमा डोरी दुइ अङ्गुल छोटो हुने। एक-अर्कासँग जोड्दै गए पनि दुइ अङ्गुलभर छोटै हुन्थ्यो।

## तदपि द्व्यंगुलं न्यूनं यद् यदादत्त बन्धनम्।

एकका साथ दोस्रो, दोस्रोका साथ तेस्रो, यस प्रकार धेरै डोरीहरू जोड़िए तर दुइ अङ्गुलभर छोटै भयो।

श्रीकृष्णको स्पर्श हुनाकारण मानौँ डोरीको स्वभावै बदलिन्थ्यो।

यज्ञ गर्नाले, तीर्थयात्रा गर्नाले, ब्राह्मणहरूलाई भोजन गराउनाले स्वभाव सुध्रिने होइन तर हृदयपूर्वक जो भगवान्‌को ध्यान गर्छ, जो मनद्वारा परमात्मालाई भेट गर्छ उसैको स्वभाव बदलिन्छ। भगवत्-स्पर्शविना स्वभाव बदलिँदैन, ब्रह्मसम्बन्ध पछि अरू कुनै बन्धन हुन सक्छ र?

डोरीले बाँध्ने स्वभाव छोड़िदियो। डोरीहरूलाई श्रीकृष्णमाथि दया आयो। वैष्णव भन्छन्—'डोरीमा ऐश्वर्य शक्तिले प्रवेश गरेको थियो। जहाँ ईश्वर छ, त्यहाँ ऐश्वर्य पनि छ। ऐश्वर्य शक्तिलाई दुःख भइरहेछ जो एक साधारण ग्वालिनीले प्रभुलाई बाँधिरहिछ।'

गोपिनीहरू यशोदालाई भन्न लागे—'आमा तपाईं जेसुकै भन्नोस्। यी कृष्णको भाग्यमा बन्धन लेखेकै छैन। उनी तर हामी सबैलाई सांसारिक बन्धनहरूबाट छुटाउनलाई मात्र आएका हुन्।'

ऐश्वर्य शक्ति परमात्मालाई स्वामी मान्दछे। वात्सल्यशक्ति परमात्मालाई बाँध्न हिँड़ेकी छ। ऐश्वर्य शक्ति आफ्ना पतिलाई बन्धनमा हेर्न सक्तिन। ऐश्वर्य र वात्सल्य शक्तिको यो मीठो झगड़ा छ। प्रभुले ऐश्वर्य शक्तिलाई भन्नुभयो—'म यहाँ गोकुलमा ईश्वर होइन, यशोदाको बालकमात्र हुँ। म द्वारिकामा तिम्रो पति भएर आउनेछु।' तिमी गइहाल। मातालाई बाँध्ने इच्छा छ बाँध्न देऊ। गोकुलमा प्रेमको प्राधान्य छ र द्वारिकामा ऐश्वर्यको। व्रजमा तिम्रो आवश्यकता छैन।

गोकुल लीलामा वात्सल्यभाव र पौगन्ड लीलामा सख्यभाव प्रधान छ। गोपीलीलामा माधुर्य-भाव मुख्य छ।

ऐश्वर्य शक्तिले डोरीसँग विदा लिई। घरमा जति डोरी थियो समाप्त भयो, तैपनि कृष्ण बाँधिनुभएन। यशोदाजी आश्चर्यमा र गोपिनीहरू हास्यमा डुबे। गोपिनीहरू भनिरहेका थिए—मानौँ भगवान् यस किसिमबाट बाँधिन पनि सक्नुहुन्छ? भगवान् भनिरहनुभएको छ—'हाम्रा बीच केवल दुइ अङ्गुलको अन्तर छ।' यी दुइ अङ्गुल 'अहम्' र 'ममता' हुन्। जसको मनमा 'अहम्' र 'ममता' शेष छ उसले मलाई कहिल्यै बाँध्न सक्दैन।

परमात्मालाई त्रिगुणात्मक माया डोरीले बाँध्न सक्दैन। भगवान् केवल प्रेम-डोरीले बाँधिन्छन् र त्यो पनि उनको इच्छा भएमा मात्र।

श्रीकृष्णले देख्नुभयो, आमा थाकेर पसीनै-पसीना हुनुभएको छ। दयावश भएर बन्धनमा परिदिनुभयो। भगवान् भन्नुहुन्छ—'जब म कृपा गर्दछु तब बाँधिइन्छु।'

दृष्ट्वा परिश्रमं कृष्ण, कृपयाऽसीत् स्वबन्धने।

भगवान्लाई लौकिक डोरीले होइन, प्रेमको डोरीले मात्र बाँध्न सकिन्छ।

भक्तहरूको प्रेमका सिवाय अरू केहीले पनि मलाई बाँध्न सक्दैन।

जबसम्म ईश्वर कृपा गर्नुहुन्न तबसम्म उहाँलाई कोही पनि जीवले बाँध्न पाउँदैन।

कृष्ण स्वेच्छाले बाँधिइनुभयो।

जीव आफ्नो स्वार्थका निमित्त विविध बन्धनहरूमा कसिँदै रहन्छ। परमात्माले निस्पृह भएर पनि आज बन्धनलाई स्वीकार गर्नुभो।

जब भगवान् बाँधिइनुहुन्छ तब जीव बन्धनमुक्त हुन्छ र उसको उद्धार हुन्छ।

ज्ञान र योगले होइन, शुद्ध प्रेमलक्षण भक्तिले मात्र ईश्वरलाई बाँध्न सक्छ।

ईश्वर जबसम्म प्रेम-डोरीले बाँधिनुहुन्न तबसम्म जीवको मायाको बन्धन छुट्न पाउँदैन।

ईश्वरलाई उहाँको पेट वरिपरि जब बाँधियो तब उहाँको नाउँ दामोदर हुन गयो।

दामोदर भगवान्को जय !

जबसम्म परमात्मालाई प्रेमद्वारा बाँध्दैनौ, तबसम्म संसारको बन्धन बनिरहन्छ।

जसै ईश्वरलाई बाँध्न सक्यौ जन्म-मृत्युको बन्धनबाट छुट्कारा हुनेछ।

जसै ईश्वरलाई बाँध्न सकिएला तब जन्ममृत्युको बन्धनबाट छुट्कारा पाइन्छ। जसले ईश्वरलाई बाँध्न सक्छ, त्यो स्वयं छुट्दछ ( मुक्त हुन्छ )।

ईश्वर सर्वश्रेष्ठ किन हुनुहुन्छ ? कारण यो हो—उहाँ कुनै आग्रह या ममत्व राख्नुहुन्न। जीव आग्रही हुन्छ ईश्वर अनाग्रही। जीव दुराग्रही हो। आफ्नो जिद्दी छोड्दै छोड्दैन। जीव यदि अनाग्रही बन्न सक्यो भने ऊ ईश्वर बन्न सक्छ।

भगवान् भक्तहरूसित आग्रहका सामुन्ने झुक्नुहुन्छ। भक्तहरूको आग्रहको उहाँ आदर गर्नुहुन्छ। जीवले आफ्नो आग्रह घाँटीमै टाँसेर राखेको हुन्छ।

आमाको परिश्रमलाई देखेर कृष्ण बाँधिइनुभयो। यसप्रकार उहाँले देखाउनुभयो उहाँ भक्ताधीन हुनुहुन्छ। ईश्वरले आफ्नो आग्रहलाई छोड़िदिनुभयो।

भीष्म पितामहको प्रतिज्ञा पूर्ण गर्न श्रीकृष्णले आफ्नो प्रतिज्ञा भङ्ग गरेर शस्त्रधारण गर्नुभएको थियो, उहाँ हातमा चक्र लिएर भीष्मपितामहलाई मार्न भनी दगुर्नुभो। यस दृश्यलाई देखेर भीष्मले

भावविभोर भई धनुषबाण फ्याँकिदिएर भने—'वाह मेरा प्रभु ! धन्य हो मेरो प्रतिज्ञालाई सत्य पार्नका निमित्त तपाईंले आफ्नो प्रतिज्ञा भङ्ग गरिदिनुभयो।'

पूर्ण प्रेमका विना परमात्मा बाँधिइनुहुन्न। मनुष्यको प्रेम कैयौं भागमा बाँड़िएको हुन्छ। ऊ पत्नी, सन्तान, धन, सम्पत्ति, बनावटी शृङ्गार सबैसँग प्रेम गर्दछ। यदि उसले आफ्नो सारा प्रेम भगवान्‌लाई दियो भने भगवान् बाँधिइनुहुन्छ।

दामोदरलीलाद्वारा भगवान्‌ले यो भन्न खोज्नु भएको छ—जबसम्म जीवले 'ममता' र 'अहम्' छोड्दैन तबसम्म दुइ अङ्‌गुल भर अन्तर हुँदै गर्छ। यसप्रकार उहाँले जीवलाई भेट्नै पाउनु हुने भएन।

बालकृष्णले दयावश सोच्नुभो 'यदि मलाई बाँध्नाले आमा प्रसन्न हुनुहुने भए मलाई बाँध्नुहोस्।' बालकृष्ण बाँधिनुभो र यशोदाको इच्छा पूरा भयो।

परमात्मालाई ज्ञानीपुरुषले बाँध्न सक्छ र भक्तले प्रेमद्वारा बाँध्न सक्छ। विल्वमङ्गल जस्ता भक्तले भगवान्‌लाई हृदयभित्र बन्द गरिदिएको छ।

अन्धा विल्वमङ्गल हिँड्दा-हिँड्दा बाटामा एउटा खाल्डामा चिप्लिए। श्रीकृष्णले गोपबालकको रूप धारण गरेर उनको हात समाई बाहिर निकाल्नुभो। श्रीकृष्णको कोमल हस्त-स्पर्शले बिल्वमङ्गललाई लाग्यो 'यहाँ साक्षात् भगवान् हुनुहुन्छ।' उनले परिचय सोधे तब आफूलाई एउटा गोपबालक भनेर कृष्ण भाग्न लाग्नुभो।

विल्वमङ्गलले भने—'मेरो हात छोड़ेर तिमी कहाँ गइरहेछौ ? मेरो हृदयबाट पनि भाग तब जानूँ। मैले तिमीलाई आफ्नो हृदयमा बन्द गरिलिएको छु।'

हाथ छुड़ाए जात हो, निर्बल जानिके मोहिं।
जब हृदयसे जाओगे, सबल कहूँगा तोहिं॥

दामोदरलीलाको वर्णनमा महाप्रभुजी पागल जस्तो हुनुभएको छ। उहाँ भन्नुहुन्छ 'ज्ञान र तपमाथि भक्तिको विजयको कथा हो यो।'

श्रीकृष्णको मथुरा-गमनका समयमा यशोदाजीले उहाँसँग विन्ति गर्नुभएछ—'त्यो डोरीद्वारा बाँधिएको प्रसङ्ग बिर्सिदेऊ, मनमा नराख।' श्रीकृष्णले भन्नुभो—'मैले तर अहिल्यै बिर्सिसकेको छु। तर तपाईंले पनि बिर्सिदिनुहोला। म यही संझिराख्नेछु—कुनै समयमा मलाई प्रेमको डोरीले बाँध्नुभएको थियो। म द्वारिकाधीश बन्नेछु, छप्पन कोटी यादवहरूको राजा बन्नेछु, सोह्र हजार रानीहरूको पति बन्नेछु। फेरि पनि, म तपाईंको प्रेमको बन्धनमा बाँधिइनै रहने छु। तपाईं सिवाय अरू कसले मलाई बाँध्न सक्छ, मलाई अरू कसैले बाँध्न पनि सक्ने छैनन्। म अरू कसैको होइन, सोह्र हजार रानीहरूको होइन, केवल तिम्रो हुँ। तिम्रो प्रेम म कहिल्यै बिर्सन सक्दिनँ।'

यस चरित्रमा यशोदाको विजय छ। ज्ञान-तपश्चर्या होइन, भक्तिको विजय हो। आफ्नो तपका प्रभावले ज्ञानीजन परमात्माको दर्शन भने पाइहाल्छन् तर उनलाई बाँध्न भने पाउँदैनन्। तपस्वी भगवान्‌लाई चिन्न सक्छन्, बाँध्न सक्दैनन्। विशुद्ध भक्तिले मात्र उहाँलाई बाँध्न सक्छ। त्यसैले भगवान् भन्नुहुन्छ—'म मुक्ति दिन्छु तर भक्ति दिन्नँ। यदि भक्ति दान गरें भने आफू स्वयं बाँधिने हुन आउँछ।'

एकटपक भक्त दामाजीले कर चुक्ता गर्न नसक्दा यवनसैनिकले उनलाई बाँधेर राजदरबारमा लैजान थाले। दामाजीले सैनिकसँग प्रार्थना गरे 'बाटामा मलाई पंढरपुरको विठ्ठलनाथजीको दर्शन गर्न देऊ।' सैनिकले उनलाई मन्दिरमा लिएर गए। भक्तको यस्तो दयनीय दशा देखेर विठ्ठलनाथजीको मन पग्लियो। 'ओहो ! मेरो दामा बन्धनमा परेको छ।'

तब विठ्ठलनाथजी एउटा हरिजनको रूप लिएर राजदरबारमा पुग्नुभो। उहाँले आफ्नो नाउँ विठ्ठल चमार भने र दामाजीको सबै बाँकी कर बुझाइदिने इच्छा गर्नुभो।

यस प्रकार विठ्ठलनाथजीले आफ्नो भक्त दामाजीलाई बन्धनबाट मुक्त गरिदिनुभो।

भगवान्‌ले दामाजीलाई भक्ति दिएको थियो, उनलई चमारको रूप लिनुपरेको थियो। भक्तिले भगवान्‌लाई बाँध्दछ।

कृष्णलाई बाँधेर यशोदाजी भान्साघरमा गइन् तर उनको मन भने कृष्णमै बसिरह्यो—'कृष्णलाई बाँधेर असल भएको छैन तर म गरूँ पनि के? उसको चोर्ने बानी पनि छुटाउनै छ।'

कृष्ण बन्धनमा हुनुहुन्छ। सबै बालक पनि त्यहाँ बसिरहेछन्। कृष्ण, हाम्रो कारणले तपाईंलाई बाँधिनुपर्‍यो। तपाईंलाई कतै दुखेको छैन? कृष्णले सोच्नुभो—यदि 'अँ' भनौं भने सबैलाई दुःख हुनेछ, त्यसकारण उहाँले भन्नुभो—'छैन, म बरू ख्यालठट्टा गरिरहेको छु।'

जसरी वैष्णव प्रभुलाई दुःख हुन नदिनका निमित्त सावधान हुन्छन् उसरी प्रभु पनि वैष्णवलाई दुःखी हुन नदिनका निमित्त सावधान रहनुहुन्छ।

श्रीकृष्णले सोच्नुभो—'आज बयलगाड़ीको लीला गर्नुपर्‍यो। म गोरु बनूँ र ओखल गाड़ी। यस ओखललाई म बयलगाड़ीको जस्तो गरेर तान्दछु' भनेर कृष्णले त्यसै गर्न थाल्नुभो।

भगवान् दामोदर चाहनुहुन्छ—'मलाई चाहे बन्धनमा बाँधिनुपरोस् तर अन्य कोही जीवलाई बन्धनमुक्त गरिदिनै पर्छ।'

यशोदा पुष्टिभक्ति हो। पुष्टिभक्ति भगवान्‌लाई बाँध्दछ। जब उहाँ बाँधिनुहुन्छ तब जीव मुक्त हुन्छ। जबसम्म उहाँलाई प्रेम-डोरीले बाँध्दैनौं मायाको बन्धन छिनिँदैन। ईश्वरलाई प्रेमले बाँध।

नवौं अध्यायमा बन्धनलीला छ, दशौं अध्यायमा मोक्षलीला—यमलार्जुन मोक्ष-कथा।

कृष्ण ओखललाई तान्दै दुइ यमलार्जुन वृक्षहरूका बीचबाट अगाडि बढ्नुभो। ओखल वृक्षको बीचमा टेढ़ो भयो। कृष्णले डोरीलाई यति बेसरी तान्नुभो र ओखलले दुवै वृक्षहरूलाई उखेलेर लड़ाइदियो।

यमलार्जुन वृक्ष ढल्नासाथै दुइ तेजस्वी पुरुष प्रकट भए। यी पुरुष आफ्ना पूर्व जन्ममा राजा कुबेरका पुत्र थिए—नलकूबेर र मणिग्रीव। यी दुवै लक्ष्मीनन्दन यक्षलाई नारदको सरापका कारण वृक्षको अवतार लिनुपरेको थियो।

परीक्षितले सोधे—'नारदजीले उनलाई सराप किन दिएका थिए ?'

शुकदेवजी वर्णन गर्न लाग्नुभयो—'राजन् ! सुन्नुहोस्, नारदजीले क्रोधवश होइन, कृपापूर्वक उनलाई सराप दिएका थिए।'

नलकूबर र मणिग्रीव कुबेरका पुत्र थिए, पिताको अपार सम्पत्ति उनले भेट्टाए। सम्पत्तिको बाहुल्य राम्रो भएन। सम्पत्तिको बाहुल्य द्यूत ( जूवा ), व्यभिचार, मासु-रक्सी आदि गुणहरूका जन्मदाता हो। सम्पत्तिको अतिशयता र सन्मति प्रायः साथ-साथ रहन सक्दैन। सम्पत्तिको बाहुल्य भएपछि मानिस तामस आहार, मदिरापान, व्यभिचार आदि दुर्गुणहरूमा फँस्दछ र सद्वर्तनको उच्छेदजस्तो हुन जान्छ।

पतिपत्नीको सम्बन्ध केवल कामसुखका निमित्त होइन, धर्माचरणका निमित्त हो। सुशीला पत्नी आफ्ना पतिलाई पापाचार गर्नबाट रोक्छिन्।

यी दुवै कुबेरपुत्रले धनको मदमा होशै गुमाएका थिए। मदिरापान गरेर गङ्गाकिनारमा आएर गङ्गाको पवित्र जलमा युवती-स्त्रीहरूका साथ नग्नावस्थामा जलक्रीड़ा गर्न थाले।

विलासीले तीर्थको मर्यादाको पनि पालन गर्दैन। महाप्रभुले बड़ो दुःखसाथ भनेका छन्—जबदेखि विलासीहरू तीर्थमा बस्न थालेका छन् तबदेखि देवगण तीर्थभित्रबाट बिदा भएका छन्।

गंगादि तीर्थवर्चेषु दुष्टैरेवावृतेश्विह।
तिरोहिताधिदैवेषु कृष्ण एव गतिर्मम॥

देवर्षि नारदजी त्यही बाटो गरी गइरहनु भएको थियो। उनलाई यस्तो दृश्य देखेर दुःख लाग्यो। नारदजीलाई देखेर पनि उनले शरीर ढाकेनन्। नारदजीले सोच्नुभयो—यति राम्रो शरीर पाएका छन् र पनि यिनीहरू त्यसको दुरुपयोग गरिरहेछन्।

यो शरीर भगवान्‌को हो। भगवान्‌कै सेवा गर्नलाई जीवलाई दिइएको हो।

नारदजी भन्नुहुन्छ—यस शरीरको अन्त्यमा के दशा होला ? या उसलाई पशु-पक्षीले खालान् या खरानी भएर थुप्रो लाग्ला।

सम्पत्तिको मदमा मानिस आफ्नो शरीरलाई अजरामर मात्र थाल्छन् र अन्य मानिस अथवा प्राणिहरूलाई सताउन लाग्छन्। यो शरीर हो कसको ? यसमा कसको अधिकार छ ? के यो आमाको हो ? के पिताको हो ? के यो शरीर आफ्नो हो ?

पिता—मेरो वीर्यबाट उत्पन्न हुनाकारण यो शरीर मेरो हो।

माता—मेरो गर्भमा रहेर जन्मेकोले मेरो हो।

पत्नी—यस शरीरलाई आफ्नो बनाउनका निमित्त आफ्ना बाबु-आमालाई छोड़ेर यहाँ आएकी छु। यसका साथ मेरो विवाह भएको छ। यो मेरो अर्धाङ्ग भएको छ। त्यस कारण यो शरीर मेरै हो।

अग्नि—यदि यस शरीरमा माता-पिता, पत्नीको अधिकार छ भने प्राण निर्गमन पश्चात् उनीहरू आफ्ना साथ नराखेर बाहिर निकाली दिन्छन् ? यस शरीरमा मेरै अधिकार हुनाको कारणले यसलाई श्मशानमा मलाई सुम्पिने गरेको छ।

श्याल, कुकुर—अग्निसंस्कार नगरेमा यो शरीर हामीले खान पाउँछौं, त्यस कारण उसमाथि हाम्रो पनि अधिकार छ।

यसप्रकार यस शरीरमा हरेक-कोहीले आफ्नो अधिकार जमाउँछ। केही बुझ्न सकिएन यसमा वस्तुतः कसको अधिकार छ।

प्रभु भन्नुहुन्छ—यो शरीर कसैको पनि होइन। मैले जीवलाई यो शरीर दिएको हुँ।

देवदत्तमियं लब्ध्वा नृलोक मजितेन्द्रियः।
यो नाद्रियेत त्वत्पादौ स शोच्यो स्यात्म वञ्चकः॥

यो मानव शरीर तपाईंले अत्यन्त कृपा गरेर संसारका मानवहरूलाई दिएको छ, जो मानिस यसलाई प्राप्त गरेर आफ्ना इन्द्रियहरूलाई नियन्त्रणमा राख्दैन तथा तपाईंका चरणहरूमा शरण पर्दैन त्यसको जीवन अत्यन्त सोचनीय हुन्छ। त्यसले स्वयं आफूले आफूलाई धोका दिइरहेछ, यो शरीर सांसारिक सुखोपभोगका निमित्त दिइएको छैन।

श्रीरामचरित मानसमा भनिएको छ—

आकर चारि लच्छ चौरासी। जोनि भ्रमत यह जीव अविनाशी॥
कबहुँक करि करुणा नरदेही। देत ईश बिनु हेतु सनेही॥
नर तनु भव वारिधि कहुँ बेरो। सम्मुख मरुत अनुग्रह मेरो॥
जो न तरै भवसागर, नर समाज अस पाई।
सो कृत निंदक मन्द मति, आत्माहन गति जाई॥

सय रुपियाँको नोट फाटेको छ र तेलको दाग पनि लागेको छ तर उसको नम्बर ठीक भएका खण्डमा कसैले फ्याँक्दैन। यसै प्रकार यो शरीर मैलो भएमा पनि उसको नम्बर ठीकै रहन्छ। यसै शरीरले भगवान्‌को जप गरिन्छ। भगवान्‌को जपको आनन्द मात्र मानिसलाई मिल्न सक्छ, कुकुर-बिरालो भजन गर्न सक्दैन, पशुहरूलाई आफ्नै शरीरको, आफ्नै स्वरूपको भान छैन भने भगवान्‌का स्वरूपको जानकारी तब कसरी पाउन सक्छन्? केवल मनुष्यले मात्र भगवान्‌को स्वरूपलाई थाहा पाउन सक्छ।

यस अनित्य शरीरबाट नित्य परमेश्वरलाई प्राप्त गर्न सकिन्छ।

यो शरीर परमात्माको कामका निमित्त हो, प्रभुको कृपाबाटै पाइएको छ। मदान्ध मानिस यस कुरालाई या जान्दै जान्दैनन् या जानेर पनि बिर्सिन्छन्।

ती कुबेरपुत्रको हीन दृश्य देखेर नारदजीलाई दया आयो। उनलाई सन्मार्गमा लैजानका निमित्त उहाँले सराप दिनु भयो।

यस शरीरको उपयोग भोग-विलास मात्रका निमित्त गर्ने व्यक्ति आगामी जन्ममा वृक्ष हुन्छ। भोग यसरी नगर्नु जसले शरीरै रोगी होस्। भोग इन्द्रियहरूलाई रोगी बनाउनका निमित्त होइन, उनलाई प्रसन्न तुल्याउनका निमित्त हो।

समय र सम्पत्तिको उपयोग भोग-विलासमा मात्र गर्ने व्यक्ति आगामी जन्ममा वृक्ष बन्दछ। पापीले वृक्षको जन्म पाउँछ। वृक्ष जड़ होइन तर पाप योनि हो। वृक्षलाई ६ ऋतुहरूमा भाँति-भाँतिका प्रहार सहनुपर्दछ।

नारदजीले सराप दिनुभयो—'यी दुवै यक्ष सम्पत्तिको कारण मन्दान्ध, स्त्री-भोगी, विलासी भएका छन् र स्थावरपन प्राप्त गर्न योग्य पनि भए। त्यसकारण यस्ता भोगीहरूलाई वृक्षको जन्म मिलोस्।'

सराप सुन्नासाथ नलकूबर र मणिग्रीव पछुताउन लागे। उनीहरू नारदजीको शरणमा आए। 'क्षमा गर्नुहोस्, मुनिवर! क्षमा गर्नुहोस्!'

नारदजीले कृपा गरेर ती दुवैलाई गोकुलमा वृक्षावतार दिए। नन्दबाबाको आँगनमा तिमी दुवैको जन्म होस् र कृष्णको चरण-स्पर्शले तिम्रो उद्धार गर्ने छ।

त्यो सराप थियो या आशीर्वाद? उद्धवजस्ता साधुजन पनि वृन्दावनमा वृक्षको रूपमा जन्म लिन चाहनुहुन्छ।

विषयभोगमा रमिनेलाई आगामी जन्ममा वृक्षको योनि लिनुपर्छ।

नारदजीले सराप दिनुभयो तर सन्तहरूको क्रोध, सन्तहरूको सराप पनि सँधै आशीर्वाद जस्तो हुन्छ। गोकुलमा वृक्षहरूको जन्म लिने अभिलाषा महान् ऋषिहरूको पनि हुन्छ। उद्धवजी भन्नुहुन्छ—

**आसामहो चरणरेणुजुषामहं स्याँ वृंदावने किमपि गुल्मलतौषधीनाम्।**
**या दुस्त्यजं स्वजनमार्य पथं च हित्वा भेजुर्मुकुन्द पदवीं श्रुतिभिर्विमृग्याम्॥**

अहा ! अत्याज्य स्वजन र आर्यमार्गको त्याग गरेर, वेदहरूका निमित्त पनि खोज्न योग्य श्रीकृष्णको पदवी यी गोपिनीहरूले पाएका छन्। यस्ता गोपिनीहरूका चरणरजबाट लाभान्वित वृक्षराशी, लता, औषधि आदि कुनै पनि रूपमा वृन्दावनमा मेरो जन्म होस्, यस्तो मेरो प्रार्थना छ।

कृष्णको चरण-स्पर्श पाउनासाथै नलकूबर र मणिग्रीवले आफ्नो मूल स्वरूप प्राप्त गरे। दुवै वृक्षहरूको उद्धार भयो। अब नलकूबर र मणिग्रीवले प्रभुको स्तुति गर्न लागे—

**वाणी गुणनुकथने श्रवणौ कथायां हस्तौ च कर्मसु मनस्तव पादयोर्नः।**
**स्मृत्यां शिरस्तव निवासजगत्मणमे दृष्टिः सतां दर्शनेऽस्तु भवत्तनूनाम्॥**

भा० १०-१०-३८

हे प्रभु ! तपाईंसँग हामी अरू केही माग्दैनौं, हाम्रा वाणी तपाईंका गुणगानमा रत रहुन्। हाम्रा कान तपाईंका कथाको श्रवणमा लीन हुन्, हाम्रा हात तपाईंका सेवा कर्ममा, हाम्रो मन तपाईंको चरण स्मरणमा, हाम्रा शिर तपाईंको निवासरूप जगत्‌लाई प्रणाम गर्नमा र हाम्रा दृष्टि तपाईंको मूर्तिरूप सन्तपुरुषको दर्शन गर्नमा तत्पर रहुन्। हे नाथ, यही कृपा हामीमाथि रहोस्।

यो प्रार्थना तर हामी सबैले गर्नुपर्छ।

हाम्रा वाणीले श्रीकृष्णको कीर्तन गरिरहोस्, आँखाले श्रीकृष्णको दर्शन गरिरहुन् र मनले श्रीकृष्णको ध्यान गरिरहुन्। हामीले आफ्ना प्रत्येक इन्द्रियलाई भक्ति रसको दान गर्नुपर्छ।

नलकूबर र मणिग्रीवले आफ्ना प्रत्येक इन्द्रियका निमित्त भक्तिरसको माग गरेर स्तुति गर्दै गोलोकवासी भए।

गोलोकधाममा श्रीकृष्णलीला नित्य भइरहन्छ। ती दुवै स्निग्ध र मधुकण्ठ बने। ती दुवै वहाँ सधैं कीर्तन गर्छन्। स्निग्ध र मधुकण्ठले भने—अक्रूर श्रीकृष्णलाई मथुरा लैजान लागेका छन्। यशोदा यो कुरा सुनेर व्यग्र भइन्। स्निग्ध र मधुकण्ठले भने—'यो पृथ्वी रचिएको लीला हो। कृष्ण तर तपाईंका काखैमा छन्।'

योगमायाले दुवै वृक्षलाई ढल्न दिएको थिएन। नलकूबर र मणिग्रीव गोलोकधाममा पुग्नासाथै दुवै वृक्ष ठूलो आवाज गरेर ढलेथे। त्यो आवाज सुनेर गोपिनीहरू दौड़िँदै आए। भगवान्‌को दयाले कृष्ण बाँचेछन्—यो कुरा थाहा पाएर उनीहरूलाई आनन्दको अनुभव भयो।

नन्दबाबा पनि दौड़िँदै आइपुग्नुभयो। कृष्ण ओखली साथ बाँधिइरहेको देख्नुभयो। 'कसले बाँधेको ?' उनले कृष्णको बन्धन खोलिदिनु भयो।

नन्दबाबा भन्न थाल्नुभयो—'छोरा, तिमीलाई तिम्री आमाले बाँधिदिएकी थिइन् हैन? हेर त मैले तिमीलाई फुकाइदिएँ। तिमी कसका छोरा?' कृष्ण—'आजसम्म म आफ्नी आमाको छोरो थिएँ, अब म आजदेखि तपाईंको छोरो हूँ।'

नन्दबाबालाई एकपटक छोराले म तपाईंको छोरा हुँ भनिदेओस् भन्ने इच्छा थियो। आज उनको इच्छा पूरा भयो।

नन्दबाबाले यशोदालाई हप्काउन थाल्नुभयो। कृष्णलाई तिमीले किन बाँध्यौ? तिमीलाई दया पनि आएन? यशोदाले सोचिन् आज सबै मसँग रिसाउने भए। मेरो त्यस्तो इच्छा केही थिएन उसलाई बाँध्ने तर चोरी गर्ने बानी भएको र यस्तो नराम्रो बानी हटाउनलाई मैले बाँधेकी हुँ। मैले उसलाई स्नेहवश बाँधेकी हुँ।

यशोदाले छोरालाई आफ्ना नजिक बोलाउन खोजिन् तब कृष्णले मान्नु भएन—'म तपाईंको होइन, नन्दबाबाको छोरो हुँ।'

यशोदा विचार गर्न लागिन् 'गोपिनीहरू र बालकहरूले रोई-रोईकन नगर भनेका थिए तर पनि मैले निष्ठुर भएर पुत्रलाई बाँधिदिएँ। कृष्ण रिसाएको छ। छोरो मेरो काखमा कहिले आउला' भनेर उनी रुन लागिन्।

आमा रोइरहेकी कृष्णले देख्नुभो।

भगवान् वैष्णवले रोएको हेर्न सक्नुहुन्न। श्रीकृष्ण जस्तो प्रेम अरू कसैले गर्न सक्दैन। श्रीकृष्णका निमित्त जसले एकान्तमा बसेर रुन्छ ऊसँग उहाँ आएर भेट्नु हुन्छ।

आमाले रोएको कृष्णले हेर्न सक्नु भएन। उहाँ दौड़िएर आमाको काखमा आएर पीताम्बरले आँसु पुछिदिन थाल्नुभो। 'मेरो छोरा कति लायक। मैले तिमीलाई बाँधेर असर गरिनथें। तिमीले आफ्नो मनमा यो कुरा नलिनू। यस प्रसङ्गलाई तिमीले मनबाट बिर्सिदेऊ।'

कन्हैया—'माता, म सबै कुरा बिर्सौंला, तर तपाईंको प्यार कहिल्यै पनि बिर्सन सक्दिनँ। म केही समयमा द्वारिकानगरीको राजा हुनेछु। वहाँ पनि म तपाईंको यो प्रेमको बन्धनलाई संझिरहने छु। रुक्मिणी आदि कसैको पनि बन्धनमा म पर्ने छैन तर तपाईंको प्रेमको बन्धनलाई बिर्सन सक्ने छैनँ।'

यो गोकुलको एउटा मुख्य लीला हो। ज्ञानी ईश्वरको साक्षात्कार गर्न सक्छ, तर उहाँलाई बाँध्ने शक्ति ज्ञानमा छैन। भगवान्लाई केवल भक्तिले मात्र बाँध्न सक्छ। ज्ञानी ब्रह्मको चिन्तन गर्दै ब्रह्ममय हुन पाउँछ तर भगवान्लाई वशमा भक्तिले मात्र गर्न सक्छ। तप र ज्ञानको अपेक्षा भक्ति श्रेष्ठ छ।

परमात्मा जीवमात्रलाई आफ्नो प्रेमद्वारा सरावोर गर्दिनुहुन्छ, तर जीव यस्तो दुष्ट छ जो प्रभुका साथ प्रेम गर्दै गर्दैन। प्रभुका प्रति प्रेम जगाउनलाई प्रभुका उपकारहरूको बारम्बार स्मरण गर। म

परमात्माको ऋणी छु। उहाँको कृपाबाटै यो थोर-बहुत सुख पाउन सकेको छु। यस्तो विचार बराबर गऱ्यौ भने तब प्रभुसँग प्रेम हुन सक्ला।

प्राप्त स्थितिमा सन्तोष मान्यौ भने प्रभुप्रेमको उदय होला। परमात्मासँग केही नमाग। परमात्मा पनि अरू कसैसँग प्रेमका सिवाय अरू केही पनि माग्नुहुन्न। जीवले मलाई प्रेम दियो भने भइहाल्यो।

प्रभुसँग केही पनि नमाग। उहाँका उपकारहरूलाई सदा संझना गर। मनुष्यको प्रेम, धन, सम्पत्ति, घर-गृहस्थी, कुटुम्ब आदिमा विभक्त हुन्छ। त्यसकारण परमात्मा प्रसन्न हुनुहुन्न। मानिस भगवान्लाई प्रणाम गर्दा भगवान्को होइन् आफ्ना वस्त्रहरूको विशेष ध्यान राख्छ। अरे, लुगा बिग्रियो भने बजारबाट अर्को ल्याउन सकिन्छ, तर हृदय बजारमा पाईंदैन।

ज्ञानी-भक्त प्रेम-डोरीद्वारा प्रभुलाई बाँध्दछ। भगवान् केवल प्रेमको वशमा मात्र पाइनुहुन्छ, अन्य कुनैको पनि वशमा हुनुहुन्न।

भागवत्मा हास्य, करुण, शृङ्गार, वीर आदि सबै रस छन्। यतिमात्र होइन दशौं रस पनि छताछुल्ल भएर भरिएको छ—भक्तिरस।

भक्तिरस अन्य सबै रसहरूभन्दा उत्तम हो। रामचरितमानसमा रामचन्द्रजी भन्नुहुन्छ—मलाई भक्तिमात्रले पगाल्न सक्छ। भक्तिलाई अरू कुनै कुराको आलम्बनको आवश्यकता पर्दैन। त्यो स्वतन्त्र छ। ज्ञान-विज्ञान आदि सबै कुरा यसै भक्तिका अधीन छन्।

जाते बेगि द्रवउँ मै भाई। सो मम भगति भगत सुखदाई॥
सो सुतंत्र अवलम्ब न आना। तेहि अधीन ग्यान-विग्याना॥

यस्तो छ भक्तिको महिमा। ज्ञानी मायाको आवरणयुक्त ब्रह्मको दर्शन गर्दछन्। ज्ञानीलाई कीर्ति आदिको चाहना हुन्छ। निरावृत, आवरणरहित ब्रह्मको साक्षात्कार केवल गोपिनीहरूले गरेका छन्। जबसम्म जीव निर्दोष हुन पाउँदैन तबसम्म ईश्वरको दर्शन पाउन सक्दैन।

साधु बन्ने होइन तर सरल हुने आवश्यकता छ। भित्रका विकारहरूलाई हटाउनै पर्छ।

दुवै वृक्षको उद्धार भयो। तर त्यो ओखलको उद्धार किन भएन?

श्रीकृष्ण दुवै वृक्षका बीचबाट पारि गइसक्नु भयो तर मुसल टेढ़ो परेर त्यतैपट्टि रहन गएको थियो। जसको अन्तर देहमा भगवान्को प्रवेश हुन्छ उसको उद्धार भइहाल्छ। यदि उहाँ हाम्रा अन्तरमा आउनुभयो भने हाम्रो पनि उद्धार हुनेछ।

दामोदरलीलाद्वारा भगवान् जगत्लाई भन्नुहुन्छ 'जब जीव मलाई बाँध्छ तब म उसलाई बन्धनबाट छुटाउनेछु।'

शुकदेवजी वर्णन गरिरहनुभएको छ—

कैयौं पटक गोपिनीहरू यशोदाको घर आएर कृष्णलाई आफ्ना घर लैजान खोज्थे। कृष्ण तपाईं मेरो घर जानुहुन्छ ? कृष्ण प्रश्न गर्थे—तिम्रो घर म आउँछु, तर तिमीले मलाई के दिन्छ्यौ ? गोपिनीहरूले सोध्थे 'के चाहिन्छ तपाईंलाई ?' कृष्ण—'नौनी। कति दिन्छ्यौ ?' गोपिनीहरूले सोध्थे—'कति चाहियो ?' कृष्ण दुवै हात देखाएर भन्नुहुन्थ्यो। गोपी सोध्थे—'यति धेरै नौनी तपाईं कसरी खाइसक्नुहोला ?'

कृष्ण—'म तर खान चाहिँ अलिकति पनि खान्नँ। मलाई आफ्ना मित्रहरूलाई नौनी बाँड्नु छ। आफ्ना मित्रहरूलाई ख्वाउनु छ।'

ईश्वर अरूहरूलाई दिएर प्रसन्न हुनुहुन्छ। खानेवालाको अपेक्षा अरूलाई प्रेमपूर्वक खुवाउनेलाई ज्यादा आनन्द हुन्छ।

मन नौनीजस्तो नरम र जीवन मिश्री जस्तो मधुर हुन गएका खण्डमा कृष्ण अवश्य आउनुहुन्छ।

गोपिनीले सोचे—यिनलाई नौनी दिऊँ भने लिएर तुरुन्त हिँड़िहाल्छन्, गइहाल्छन्। केही बेर रोक्नुपर्छ। उनले भने—'कृष्ण, नौनी सित्तै पाईंदैन, तपाईंले मेरो घरको केही न केही काम पनि गर्नुपर्छ।' कृष्णले सोध्नुभो—'कुनचाहिँ काम मैले गर्नुपर्छ ?' गोपीले भने—'जानुहोस्, त्यो कुँड़े लिएर आउनुहोस्।' त्यसो तर त्यो चीज बड़ो गह्रौं थियो तर कृष्णले सोच्नुभो—त्यसलाई उठाएर लगें भने सबै बालकहरूलाई नौनी खुवाउन सकुँला। त्यो कुँड़े गह्रौं थियो, हातबाट फुस्क्यो र कृष्णको पीताम्बर पनि खुस्क्यो।

ब्रह्मज्ञान प्राप्त भएपछि पनि अविद्याको अंश बाँकी रहन्छ, किनभने प्रारब्ध कर्म तर भोग्नैपर्छ। अज्ञानको पूर्ण नाश भएका खण्डमा प्रारब्ध कसले भोग्ला ? ब्रह्मज्ञानले प्रारब्ध कर्मको नाश हुन पाउँदैन। ब्रह्म ज्ञानद्वारा क्रियमाण र सञ्चित कर्महरूको नाश हुन्छ। जबसम्म यस देहको प्रारब्ध छ तबसम्म अविद्या शेष रहन्छ। प्रारब्धकर्मको भोगपछि उसको नाश हुन्छ। ज्ञानीलाई ब्रह्मसाक्षात्कार भएपछि अविद्याको अंश बाँकी रहन्छ र केही आवरणका साथ साक्षात्कार हुन्छ। तर यी ब्रजभक्तहरूलाई तब अनावृत्त श्रीकृष्णको दर्शन हुन्छ।

त्यसो तर दुर्योधनलाई पनि श्रीकृष्ण भगवान्‌को दर्शन भएको थियो तर बीचमा मायाको आवरण भएकोले उसको उद्धार हुन पाएन।

कृष्णले भाँड़ो ल्याएर नौनी माग्नुभो। गोपीले भने—'कृष्ण, तपाईं अब एक पटक नाच्नु होस्।' नौनीको लोभले कृष्ण नाच्नुभो। जगत्‌लाई नचाउने नटवर, गोपीको प्रेमको वशीभूत भएर स्वयं नाचिरहनुभएको छ।

कवि रसखान भन्दछन्—

**शेष, महेश, गणेश, दिनेश, सुरेशहु जाहि निरन्तर गावैं।**
**जहि अनादि अनन्त अखण्ड अछेद अभेद सुवेद बतावैं॥**

**नारदसे शुक व्यास रटैं पचिहारे तऊ पुनि पार न पावैं।**
**ताहि अहीरकी छोहरियाँ छछिया भरि छाछ पै नाच नचावैं॥**

गोपिनीहरूका प्रेमद्वारा बाँधिएका श्रीकृष्ण उनका घरको काम गरिरहनुहुन्छ। गोपिनीहरूका शिरमा पानीको गाग्रो चढ़ाइदिनुहुन्छ, सामान यताको उता गर्नमा मद्दत गरिदिनुहुन्छ, उनका मनोरंजनका निमित्त नाची पनि दिनुहुन्छ।

व्रजको यस लीलामा ज्ञान वैराग्य होइन, प्रेमभाव मुख्य छ।

यी लीलाहरूमा एउटा मालिनीको पनि प्रसङ्ग छ। ब्रजमा एउटी सुखिया नाउँ गरेकी मालिनी थिई जो सधैं कृष्णकथा सुन्थी। भक्ति उसका निमित्त एउटा व्यसनजस्तो भएको थियो। तुकाराममलाई पनि व्यसनरूपा भक्ति सिद्ध भएको थियो।

**पटले इन्द्रिया सकला वलण।**

सबै इन्द्रियहरूलाई यस्तो बानीजस्तो भएको छ जो ईश्वरको भजनविना तिनीहरू रहनै सक्दैनन्।

मालिनीको प्रेम बिस्तार-बिस्तार बढ्न लाग्यो। श्रवण-भक्ति व्यसनजस्तो भयो।

भक्तिको व्यसन सिद्ध गर। अन्य सबै व्यसन भक्ति-मार्गमा बाधारूप छन्, अतः भक्तिलाई व्यसन बनाइदेऊ। 'विद्याभ्यसनं' अथवा 'हरिपादसेवनं व्यसनम्।' जसलाई सेवा र स्मरणको व्यसन हुन्छ त्यही सच्चा वैष्णव हो। कृष्ण कानभित्रबाट, आँखाहरूद्वारा हृदयमा प्रवेश गर्नुहुन्छ। बारंबार सुन्नाले मात्र कृष्ण दर्शनको उत्कण्ठा हुन्छ।

कृष्ण दर्शनका निमित्त सुखिया आउँछे।

अधिकारका विना भगवान्‌को दर्शन पाईदैन। यदि सुख सुविधाको इच्छा बनिरहन्छ भने भगवान्‌को दर्शन हुँदैन। जीव जब पूर्णतः निष्काम र वासनारहित बन्दछ, तब उहाँले दर्शन दिनुहुन्छ। ईश्वर दर्शनका सिवाय अन्य कोही पनि वासना सूक्ष्मरूपबाट पनि शेष रह्यो भने तब ईश्वर दर्शन हुँदैन।

सुखिया मालिनी नन्दबाबाको आँगनमा आउने-जाने गर्थी, तर कृष्ण बाहिर निस्कँदै निस्कन्नथे। त्यसो हुनाले उसले कुनै भूदेवसँग कृष्णदर्शनको उपाय सोधी। भूदेव यो सुनेर प्रसन्न भए, यो एउटा जिज्ञासु र सुपात्र जीव रहिछ। उनले सुखियालाई भने—'आफ्नो घरमा बालकृष्णाको सेवा, साधना, स्मरण गर्दै रह्यौ भने उनी प्रसन्न हुनेछन्।'

ईश्वरलाई वशमा गर्ने एउटा राम्रो साधन हो—सेवा-स्मरण। आग्रह सेवास्मरणको राख, ईश्वरदर्शनको होइन। जीवले पात्रता पाउनासाथ ईश्वर उसलाई दर्शन दिनुहुन्छ। लामा-लामा दाह्रीवाल साधु-सन्त पनि दर्शनका निमित्त आउँथे। कृष्ण सोच्नुहुन्थ्यो—'यी साधुहरूका दाह्री

जति बाहिर छ उतिनै भित्र पनि हुन सक्छ। भित्रको कामविकार शायद अझै पनि बाँकी छ होला।' यशोदाजी कहिले उहाँलाई जबरजस्ती बाहिर ल्याउन खोज्नुहुन्थ्यो तब उहाँ आफ्नो जीउ बटारेर आमाको सारीमा मुख लुकाउनुहुन्थ्यो। ती साधु अझै पनि मुखदर्शन पाउनका निमित्त योग्य भएका थिएनन्।

भगवान् तनको कुरा पनि जान्नुहुन्छ र मनको पनि। पात्रता नपाईकन जीव ईश्वरको दर्शन पाउन सक्दैन।

मालिनीले भनी, 'म सेवा कसरी गरूँ ? म बड़ो गरीब छु।'

भूदेव—'तिमीले सधैं एक्काईस हजार माला जप्नू।' केही साधन त गर्नैपर्छ। साधन गर्दा-गर्दा जब जीवले नम्र भएर आँसु बगाउन थाल्छ अनि ईश्वर कृपा गर्नुहुन्छ।

कथा श्रवणपछि केही व्रत-नियमको पालन गर्नुपर्छ। कथा मार्गदर्शिका हो। कथा श्रवण गरेपछि केही व्रत गर।

मालिनीलाई भाँति-भाँतिका साधन सिकाइयो तर ती सबै उसका निमित्त अनुकूल भएनन्। तब भूदेवले भने—'यदि तिमी केही गर्न सक्दिनौ भने कम से कम नन्दबाबाको घरको प्रतिदिन एक सय आठ पटक प्रदक्षिणा गर।'

प्रणाम साष्टाङ्ग गरिन्छ र प्रदक्षिणा चतुरङ्ग। प्रदक्षिणा गर्दा हात जोड़ी वन्दना गर्दै प्रभुको नाउँ जप्दै रहनु। कीर्तन गर्दै-गर्दै विस्तार-विस्तार प्रदक्षिणा गरियोस्। कोही-कोही यसरी दगुर्दै प्रदक्षिणा गर्छन् मानौं उनका पछि-पछि कुनै भूत दौड़िंदै आइरहेको छ कि ? प्रदक्षिणामा यस्तो भागाभाग गर्ने काम ठीक होइन।

तीन वर्षसम्म प्रदक्षिणाको यो नियम बनाइराख्नु। कृष्णाले अवश्य दया गर्नेछन्। यस्तै किसिमबाट मालिनी रोज प्रदक्षिणा गर्न थालिन्।

मनुष्य प्रायः आफ्नो दैनिक कार्य नियमपूर्वक गर्दछ। निद्रा र भोजनमा ऊ कड़ा नियम पालन गर्छ तर भजनमा उसको नियमितता कता गयो ?

भजन नगरीकन खानेले पाप खाएको हुन्छ। मानिसले जति यादविचार आफ्नो लुगाको गर्छ, उत्तिकै देखभाल आफ्नो मनलाई पनि गर्न सक्यो भने मलिन हुन पाउँदैन थियो।

सत्कर्ममा नियमितता हुनुपर्छ। नियमित सत्कर्म गर्ने मात्र सन्त हो। नियम बनाउनेवालाको परीक्षा पनि भगवान् लिनुहुन्छ।

मालिनी सधैं परमात्मासँग पुकारा गर्थी—नाथ ! दर्शन पाऊँ।

तीन वर्ष पूरा भयो र अब कृष्णाविरह असह्य भएको छ। उसको मन पनि शुद्ध भएको छ। आज उसले निश्चय गरेकी छ—'जबसम्म कृष्णाको दर्शन पाउन्नँ तबसम्म नन्दबाबाको आँगनबाट हट्ने छैन।'

जीव जब वियोगाग्निमा छटपटाउन थाल्छ तब भगवान् भेटिनुहुन्छ।

आफ्नो शिरमा फल-फूलको टोकरी उठाएर सुखिया मालिनी प्रदक्षिणा गर्न लागी। परमात्मालाई शबरीको बयर संझना भयो। 'दर्शनातुर मालिनीलाई मैले दर्शन दिनुपर्नेछ। कम्मरमा सुनको कन्दनी, हृदयमा बाजुबन्द, गलामा कण्ठी, पाउमा पाउजेब, सिरमा मयूरपंखले विभूषित बालकृष्ण छुमुक-छुमुक गर्दै आँगनमा आउनुभयो।'

दर्शनातुर मालिनीका सामुन्ने आएर, हात पसारेर कृष्ण फल माग्न लाग्नुभो। बालकृष्णसँग मालिनी पनि कुरा गर्न आतुरिएकी थिई, आफ्नो सुख-दुःखको कुरा कृष्णलाई एकान्तमा भन्न। आफ्नो दुःखको कथा कृष्णका सिवाय अरू कसैलाई नभन्नु। उहाँले तिमीलाई सुख दिनुहुनेछ।

मालिनीले सोची कृष्णको हातमा फल दिएँ भने तब उहाँ तुरुन्त फर्की भित्र जानुहुनेछ। त्यसकारण उहाँलाई कुरैकुराबाट रोक्न थाली। 'म फल दिन आएकी होइन बेच्न आएकी हुँ। फल लेऊ, अन्न देऊ।' फेरि उसलाई दुःख पनि लाग्यो मैले अन्न किन मागें ? उसको कुनै सन्तान थिएन। 'यदि मेरो घरमा पुत्र भएको भए। म बड़ी पापिनी रहिछु। श्रीकृष्ण दयालु र प्रेमी हुनुहुन्छ। उहाँ मेरो काखमा आए उहाँलाई प्रेम गर्ने थिएँ।'

बालकृष्णले दगुर्दै गएर दुइ मुट्ठी चामल लिएर आई मालिनीको टोकरीमा राखिदिनुभो। 'अब फल देऊ।' मालिनीले भनी—'पुत्र मेरो काखमा आई बस, म तिमीसँग सुख-दुःखका कुराहरू गर्न चाहन्छु।' तब कृष्ण उफ्रिएर उसको काखमा गएर बस्नुभो। मालिनीको इच्छा परिपूर्ण भयो। ब्रह्मसम्बन्ध सम्पन्न भयो। हजारौं वर्षका विरही जीव आज ईश्वरसङ्ग गएर मिले।

प्रेममा कहिल्यै तृप्ति हुन्न।

कृष्ण भन्न लाग्नुभयो—'म अहिले बालक हुँ, पिता हुँ र माता पनि हुँ। मसङ्ग जसले, जस्तो प्रेम गर्छ उसले उस्तै पाउने छ।'

मालिनीले कृष्णलाई बड़ो राम्रो र मीठो फल दिई। दुवैजना आनन्दित भए। फल पाउनासाथ कृष्ण कुदे घरभित्र जानुभयो। मालिनीले प्रभुसँग प्रार्थना गरी। 'आफ्ना कृष्णलाई आफ्नै नजर नलागोस्।'

आफ्नो टोकरी लिएर सुखिया घर फर्केर आई। टोकरी शिरबाट झिकेपछि देख्छे त्यो रत्नहरूले भरिभराउ छ। उसलाई सुखद आश्चर्य भयो। सोच्न लागी मेरो जन्म जन्मान्तरको दारिद्र्य सकियो।

ईश्वरलाई फल दियौ भने उहाँ तिमीलाई रत्न दिनुहुन्छ। परमात्माले जब दिनुहुन्छ त छानो उघारेर दिनुहुन्छ। मानिस दिँदाखेरि केही सङ्कोच राख्दछ। तर प्रभु भने कैयौं शून्य बढाएर दिनुहुन्छ।

जो व्यक्ति आफ्नो सत्कर्मरूपी फल भगवान्‌लाई अर्पण गर्छ त्यसको जीवन टोकरीलाई भगवान् सुखसुविधाका रत्नहरूले भरिदिनुहुन्छ। भगवान् उसलाई ब्रह्मविद्यारूपी दिव्य रत्न पनि

दिनुहुन्छ। सुखिया मालिनी जीवको प्रतीक हो। जीवसँग परमात्मा सत्कर्म, पुण्यको फल माग्नुहुन्छ। जो तिमी सत्कर्मरूपी फल भगवान्‌लाई दिनेछौ तब उहाँले तिमीलाई कैयौं गुना तुल्याएर दिनुहुनेछ।

भगवान् कसैको पनि ऋण आफ्ना टाउकामा राख्नुहुन्न। उहाँ ब्याजसहित चुक्ता गरिदिनु-हुन्छ।

यत्करोसि यदश्नासि यज्जुहोषि ददासि यत्।
यत्तपस्यसि कौन्तेय तत्कुरुष्व मदर्पणम्॥

'हे अर्जुन ! तिमी जो कर्म, भोजन, हवन, दान, तप आदि गर्छौ ती सबै मलाई अर्पण गरिदेऊ। तब तिमीले मलाई पाउन सक्ने छौ— *माम् उपाष्यसि।*'

सबै कर्म भगवान्‌लाई अर्पण गरिदेऊ। गरिएका कर्महरूको पुण्यफल कृष्णार्पण गर। फल स्वयं भोग्ने इच्छा नगर, जसले आफ्नो फल भगवान्‌लाई अर्पण गर्दछ, त्यसको बुद्धिरूपी टोकरी ब्रह्मज्ञानका रत्नहरूले भरिएर छचल्किनेछ। कृष्ण सबैलाई फल दिनुहुन्छ।

भगवान्‌को गोकुललीला यहाँ परिपूर्ण भएको छ।

बाललीलाको श्रवणले श्रद्धा उत्पन्न गराउँछ र किशोर लीलाको श्रवणले भक्ति।

अब वृन्दावनलीलाको आरम्भ भइरहेछ।

भारतभूमि कर्मभूमि हो, अन्य देश भोग भूमि। हामीहरूकहाँ कर्मानुसार फल पाइन्छ। प्रत्येक कर्मलाई परमात्माको आज्ञा मानेर पूर्ण गर।

भक्ति र कर्ममा कुनै अन्तर छैन। प्रभुलाई प्रसन्न गर्नका निमित्त गरिएको कर्म भक्ति हो। कर्ममा फलेच्छा कपट हो। फल-इच्छा नगरीकन गरिएको कर्म भक्ति हो जस-कसैले प्रत्येक कर्म ईश्वरका निमित्त गर्छ त्यसका ती सबै कर्म भगवान्‌का प्रति भक्ति बन्नजान्छ। कर्म गर्दाखेरि भगवान्‌का निमित्त मात्र गर्ने निष्ठा राखी गर्नुपर्छ। कर्म गर्ने समयमा मन ईश्वरसँग संलग्न रह्यो भने प्रत्येक क्रिया भक्ति बन्न जानेछ। व्यवहारहरूलाई अति शुद्ध राख्यौ भने त्यो सबै भक्ति बन्नजाने छ।

पाप गर्दाखेरि मनुष्य ईश्वरलाई बिर्सन्छ। ईश्वर सर्वव्यापी र सर्वत्र हुनुहुन्छ, यस्तो मान्यौ भने पाप गर्न पाउँदैनौ। व्यवहार र भक्तिमा ज्यादा अन्तर छैन। ईश्वरको भावना राखेर गरेको व्यवहार भक्ति हो। जबसम्म शरीर छ, तबसम्म व्यवहार अनिवार्य छ। प्रत्येक कर्मलाई भक्तिमय बनाईदेऊ। भोजन गर्दाखेरि पनि मानिलेऊ नारायण आहार गरिरहनुभएको छ। यस्तो सन्धान भएपछि भोजन पनि भक्ति हुन्छ।

व्यवहारलाई भक्ति र ज्ञानमय बनाऊ। ईश्वरबाट कहिल्यै टाढ़ा नजाऊ कहिल्यै बेकाममा नबस। बेकामे मानिसले पाप गर्छ। कामकाज गर्ने बानीलाई एकाएक त्याग गरिदियौ भने शरीर पापाचार गर्न थाल्दछ। त्यसकारण प्रवृत्तिरत होऊ र सबै प्रवृत्तिहरूलाई ईश्वरमय बनाइदेऊ।

बेकामे मानिसको मनमा पाप र विकार जाग्दछ। त्यसकारण निरन्तर सत्कार्य गर। गृहस्थी चलाउनका निमित्त कामकाज-नोकरी-धन्धा गर्नैपर्छ तर ती प्रवृत्तिहरूका समयमा ईश्वरलाई नबिर्स। प्रत्येक घण्टाको आरम्भमा केही क्षण ईश्वरको ध्यान गर्दै रह्यौ भने पापबाट टाढ़ा बस्न सक्छौ।

ईश्वरद्वारा प्राप्त स्थितिमा आनन्द र सन्तोष मान, आफ्ना सबै प्रवृत्तिहरूको ईश्वरसँग सन्धान बनाइराख। सबै कामहरूलाई ईश्वरको आज्ञा संझेर गर्दै जाऊ। कर्मफलको इच्छा नराख। कर्मको कस्तो, कति, कहिले फल दिइने हो त्यो भगवान्ले सोच्नुपर्ने कुरा हो।

कर्म सद्भावसाथ गर। जस्तो ध्वनि त्यस्तै प्रतिध्वनि, जस्तो व्यवहार तिमी आफूलाई प्रतिकूल लाग्दछ त्यस्तो व्यवहार कोही अरूका प्रति पनि नगर। यदि तिमीले कुनै जीवका प्रति कुभाव, द्वेष, असूया राख्यौ भने उसले पनि तिम्राप्रति बदलामा त्यही सबै दिनेछ।

शरीर थाकेर चूर-चूर होस् तबसम्म काममा लागिराख। यदि शरीर राम्ररी थाकेन भने निद्रा आउँदैन र ओछ्यानमा कोल्टे फेर्ने वेलामा मनमा खराब विचार आउँछ। सत्कर्म गर्दै थाकेमा निद्रा पनि राम्ररी आउनेछ र यस्तो निद्रा पनि भक्ति बन्न जानेछ।

यदि कर्मफल ईश्वरलाई दियौ भने ईश्वरले त्यसलाई अनन्त गुना बनाएर फर्काइदिनुहुनेछ। यस कुराको अनुभव भएनन भने मान तिम्रो कर्ममा केही कमी भएछ। पूर्व जन्मको संस्कार र वासना डढ़ेर गएपछि कर्मभित्रबाट आनन्दको प्राप्ति हुनेछ। कर्मको फल कहिले पाइने हो, यो भन्न सकिन्न। त्यस सुखिया मालिनीले जस्तै आफ्ना सबै कर्म ईश्वरलाई अर्पण गर। उहाँले तिम्रो टोकरी ( बुद्धि )-मा सद्भाव र ज्ञानका रत्न भरिदिनुहुन्छ।

भगवान्लाई मन्दिरमा होइन, आफ्नो हृदयमा राज गराउनुपर्छ। उहाँलाई मन्दिरमा स्थापित गर्नाले हाम्रो मन शान्त हुन पाउँदैन। बुद्धिभित्रबाट विषयादि फोहर-मैला सफा गरेर हामीले भगवान्लाई बसाउनुपर्छ। हामी जसरी सांसारिक विषयहरूलाई मनमा जमाइरहन्छौं, त्यसैगरी प्रभुलाई पनि त्यहीं स्थान दियौं भने शान्ति पाइनेछ र जीवन कृतार्थ हुनेछ।

बालकृष्ण पाँच वर्षका भएपछि उहाँलाई वृन्दावन जाने इच्छा भयो।

गोकुलमा जो उत्पात भइरहेछ त्यसबाट व्यथित भएर काका उपनन्दले सोचे बालकहरूका साथ अर्को गाउँमा गइहाल्नुपर्‍यो। यहाँबाट अलिकति टाढ़ा पर्ने वृन्दावन गाउँ बस्न योग्य छ।

## वनं वृन्दावनं नाम

सबैले यस प्रस्तावलाई स्वीकार गरे। बलराम र कृष्ण पनि राजी हुनुभयो। 'त्यहाँ खेलकूदको मजा आउनेछ।' त्यसकारण सबै वृन्दावन गएर बसे।

वृन्दको अर्थ हो भक्ति। त्यसकारण भक्तिको वन भयो वृन्दावन। बालक पाँच वर्षको पुगेपछि उसलाई गोकुलबाट वृन्दावन लाने गरियो अर्थात् लाड़-प्यारको अवस्था, प्राथमिक

अवस्था मध्येबाट अब उसलाई भक्तिको वनमा लानु। पाँच वर्ष समाप्त भएपछि लाड़-प्यारमा केही कमी गर्नु।

बालकलाई धर्मभीरू, संस्कारी बनाउनका निमित्त बालकालदेखि धार्मिक शिक्षा दिनुपर्छ। एकादशीका दिन उसलाई अन्नाहार नदिनु। आफ्ना बालकलाई राम्रो संस्कार नदिने माता-पिता उसका बैरी हुन्छन्। भक्ति र ज्ञानको शिक्षा नदिने माता-पिता बालकका शत्रु हुन्छन्।

बालकको हृदय, मन बड़ो कोमल हुन्छ। त्यसकारण उसलाई दिएको संस्कार उसको मनमा राम्ररी जम्दछ। उसलाई बालककालमा राम्रो संस्कार दिइयो भने त्यसको यौवन भ्रष्ट हुनेछैन र जीवनभर ऊ संस्कारी बनी रहनेछ।

काका उपनन्दले श्रीकृष्णलाई वृन्दावन लिएर गए।

जसलाई ज्ञान वृद्ध सन्तको सहारा हुन्छ, त्यो पतनको खाड़लमा खस्न सक्दैन। कसको हात समाएर हिँड्नाले खस्ने डर हुँदैन ? ईश्वरकै हात समाएर हिँड़।

वृन्दावनमा एक्लै होइन, वृन्द लिएर जाओ। अरूहरूलाई पनि सत्कार्यको प्रेरणा दिँदै गर।

गोपगोपिनीहरू सबै वृन्दावन गए। वृन्दावनमा यमुनाको किनारा र गोवर्धन पर्वतलाई देखेर राम-कृष्ण र सबै बालकहरूलाई बड़ो आनन्द भयो। त्यहाँ आएर भगवान् वत्सपाल हुनुभो। बालमित्रका साथ गाई-बाच्छा चराउन थाल्नुभो। यमुना किनारामा उनीहरू भाँति-भाँतिका खेल खेल्दथे।

कृष्ण एघार अध्यायमा वत्सपाल हुनुहुन्छ र अगाड़ि गोपाल।

कृष्ण कहिले बंशी बजाएर तथा भाँति-भाँतिका खेल रचेर गोपबालकहरूलाई आनन्द दिनुहुन्थ्यो।

जीवमात्रलाई कृष्णको बाँसुरीको मधुर तान बोलाइरहन्छ तर मोहक विषयहरूमा फँसेको जीवले वंशीको पुकार सुन्न पाउँदैन।

यमुना ( भक्ति )-का किनारामा दुइ बाधाहरू उपस्थित हुन्छन्। एक वत्सासुर ( अज्ञान, अन्धश्रद्धा ) र दोस्रो हो बकासुर ( दम्भ )।

बकुल्लो दम्भको प्रतीक हो। बक भक्त अर्थात् दम्भी।

भक्तिको किनारामा दम्भ आएर बस्छ। उसको घातमा नफँस्नु। दम्भ समान अरू कुनै पाप छैन। अन्य पापहरूको प्रायश्चित गर्न सकिन्छ, दम्भको छैन। जसको बाहिरी चोला राम्रो छ तर अन्तर तथा कार्य मैलो छ भने त्यो बकासुर हो।

बकुल्लाको चुच्चो हो लोभ। कीर्ति र धनको लोभले आफ्नासाथ दम्भ पनि ल्याउँछ। यमुना भक्तिको किनारामा बकुल्ला ( दम्भ )-को आगमनले सारा खेल बिग्रिन्छ।

भगवान्ले वत्सासुर र बकासुरको वध गर्नुभो।

एकपटक श्रीकृष्ण आफ्ना बालमित्रहरूका साथ वनमा गाईवस्तुहरू चराउँदै खेलिरहनुभएको थियो।

ती बालकहरूका सद्भावको वर्णन कुन शब्दहरूमा गर्ने जसले श्रीहरिका साथ खेल्ने सुअवसर पाएका छन्। जसको दर्शनका निमित्त योगी र ऋषिमुनिहरू लालायित भइरहेछन् तिनै परब्रह्मका साथ ती गोपालबालक खेलिरहेछन्।

सबै बालकहरू खेलकूदमा लागिरहेका थिए। यत्तिकैमा त्यहाँ अघासुर आयो। उसलाई कंसले पठाएको थियो। ऊ बकासुर र पूतनाको सानो भाइ थियो।

जहाँ अज्ञान र दम्भ हुन्छ त्यहाँ पाप तुरुन्त आइपुग्छ।

अघासुर अजिङ्गरको रूप लिएर आयो र सबै गोपालबालकहरूलाई निल्ने इच्छाले बाटामा सुत्यो। त्यसले बाएको विशाल मुखलाई ती बालकहरूले पर्वतको गुफा माने र त्यसभित्र पस्ने विचार गरे। उनीहरूले कृष्णलाई भने, 'यदि तिमी पनि हाम्रासाथ हिँड्यौ भने डर लाग्ने छैन।'

अजिङ्गरको मुखभित्र पसेका बालक अब बाहिर निस्कन पाएनन्। श्रीकृष्णले उनलाई बाहिर निकाल्नु हुन्छ।

पापी अघासुरको पेटमा पुगेका व्यक्ति स्वयं आफैं बाहिर निस्कन सक्तैनन्। कुनै बाहिरको पुण्यशाली सन्त या महाप्रभुले मात्र उनलाई बाहिर तान्न सक्छन्।

पाप र साँप एकसमान हो। साँपले टोकेपछि यदि त्यस अङ्गलाई तुरुन्तै काटिदिएका खण्डमा विष सारा शरीरमा फैलिन पाउने छैन। यस्तै प्रकारले पापको विचार आउनासाथ त्यसलाई त्यसै क्षण नष्ट गरिदियौ भने बाँच्न सक्छौ। सर्पका विषको भाँति यदि पाप केही समयका निमित्त पनि भित्र रहन गयो भने फेरि बाँच्न मुश्किल हुनेछ।

पापको चिन्तन गर्नाले त्यो जम्ने छ। पाप पृथ्वीदेखि आकाशसम्म व्याप्त छ। अघासुरको एउटा ओठ पृथ्वीमा थियो र अर्को आकाशसम्म पुगेको थियो।

मन सँग-सँगै हिँड्छ, त्यसकारण पाप तिम्रा साथ-साथ वन-पर्वत या जहाँ पनि जानेछौ वहाँ साथै जानेछ।

वासनाको प्रवाहमा बगेर गइरहेको जीव अन्तरात्माले रोक्दा-रोक्दै पनि पाप गर्दैरहन्छ। वासनाको वेगमा ज्ञान बगेर जान्छ र पाप हुन्छ। जो पापको ( अजिङ्गरको ) पेटमा गइहाल्छ ऊ बाहिर आउन सक्दैन। पाप बड़ो आकर्षक हुन्छ। पाप गर्ने प्रसङ्ग आवोस् र पापाचार नगरीकन कोही उपाय नभएपछि भगवान्लाई साक्षीभूत राखेर पाप गर्नु। यसको अर्थ यो होइन पापाचार गर्दै रहू। यस्ता समयमा भगवान्को स्मरण अवश्य गर्दै रहू।

जबसम्म हृदयमा पाप रहन्छ त्यसको नाश हुनेछैन। त्यसको जरै काट्नुपर्छ।

सबै क्रिया प्रकट शब्दोच्चारणका साथै हुन्छ। पापाचारको पहिले मनमा उसको उच्चारण हुनासाथ त्यसको नाश गर। पहिले विचार भ्रष्ट हुन्छ, फेरि वाणी भ्रष्ट हुन्छ र फेरि आचारमा भ्रष्टता आउँछ। मनमा पाप आउनासाथ मनलाई गाली गर, उसलाई सजाय देऊ। पाप मनमा आउनासाथै शीतल जलले स्नान गरेर कीर्तन गर, प्रार्थना गर—हे प्रभु ! यो काल, यो वासना, यो लोभले मलाई सताइरेछ मलाई छोड्दैन। कृपा गरी मेरो सहायता गर्नुहोस्। सच्चा हृदयको प्रार्थना उहाँले अवश्य सुन्नुहुनेछ।

सन्त, प्रभुनामको उच्चारण बराबर गर्दै रहन्छन्। त्यसकारण उनबाट पाप हुन सक्दैन।

अघासुरको पेटमा जाँदाखेरि ताली बजाउँदै अर्थात् मनलाई जाग्रत गर्दै जाऊ।

सबै जान्दछन् र संझन्छन् पनि असत्य बोल्नु, कसैलाई सताउनु, हिंसा गर्नु आदि पाप हो तर पनि पाप गर्दै रहन्छन्। पापालाई मूलैदेखि उखेलेर फ्याँक। आफ्नो शरीरमा मनले जब पाप गरिरहेछु भनी ठान्दछ तब तुरुन्त भगवान् नामको कीर्तन गर्न लाग। परमात्मालाई संझँदैमा पापको वासना छुट्ने छ। पापको बानी छुटाउने उपाय हो प्रभु-प्रार्थना।

'प्रभु मेरो पाप वासनाको नाश गर्नुहोस्। मैले जब पाप गरेको थिएँ सो समयमा तपाईं पनि त्यहाँ हुनुहुन्थ्यो। मलाई सजाय पनि दिनुहोस् र क्षमा पनि।'

मनुष्य स्वयं जान्दछ ऊ क्रोधी छ, कामी छ।

आजकलका मानिस तर धनलाई छातीमा टाँसेर राख्छन् र प्रभुलाई टाढ़ै राख्छन्। एकलै कहीं पनि नजाऊ। भगवान्लाई सँधै आफ्ना साथ राख। भगवान्लाई आफ्ना साथमा राख भन्नाको अर्थ यो होइन उहाँको मूर्ति वा तस्वीरलाई जेबमा राख्नु, यसको अर्थ आफ्ना हृदयमा बसाएर राख्नु हो। उहाँको स्मरण गर। उहाँकै नजीकमा भएको अनुभव गर्दै रहू।

बालकलाई थाहा छ कृष्ण साथमा आए भने कुनै डर छैन। कृष्णलाई लिएर ती सबै गोपबालक नाच्दै कुद्दै भित्र पसे। उनको रक्षाका निमित्त कृष्ण पनि अघासुरको मुखबाट पेटभित्र जानुभो।

भागवतमा समाधिभाषाको प्रयोग पनि धेरै गरिएको छ। लौकिक र परमत भाषा गौण छ। समाधि भाषाका अभ्यासीले भागवतको अर्थ बुझ्न सक्छ। विलासीका निमित्त भागवत बुझ्न बड़ो कठिन छ। जब नाद-ब्रह्म र नाम-ब्रह्म एक हुन्छन् तब परब्रह्मको प्राकट्य हुन्छ।

पेट-भित्र गएर भगवान्ले विशाल रूप धारण गर्नुभयो तब अजिङ्गरको पेट फुट्यो। अघासुरको प्राण ब्रह्मरन्ध्रबाट बाहिर निस्कियो। सबै बालक पनि कृष्णका साथै बाहिर आए।

'अघ' शब्दको अर्थ हो पाप। अघासुर पापकै स्वरूप हो। जो पापमा रम्दछ त्यही अघासुर हो। पाप गर्नमा सुख मान्ने व्यक्ति अघासुर हो। कति पटक पापी व्यक्ति सुखमा बाँचेको देखिन्छ। त्यो पापको कारणले होइन, उसको कुनै पूर्व जन्मका पुण्यको कारणले उसलाई यो सुख भइरहेछ। अन्यथा पापको परिणाम दुःख मात्रै हो।

पापी न कहिल्यै सुखी भएको छ न कहिल्यै होला।

कोही पुण्यशाली दुःखी भएको देखियो भने भन्ठान उसको कुनै पूर्वजन्मका पापको फल उसले पाइरहेछ। पुण्यको फल दुःख होइन।

पापको जालबाट उम्कन सजिलो छैन। पापको भान भएर पनि मनुष्य पापकर्म छोड्न सक्तैन। जबसम्म पुण्यको फल बढ्दैन तबसम्म पापको बानी छुट्दैन। पापको बानी बड़ो खराब हो। पापलाई मनमा कहिल्यै बस्न नदेऊ। मनुष्य शरीरको अपेक्षा जिभ्रोले, जिभ्रोको अपेक्षा आँखाले र आँखाको अपेक्षा मनले धेरै पाप गर्छ। जबसम्म इन्द्रियहरू पाप गर्न लग्गु हुन्छन् तबसम्म भक्ति-रस पाईंदैन। इन्द्रियहरूका गाग्रीमा भक्तिरस भर्नुछ भने पहिले उसलाई निष्पाप गर। यदि पानीले भरिएको गाग्रीमा दूध भर्नुछ भने पानीलाई पहिले झिकिदिनुपर्छ।

आत्मा र इन्द्रिय यति एकाकार हुन्छन् जो इन्द्रियहरूको पाप आत्माले देख्नै पाउँदैन।

मनमा पापको विचार आउनासाथ त्यसलाई बाहिर निकाली देऊ। यदि पाप भइहालेछ भने पनि बड़ो नम्रतासाथ भगवान्सँग माफी माग। अघासुर अजिङ्गरको रूप लिएर आउँछ र असावधान व्यक्तिलाई निलिहाल्छ।

यदि पाप तिम्रो शरीर र मनमा एकपटक घुस्यो भने त्यसले तिमीलाई छोड्ने छैन। जसको घरमा, मनमा पाप बस्छ त्यसको घरमा, मनमा परमात्मा कहिल्यै आउनुहुन्न।

जानी-बुझिकन पाप गर्ने, पापमा सुख मान्ने, पापमै रम्ने मानिस अघासुर हो।

पाप नगरिकन हुँदै नहुने हो भने भगवान्लाई साक्षी राख। उहाँले तिम्रो रक्षा गर्नुहुनेछ। यद्यपि यो नियम मामूली हो।

उत्तम कुरा यही हो पापको विचारसम्म पनि नगर्ने।

जसलाई नभोगीकन नाश हुन सक्तैन त्यो हो पाप। पुण्यविना भोग पनि नष्ट हुन सक्छ। पुण्य भोग्नका निमित्त जन्म लिनुपर्छ। साधु-सन्तहरूलाई पनि पुण्य अन्तमा कृष्णार्पण गर्नुपर्छ।

पुण्य कृष्णार्पण गर्न सकिन्छ, पाप सकिँदैन। पापको दण्ड तर स्वयं आफूले भोग्नुपर्छ।

प्रारब्धकर्मणां भोगादेवक्षयः।

कुनै महापुरुष, सुपात्र साधु-सन्तको कृपा भएपछि मात्र पापको वासना नष्ट हुन सक्छ।

कतिपटक अन्तरात्माको अनिच्छा भए पनि पाप भइहाल्छ। गीतामा अर्जुनले भगवान् श्रीकृष्ण सङ्ग एक सनातन प्रश्न सोधेको छ—

अथकेन प्रयुक्तोऽयं पापं चरति पूरुषः।<br>
अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः॥

अनिच्छा हुँदा-हुँदै पनि जीव पापमा किन प्रवृत्त हुन्छ ? त्यो पाप किन गर्दछ ?

भगवान् भन्नुहुन्छ—

**काम एष क्रोध एष रजोगुण समुद्भवः।**

रजोगुणबाट उत्पन्न भएका काम र क्रोध मनुष्यका प्रमुख शत्रु हुन्, तिनीहरूले उसलाई पापतर्फ धिस्याइरहेछन्।

थपड़ी बजाउँदै रहेका बालक पहिले नादब्रह्ममा लीन भए र पछिबाट उनको मन परब्रह्मसङ्ग गएर मिसियो।

त्यसो तर सबै बालक सारा दिनको लीला आफ्नी आमाहरूलाई उसै दिन सुनाउने गर्थे तर यस अघासुर-वधको प्रसङ्ग एक वर्षपछि मात्र सुनाए, अर्थात् कृष्णले आफ्नो पाँचौं वर्षमा अघासुरको वध गरेको थियो तर कुरा भने उनले छैटौं वर्षमा भने।

परीक्षित राजाले सोधे—'ती बालकहरूले यस्तो किन गरे। एक वर्षसम्म लुकाएर राख्नाको कारण के थियो ? परीक्षित्को यस प्रश्नले शुकदेवजीलाई त्यस प्रसङ्गको त्यस रहस्यमयी लीलाको स्मरण भयो। उहाँ समाधिमा लीन हुनुभयो। केही बेरपछि विस्तार-विस्तार जब बाह्यदृष्टि प्राप्त भयो तब भन्न थाल्नुभयो—'सुन राजन्, ब्रह्माले ती गोप बालकहरूलाई अपहरण गरेका थिए। त्यहाँबाट तिनीहरू एकवर्षपछि फर्के र एकवर्ष पछि मात्र उनले आफ्ना सारा कुरा भन्न पाए।'

शुकदेवजीले तेह्रौं र चौधौं अध्यायमा विस्तारपूर्वक संझाएको छ।

भगवान् चारै प्रकारले रास खेल्नुहुन्छ, उहाँको नाउँ रस हो। ''रसो वै सः'' परमात्मा दिव्य रसस्वरूप हुनुहुन्छ। उहाँका साथ मिल्नु रास हो। रासको अर्थ हो कृष्ण सम्बन्ध, ब्रह्मसङ्ग सम्बन्ध।

जीव-जन्तु ईश्वरका साथ जब एक हुन पुग्छ तब कृतार्थ हुनेछ।

गोकुलका गाईहरूको इच्छा थियो जस्ता प्रकारले बाछा उनको दूध पिउँछन् सोही प्रकार कृष्णले पनि पिइदिएर उनको इच्छा पूरा गरिदिनु भयो। यस अध्यायमा गाई रास-वर्णन छ।

गोकुलका वृद्धा स्वास्नी मानिसहरूको इच्छा थियो कृष्णलाई लाड़-प्यार गर्न पाऔं। ती सबै कृष्णसँग मनद्वारा मिल्थे। मानसिक मिलन पनि आनन्ददायी हुन्छ। तैपनि प्रत्यक्ष मिल्ने उत्कण्ठा भइरहन्थ्यो। यस अध्यायमा वृद्धा गोपिनीहरूको रासवर्णित छ।

अघासुरको पेटबाट सबै गोप बालक र बाछाहरू बाहिर आए। बालकहरूले कृष्णसङ्ग भोजन गर्ने इच्छा प्रकट गरे। कृष्णले भन्नुभो 'हुन्छ, जाऔं यस यमुनाको सुन्दर किनारामा हामी पंक्ति लगाएर भोजन गरौं। यी बाछाहरू पनि हरियो घाँस चरिरहून्।'

कृष्ण र सबै बालकहरू एकसाथ मिलेर पद्मव्यूह-चक्रव्यूह रचेर भोजन गर्न बसे। यो समाधि भाषा हो। कमलको पंखुरी एक-अर्कासँग एकदम टाँसिएर रहेको हुन्छ। कमलको मध्यमा

कमलो पदार्थ हुन्छ र सानो पंखुरी पनि हुन्छ। ठूलो पंखुरी ती साना पंखुरी सँगसँगै हुन्छ। सबै बालकहरूलाई श्रीकृष्णसँग टाँसिएर बस्ने इच्छा भयो। सबैले आफ्ना-आफ्ना घरको खाना कृष्णलाई ख्वाउने मन गरे। सबैले कृष्णाको मुखमा गाँस हालिदिन खोजे। टाढ़ा बसेर यस्तो नहुने, त्यसकारण श्रीकृष्णले बीचमा बसेर सबै बालकहरूको मनको इच्छा पूर्ण गरिदिनुभयो।

रासलीलामा पनि प्रत्येक गोपीलाई त्यस्तै अनुभव गराइदिनुभयो र सबै उहाँकै साथमा छन्। प्रत्येक गोपबालक र गोपिनीलाई कृष्णले सान्निध्य र स्पर्शको अनुभव गराइदिनुभयो।

ईश्वरका सान्निध्यविना चैन आउँदैन। ब्रह्मस्पर्शविना आनन्द पाईंदैन।

प्रेम यति शक्तिशाली छ निराकारलाई पनि साकारता दिन्छ। निष्काम ईश्वर पनि प्रेमका कारण सकाम बन्नुहुन्छ।

कृष्ण आफ्ना मित्रहरूलाई संझाउनुहुन्छ—'कहिल्यै एकलै नखानु। एक्लै खाने मानिस बिरालो हुन्छ। चोरी-छिपी एक्लै खानु पशुधर्म हो। एक्लै कहिल्यै खानु नपरोस्।'

ईश्वर सबैलाई समान आनन्द दिनुहुन्छ। मनुष्य विषमता दिन्छ, विषमता कायम राखिरहन्छ। ईश्वर सुपात्र जीवलाई यति धेरै दिनुहुन्छ जसमा लिने मानिस लिँदा-लिँदा थाक्छ।

यज्ञ गर। ईश्वर यज्ञको भोक्ता हुनुहुन्छ। यज्ञमा-आह्वान गरेपछि पनि कति पटक जुन ईश्वर भोजन गर्नुहुन्न उहाँ पनि आज गोपबालकका हातबाट भोजन गर्दै हुनुहुन्छ।

परमात्मालाई वशमा गर्ने सर्वोत्तम साधन हो प्रेम। भगवान्लाई उत्तमोत्तम वस्तु दिइयोस् त्यस्तो वस्तु हो भक्ति। भक्ति मात्र शुद्ध प्रेमभाव हो।

कुनै बालकले जिलेबी ल्याएको थियो, कसैले बर्फी र कसैले दहीबरा, सबै बालक मिलेर खाइरहेछन्।

भोजनका समयमा विनोद गर्नुपर्छ, आनन्द गर्नुपर्छ।

कृष्णले भन्नुभयो—'हरे ! यसकी आमा दहीबरा जस्तो गोलमटोल र बाबु दुब्लोपातलो।' सबैजना हाँसे। यस प्रकार कृष्ण र सबै बालक आनन्द-प्रमोद गर्दै खान र खुवाउन थाले।

जीव जब आफ्नोपना, जीवत्व, अभिमान छोड़ेर परमात्मासँग प्रेम गर्न थाल्छ तब ईश्वर पनि आफ्नो ईश्वरत्वलाई छोड़ेर जीवका साथ खेल्न आउनुहुन्छ। अभिमानी जीव आफूलाई शास्त्री, पण्डित, ज्ञानी मान्दछ। ऊ भगवान्लाई पनि हाँक दिन थाल्छ। भगवान् भन्नुहुन्छ—'यदि यस जीवलाई मसँग केही लिनुदिनु छैन भने म पनि उसको ध्यान किन राखूँ?'

यदि परमात्मालाई प्रसन्न गर्नु छ भने बालक बनेर उहाँका नजिक जाऊ।

गोप बालकहरूका साथ भोजन गर्दा भगवान्को शोभा कस्तो थियो, हेर्नुहोस्—

विभ्रद् वेणुं जठरपट्योः श्रृंगवेत्रे च कक्षे।
वामे पाणा मसृणकवलं तत्फलान्यंगुलीषु॥
तिष्ठन् मध्ये स्वपरिसुहृदो हासयन् नर्मभिःस्वैः।
स्वर्गे लोके मिषति बुभुजे यज्ञभुग् बालकेलिः॥

(भा० १०-१३-११)

त्यस समय श्रीकृष्णाको सौन्दर्य सबैभन्दा अनौठो थियो। उहाँको कम्मरमा बाँसुरी बाँधेको थियो, बगलमा सिंग र लट्ठी थियो, बायाँ हातमा घिउसहित दही मलेको चामलको गाँस थियो, औंलाहरूमा फलको अचार थियो। चारैतर्फ गोपबालक बसेका थिए। उहाँ सबैका बीचमा बसेर सबै बालकहरूका साथ विनोद गर्दै भोजन गरिरहनुभएको थियो। स्वर्गका देवता पनि यस अद्‌भुत लीलालाई आश्चर्यपूर्वक हेरिरहेका थिए।

यस लीलालाई मनभित्रबाट हेरेर आनन्द गर। वृन्दावन, यमुनाको किनारा, फलहरूद्वारा निहुरिएका वृक्षहरू, बादलतल बसिरहेका कृष्ण र गोपबालक आदिको मनमा कल्पना गर्‍यौ भने आनन्द पाउनेछौ।

साँच्चिकैका वैष्णव मनबाट सदा वृन्दावनमै बस्दछ। तन चाहे जहाँ होस्, मन तर वृन्दावनमै हुनुपर्छ।

भावना भक्तिलाई सफल पार्दछ।

खानु कुनै पाप होइन, खानका निमित्त भगवान्‌ले यी सारा खाद्यपदार्थ उत्पन्न गर्नुभएको छ तर भगवान्‌लाई बिर्सिएर, भगवान्‌लाई अर्पण नगरीकन खानु पाप हो। कतिजना भन्दछन्— 'आज मेरो एकादशीको उपवास छ।' तर एक्लै धेरै थुप्रो खान्छन्। कसैलाई लुकाएर खाने होइन। लुकी-चोरी खानु पाप हो।

अघासुरलाई जब कृष्णाले मोक्ष दिए तब ब्रह्मालाई आश्चर्य भयो। उनी यतातिर हेर्न आए। यी कृष्ण को हुन्? यहाँ आएर हेर्छन् तब कृष्ण गोपालबालकहरूका साथ भोजन गरिरहेका।

यी ब्रजबालकहरूमध्ये एकजना थिए ऋषि शाण्डिल्यका पुत्र मधुमङ्गल। ऊसँग कृष्णाले भन्नुभो—'तिमी हाम्रा घरको खाइरहन्छौ, तर आफ्ना घरको चाहिँ हामीलाई कहिल्यै ख्वाउँदैनौ!' पवित्र ब्राह्मणहरूका घरको भोजन खानाले बुद्धि पवित्र हुन्छ। यसै कारणले कृष्णाले मधुमङ्गलका घरको भोजन खान खोजेको।

यशोदाजीले शाण्डिल्य ऋषिलाई भन्नुभएको थियो—'मधुमङ्गललाई सधैं भोजन गर्न पठाइदिनू।' यशोदाजी उसको धेरै आदर गर्नुहुन्थ्यो। त्यसकारण आज कृष्ण ती ऋषिपुत्रलाई भनिरहनु भएको छ—'तिमी सधैं मेरो घरमा खाना खान्छौ, आज मलाई तिम्रो घरको खाना ख्वाऊ।'

मधुमङ्गलले दौड़िँदै घर गएर आफ्नी माता पूर्णमासीसँग कुरा गऱ्यो। आमालाई बड़ो आनन्द लाग्यो। तर अहिलेसम्म भान्सा तयार भएको थिएन।

शाण्डिल्य ऋषि ब्रह्ममुहूर्तमा शैय्या त्याग गर्थे। तर उनको नित्य कर्म रातिको आठ बजे समाप्त हुन्थ्यो। प्रातःकालमा उनी गायत्रीमन्त्रको चौबीस माला फेर्थे। पाञ्चायन देवहरूको पूजा, पञ्चदेवीको अभिषेक, विश्वदेव, यज्ञ, होम, मद्याह्नसन्ध्या, विष्णुसहस्रनाम पाठ, भागवत पाठ र अन्तमा भगवान्का नाउँको एक्काईस माला जप गर्थे। यति गर्दा नगर्दै बेलुकी भइहाल्थ्यो। यी तपस्वी ब्राह्मणले खानसम्मको समय पाउँदैनथे। त्यसकारण रात्रिको समय फलाहार गर्थे।

एकपटक भजनानन्द पायौ भने फेरि भोजनानन्द, सांसारिक सुख नीरस लाग्दछ। हाम्रो जीवलाई भजनमा आनन्द लाग्दैन, त्यसकारण अन्य विषयहरूमा आनन्द खोजिरहन्छ।

ब्राह्मण अवतार तप गर्नका निमित्त हो, विलासका निमित्त होइन। भगवान् चाहनुहुन्न ब्राह्मण विलासी होस्। वैश्य र क्षत्रियको विलास केही अंशमा क्षम्य छ,तर ब्राह्मणको विलास अक्षम्य छ। यदि अन्तकालसम्म ब्राह्मणले पवित्र रहे, विलासको कामनासम्म नगरे तब भगवान् उसलाई दिव्य आनन्द दिनुहुन्छ।

पवित्रताको धर्म यो हो जबसम्म पतिले भोजन गर्दैनन् तबसम्म उसले पनि भोजन नगरोस्।

शाण्डिल्य र पूर्णमासी अत्यन्त पवित्र थिए। पूर्णमासी पनि पतिका साथ फलाहार मात्र गर्थिन्। उनको एकमात्र पुत्र मधुमङ्गल यशोदाको घरमा भोजन गर्दथे। त्यसकारण पूर्णमासी कहिल्यै खाना बनाउँदिनथिइन्।

यदि स्त्री आफ्नो पतिका प्रति ईश्वरत्वको अनुभव गर्दिन, ईश्वरको भाव राख्तिन भने उसलाई ढुङ्गाको मूर्तिबाट कहिले भगवान् पाईंदैनन्।

जीवनका आवश्यकताहरू घट्ने-बढ्नेका साथसाथै पाप-पुण्य पनि घट्दै जान्छन्। 'चाहिन्छ' भन्नेको कहिल्यै अन्त छैन। त्यसकारण आफ्नो बानी र आवश्यकता कम गर्दै जाऊ। निश्चय गर मलाई भगवान्का सिवाय अरू केही पनि चाहिँदैन।

पवित्र ब्राह्मण आफ्नो घरमा केही पनि वस्तुको संग्रह गर्दैन।

अब पूर्णमासीको घरमा केही थिएन। घरमा रहेको अलिकति मोही थियो। 'अमिलो भएदेखि कृष्णलाई मन पर्दैन' यस्तो विचार गरेर कढ़ी बनाए। मधुमङ्गलले भने—'म गरीब ब्राह्मणको घरमा अरू केही छैन। बस् यति दिनुछ।'

परमात्मा यो कहिल्यै हेर्नुहुन्न जीवले उहाँका निमित्त के ल्याएको छ। उहाँ यति मात्र हेर्नुहुन्छ उसले कुन भावबाट ल्याएको छ। ईश्वर केवल भाव मात्र हेर्नुहुन्छ। वस्तुलाई हेर्नेवाला जीव हो र भावलाई हेर्ने भगवान् हुनुहुन्छ।

भगवान्लाई सदा सर्वोत्तम वस्तुहरूको भोग लगाऊ।

मधुमङ्गलले मोही लिएर आए। अरू सब बालकले थरी-थरीका मिठाईहरू ल्याएका थिए। त्यसकारण मधुमङ्गल यस्तो मोही दिन लाज मान्न थाले। उनलो सोचे 'यदि मैले कृष्णलाई यस्तो मोही दिएँ भने मलाई जन्मभर यस्तो अमिलो मोही पिउनुपर्ला। कृष्णले खिसी गर्लान् पनि यसकी आमा अमिली रहिछन् र मोही पनि अमिलो भयो। यस्तो सोचेर मधुमङ्गल आफैं मोही पिउन लागे।'

भगवान्को दृष्टि यिनीमाथि पर्‍यो। 'ए मधुमङ्गल ! तिम्री आमाले यो मोही मलाई पिउन भनी पठाएकोमा तिमी आफैं पिइरहेछौ ? मेरी सानीमा पूर्णमासीले यो मेरो निमित्त बड़ो प्यारो गरेर पठाइदिएको छ। मलाई पनि पिउन देऊ।' मधुमङ्गल छिटो-छिटो पिउन थाल्यो। कृष्ण दौड़ेर त्यसको नजिक आइपुगे र हाँड़ी खोसेर आफ्ना हातमा लिए, जो खाली भइसकेको थियो। जब कृष्णले देखे मधुमङ्गलको मुखमा अलिकति मोही लतपतिएको तब उसको मुख चाट्न लागे, यति हुँदै थियो त्यही समयमा त्यहाँ ब्रह्माजीको आगमन भयो।

कृष्ण भनिरहेका थिए, 'मधुमङ्गल तिम्रा पिताजी तपस्वी ब्राह्मण हुनुहुन्छ। त्यसकारण तिम्रो जूठो मोहीले मेरो बुद्धि सपार्ने छ।'

श्रीकृष्ण बालकका साथ बालक, भोगीका साथ भोगी, योगीका साथ योगी र ज्ञानीका साथ ज्ञानी हुनुहुन्छ। बालक ब्रह्मज्ञानको ज्ञान संझन सक्तैनन्। त्यसकारण उनले उनको मन, खाने-पिउने कुरा, नौनी चोरी आदिले हर्दछन्। उनी बालकहरूका मित्र बनेर अनायासै ब्रह्मानुभाव गराइदिन्छन्।

कृष्णलाई मधुमङ्गलको मुख चाट्ता-चाट्दै फेला पारेकाले ब्रह्माजीलाई आश्चर्य भयो। 'यी कस्ता भगवान् हुन् ? मानिस श्रीकृष्णलाई ईश्वर मान्दछन् यिनी यता गोपबालकहरूको मुख चाटी घुमफिर गर्छन्। ईश्वर कहिले यस्तो हुनसक्छ ?' ब्रह्मा बड़ो द्विविधामा डुबेका छन्। यी उनै ब्रह्मा हुन् जसले क्षीरसागरमा गएर शेषशायी भगवान्सँग अवतार लिनलाई प्रार्थना गरेका थिए। उनी देवकीको गर्भमा आएपछि उनले गर्भस्तुति पनि गरेका थिए। आज यी ब्रह्माजी श्रीकृष्णको सगुण लीला देखेर छक्क परेका छन्।

सगुण ब्रह्मको विचित्र लीलालाई हेरेर ब्रह्माजी जस्ता पनि असमंजसमा पर्न जान्छन् भने सामान्य जीवको झन् कुरै भएन।

निर्गुण ब्रह्मलाई संझन केही सजिलो छ, तर सगुण ब्रह्मका लीलाहरूको पार पाउन बड़ो कठिन छ।

तुलसीदासजीले पनि भनेका छन्—

**निरगुन रूप सुलभ अति, सगुन न जाने कोई।**

ब्रह्माजीले परीक्षा लिन भनी सोचे यी कृष्ण हुन् या अरू कुनै साधारण देव हुन्। यिनले यदि म जस्तै सृष्टि रचना गर्न सके भने यी कृष्ण ईश्वर हुन् भन्ने मान्ने छु। यदि मेरो यस परीक्षामा पार लागे भने म यिनलाई ईश्वर मान्नेछु।

ब्रह्माजीले मायाका बलले सबै बाछाहरूलाई ब्रह्मलोकमा उठाएर लगे।

भोजन गर्दा-गर्दै बालकहरूलाई आफ्ना बाच्छाहरूको स्मरण भयो, हेर्छन् तब त्यहाँ बाच्छाहरू छैनन्। उनीहरूले कृष्णसँग कुरा गरे।

कृष्णले साथीहरूलाई भने—'तिमीहरू भोजन गर। म बाच्छाहरूलाई लिएर आउँछु।'

कृष्ण बाच्छाहरूलाई खोज्न भनी हिँड्नुभो। यस प्रसङ्गमा एउटा अर्को पनि रहस्य छ।

जबसम्म बालकहरूले भगवान्‌लाई दृष्टिमा राखेर भोजन गरिरहेका थिए तबसम्म उनीहरूलाई आनन्द मिल्यो, तर बाच्छाहरूको चिन्ता हुनासाथ विषयहरूमा उनको मन गयो तब ब्रह्माले बाच्छाहरूलाई उठाई लगे र ईश्वर टाढ़ा भए। कृष्णलाई खोज्न टाढ़ा जानुपरेको थियो। गोपबालक ब्रह्माका अधीन भए। ब्रह्मा पनि कालका एक रूप हुन्। सांसारिक विषयहरूपट्टि मन गएन भने जीवलाई ब्रह्माकालले समात्दछ।

भोजन गर्दाखेरि यदि दृष्टि भगवान्‌का तर्फ भयो भने भोजन पनि भजन हुन जान्छ।

भोजन अतिशय स्वादिष्ट हुनु हुँदैन। स्वादिष्ट धेरै भयो भने पेटभरी खाइन्छ। धेरै खानाले मन अल्छी हुन्छ। स्वादरहित भोजन भयो भने भोकका निमित्त मात्र खान सकिन्छ। जसले परमात्माको भजन गर्नु छ, उसले अल्छी बन्नु हुँदैन। भोजन एक अनिवार्य शरीर धर्म हो, त्यो पाप होइन, तर भोजनका साथ तन्मय हुनु पाप हो।

श्रीकृष्णले बाच्छाहरूलाई भेट्न सक्नुभएन र फर्की आउनुभयो। यता आएर हेर्नुहुन्छ तब गोपबालकहरू गायब थिए। श्रीकृष्णले बुझ्नुभयो यो सबै ब्रह्माजीको खेल हो। ब्रह्माजीले शायद बिर्सीसक्नुभएको होला म उहाँको बाजे हुँ भनेर।

कतै विष्णुलाई ब्रह्माका पिता भनेको छ र कतै पितामह।

देवी भागवतको नवौं स्कन्धमा सृष्टिको उत्पत्तिको कथा छ। सृष्टिको उत्पत्तिको बारेमा सबै शास्त्रको एक मत छैन। जगत्‌को उत्पत्तिको विषयमा गरिएको विचारमा भिन्नता छ। महात्माहरूले ईश्वरको स्वरूपका बारेमा धेरै विचार गरेका छन्। उनमा ईश्वरका स्वरूपको विषयमा ज्यादा मतभेद पनि छैन।

बैकुण्ठधाममा विराजमान लक्ष्मीनारायणको नाभिबाट उत्पन्न भएको कमलबाट ब्रह्मा उत्पन्न भए।

भगवान् तर 'कर्तुमकर्तुमन्यथा कर्तुसमर्थः' हुनुहुन्छ। कृष्णको यो इच्छा-सृष्टि हो। कृष्णले ती सबै बालकहरू र बाच्छाहरूको रूप धारण गर्नुभयो। वहाँ आफ्नै स्वरूपसँग खेल्नुहुन्छ, यो निश्चित छ।

ज्ञानी आफ्ना शरीरसँग होइन आत्मासँग खेल्छन्। एउटा हो भोगार्थ सृष्टि, जसलाई जीव-सृष्टि भन्छन्। ईश सृष्टि पञ्चभूतरहित छ, भगवान्को लीला सृष्टि भयो। अरूलाई आनन्द दिने दृष्टिबाट गरिएको सृष्टि लीला सृष्टि हो। ब्रह्मा पंचभूतको सहायताले जगत्सृष्टि गर्नुहुन्छ।

भगवान् भन्नुहुन्छ म पञ्चमहाभूतको मद्दतविना सृष्टि उत्पन्न गर्दछु। परमात्मा जहिले पनि संकल्प गर्नुहुन्छ सृष्टि उत्पन्न हुन्छ।

जब ईश्वर पञ्चमहाभूतलाई उत्पन्न गर्नुहुन्छ तब उनको आधारले ब्रह्मा जगत् उत्पन्न गर्नुहुन्छ।

द्रौपदीको धोती कुन चाहिँ मिलको थियो र ? स्वयं कृष्णले वस्त्रको रूप लिएको थियो। भगवान्को सङ्कल्पले धोती उत्पन्न गरेको थियो। जसलाई ईश्वरले ढाक्नु हुन्छ उसलाई कसले निर्वस्त्र गर्न सक्छ ? यो तर श्रीकृष्णको सङ्कल्प थियो, लीला थियो।

श्रीकृष्णले गोपाल बालकहरूको कम्बल, लौरो आदिका अनेक रूप धारण गर्नुभयो।

वैष्णव ब्रह्मको परिणामवादमा विश्वास राख्छन् र वेदान्ती विवर्तवादमा। जगद्गुरु शङ्कराचार्यको वाद, विवर्तवाद हो। यो जगत् मिथ्या हो, असत्य हो। यसका अधिष्ठाता सत्य हुना कारण यो जगत् सत्यरूप भासमान हुन्छ। वस्तुतः ईश्वर तर एकै हुन्। एउटै परमात्माले अनेक रूप धारण गर्नुहुन्छ तर उहाँको त्यो स्वरूप सत्य होइन। अविद्याको कारण असत्य जगत् सत्य आभासित हुन्छ।

चलचित्रमा हामी देख्छौं हनुमानजी लङ्कालाई सल्काइरहनुभएको छ, तर पर्दाको एउटा धागो पनि सल्कन पाउँदैन किनभने यो आभासी सृष्टि हो। चित्र होइन, पर्दा सत्य हो।

अधिष्ठान सत्य हुन्छ, ब्रह्मत्वरूप पर्दाजस्तो हो र जगत् चित्रजस्तो। मायाका कारण यो सबै देखिएको छ।

श्री महाप्रभुजी भन्नुहुन्छ, ब्रह्म निर्विकार छ, तैपनि ब्रह्मको परिणाम हुन्छ। दुवै सिद्धान्त सत्य छन्। श्रीकृष्ण लाठी पनि हुनुहुन्छ, श्रीकृष्ण सत्य हुनुहुन्छ र उहाँको कारणले लाठीको भास हुन्छ। ब्रह्म निर्विकार हुँदाहुँदै पनि विकारी हुन्छ।

परमात्मासँग भेट गर्ने गाईहरूको इच्छा थियो। त्यसकारण श्रीकृष्णले बाच्छाको रूप धारण गर्नुभो। असली बाच्छा तर ब्रह्मलोकमा थिए। जुन बाच्छाहरूले दूध खान छोड़िदिएका थिए, ती पनि आज स्तनपान गरिरहेछन्। गाईहरू पनि ठूला-ठूला बाच्छाहरूलाई स्तनपान गराउन थाले। यो दृश्य देखेर बलरामलाई पहिले आश्चर्य भयो तर उहाँले अन्तर्मुख भएर हेर्नुभयो तब यी सबै बाच्छाहरू कृष्णकै रूप रहेछन्।

जुन वृद्धा गोपिनीहरूलाई श्रीकृष्णसँग भेट्ने इच्छा थियो उनका साथ आज श्रीकृष्णले गोपबाललीला गर्नुभयो। गोपिनीहरू आफ्ना बालकरूपी कृष्णलाई उठाएर अँगालो मार्न थाले।

गोपिनीहरूलाई अन्य संझिएको छैन। अन्यभाव मात्र मानेको छ। श्रीकृष्ण सबैका पति हुनुहुन्छ। त्यसकारण गोपिनीहरूका पनि पति हुनुभयो। यस दृष्टिमा रासलीलामा कोही पनि गोपी पराया जस्ता थिएनन्।

कुनै सन्तले भनेका छन् ब्रज र गोकुलमा कोही पराईजस्ता हुँदैनन्। कारण यो हो प्रभु जब वत्सलीला गरिरहनुभएको थियो तब ऋषि शाण्डिल्यले आज्ञा दिएका थिए यस वर्ष भगवान् श्रीकृष्णले गोपबालकहरूको रूप धारण गरेको छ। त्यसकारण यो समय बड़ो उत्तम छ। सबैले आफ्नी-आफ्नी कन्याहरूका विवाह गरिदिऊन्। त्यसकारण सबैले आफ्नी-आफ्नी कन्याहरूका विवाह ती गोपबालकहरूका साथ गरिदिए। अर्थात् सबै गोपिनीहरूका विवाह श्रीकृष्णका साथै भए। त्यसकारण रासलीलामा अर्काकी नारीको प्रश्नै उठ्दैन। श्रीकृष्णका निमित्त कोही पनि स्त्री परस्त्री थिएनन्। उहाँ सबैका स्वामी हुनुहुन्छ, सर्वेश्वर हुनुहुन्छ।

भगवान् श्रीकृष्णले बाच्छाहरू र बालकहरूको रूप धारण गरेर गाईहरू र वृद्ध गोपिनीहरूलाई ब्रह्मसम्बन्धबाट लाभान्वित गराए। सबैलाई ब्रह्मसम्बन्धरूपी ब्रह्मानन्दको अनुभव गराए।

भगवान् श्रीकृष्णले प्रसिद्ध वेद वाक्य 'सर्वं विष्णुमयं जगत्' लाई आज यस प्रकार चरितार्थ गरिदिनुभयो।

नरसिंह मेहताले पनि गाएको छ—

'ब्रह्म लटकां करे ब्रह्म पासे'

सर्वं विष्णुमयं गिरोऽङ्ग वदजः सर्वस्वरूपो बभौ॥

(भा० १०-१३-१९)

त्यस समय यो सम्पूर्ण जगत् विश्वरूप हो। यो वेद वाक्य मानौं मूर्तिमन्त भयो। निज इच्छा निर्मित तनु ईश्वर हो र कर्म निर्मित तनु जीव।

भगवान्ले पूरा एक वर्षसम्म यस प्रकार लीला गर्नुभयो।

भगवान्ले व्रजवासीहरूका लीलाका चार प्रकार बताउनुभएको छ। रासलीला चार छन्—

(१) वेणुगीत प्रसङ्ग—कुमारी गोपिनीहरूका साथ रास,
(२) यज्ञ-पत्नी प्रसङ्ग—विवाहिता गोपिनीहरूका साथ रास,
(३) गोवर्द्धन लीला—वृद्धा गोपिनीहरूका साथ रास र
(४) संन्यासी प्रसङ्ग—संन्यासिनी गोपिनीहरूका साथ रास।

मुख्य रासलीलाहरू यसप्रकार छन्—

(१) गोप-बालकहरूका साथ,
(२) गाईहरूका साथ र
(३) गोपयुवतिहरूका साथ।

अब रासको अर्थ पनि बुझौं। परमात्मा रसरूप हुनुहुन्छ। *'रसो वै सः।'* यस रूप ईश्वरका साथ तादात्म्य हुनु रास हो। परमात्माका साथ जीवको मिलन पनि रास हो। रसात्मक ईश्वरका साथ अभिन्नभाव हुनु, सम्बन्ध हुनु पनि रास हो।

यस्तो को मानिस होला जो ईश्वरसँग भेट्ने इच्छा नगरोस्।

यी लीलाहरूद्वारा प्रभुले सबैलाई मुग्ध गराएर रस बाँड़ेर आनन्दको आविर्भाव गरिदिनुभयो।

भागवतका टीकाकार विश्वनाथ चक्रवर्ती तेह्र र चौध अध्यायमा लीलामा तन्मय हुनुभएको छ, उहाँको भनाइ छ यो सर्वोदय लीला हो, प्रभुले सबैलाई समान रूपमा आनन्द दिएको छ।

श्रीकृष्णाले जब आज बालकहरू र बाच्छाहरूको रूप धारण गर्नुभएको थियो तब यी गोपिनीहरू र गाईहरूले पहिलेको भन्दा बढ़ी प्यारो गर्न लागे। आफ्ना-आफ्ना सन्तानहरूलाई प्रेमद्वारा नुहाउन थाले। गाईहरू आफ्ना बाच्छाहरूलाई दूध ख्वाइरहेछन्, चाटिरहेछन्, तर तृप्त हुँदैनन्। ब्रह्मानन्दमा तृप्ति पाइन्छ पनि कहिले र?

बालकहरू र बाच्छाहरूका विना यता के भइरहेछ भनी हेर्नलाई ब्रह्माजी दोस्रोपटक पृथ्वीमा आउनुभयो। सबै कुरा पूर्ववत् चलिरहेछ। उनै बालक, उनै बाच्छा श्रीकृष्णका साथ खेल्नमा मग्न। ब्रह्माजी सोचमा डुब्नुभयो—'यी बालक-बाच्छाहरू सत्य हुन् वा ती सत्य हुन् जो ब्रह्मलोकमा लिएर गएको छु?

*''इत एतेऽत्र सत्याः के।''*

अरूहरूसँग खेल्ने दुःखी हुन्छ। ज्ञानी पुरुष आफ्नो आत्मस्वरूपमै रमण गर्दछन्। भगवान् आफ्नै स्वरूपका साथ खेलिरहनुभएको छ। श्रीकृष्ण योगेश्वर हुनुहुन्छ।

कृष्णले एउटा अरू लीला गर्न सोच्नुभयो। उहाँले ब्रह्माको रूप धारण गर्नुभयो र सेवकहरूलाई भन्नुभयो—'एउटा नक्कली ब्रह्मा आजकल यताउति घुमिरहन्छ। ऊ यदि यहाँ आयो भने उसको राम्ररी पूजा गर्दिनू।'

सोचमा डुबेका ब्रह्माजी जब ब्रह्मलोक पुगे तब सेवकहरूले उनको पूजा गर्न थाले। तँ नक्कली होस्। साँच्चिकैका ब्रह्माजी राजप्रासादमा बस्नुभएको छ।

ब्रह्माजीले आँखा चिम्लिएर ध्यानावस्थित भएर हेर्दा आफ्ना सिंहासनमा श्रीकृष्णलाई बसेका भेट्टाए। सबै बालकहरू र बाच्छाहरूमा पनि उनैलाई पाए। परब्रह्मको दर्शन उनलाई भयो।

ब्रह्माजी बालकृष्णको परीक्षा गर्न हिँड़ेका थिए, तर स्वयं उनकै परीक्षा भयो। कृष्णमा नारायण स्वरूपको दर्शन भयो। मेरा नारायण श्रीकृष्णको रूप लिएर आउनुभएको छ। ब्रह्माजी स्तुति गर्न लागे।

ब्रह्माजीको यो स्तुति बड़ो अद्भुत छ। व्यासजीले यसमा चारै वेद जम्मा गरिदिएको छ।

**नौमीड्य तेऽभ्रवपुषे तडिदम्बराय गुञ्जावतंसपरिपिच्छलसन्मुखाय।**
**वन्यस्रजे कवलवेत्रविषाणवेणु लक्ष्मश्रिये मृदुपदे पशुपांगजाय॥**

(भा० १०-१४-१)

तपाईंको स्वरूप वर्षाकालीन मेघको समान श्याम छ। त्यसमाथि पीताम्बर बिजुली जस्तो झलमलाइरहेछ। कानहरूमा गुञ्जा ( रातीगेडी )-को कुण्डल र शिरमा मयूरको प्वाँखको मुकुट छ। तपाईंको मुखको शोभा अनौठो छ। वक्षस्थलमा वनमाला झुलिरहेको छ। हातमा दही-भातको गाँस, काखीमा लौरो र सिङ्ग तथा कम्मरमा बाँसुरी बाँधिएको छ। कमलभन्दा पनि कमलो चरण भएका र मधुर गोपबालवंशी तपाईं परमात्मालाई म वन्दना गर्दछु।

श्रीकृष्ण मेघका समान श्याम हुनुहुन्छ। परमात्माले मेघसमान वर्ण धारण गरेको छ किनभने मेघ सन्त हो। मेघ नुनिलो पानी पिएर मानिसहरूलाई मधुर जल दिन्छ। नुनिलो पानी दुःखको र मीठो पानी सुखको प्रतीक हो। अतिशय दुःखीलाई सुखी पार्न अर्कालाई जो सुख दिन्छ त्यो सन्त हो। स्वयं सुख भोगेर अरूलाई सुख दिने मानिस सज्जन मात्र हो, तर सन्त होइन।

कृष्णको गलामा गुञ्जमाला छ। माता यशोदाले लगाईदिएको मोतीको माला कृष्णले अर्कै गोपबालकलाई दिनुभएको थियो। घर आएर उहाँले आमालाई भन्नुभो—'आमा मैले यो कण्ठा ल्याएको छु। मोतीको माला मैले एउटा मित्रलाई दिएँ।' कृष्णलाई गुञ्जाको माला बड़ो प्यारो लाग्दछ। यसै कारणले शृङ्गारको समाप्ति गुञ्जामालाद्वारा गरिन्छ।

अलिकति दिएर पनि त्यसलाई धेरै मानिदिने ईश्वर हो। धेरै पाएर पनि थोरै भन्ठान्ने, असन्तुष्ट हुने जीव हो। प्रभुलाई जे पनि दिन्छौ प्रेमसाथ देऊ।

कृष्णको शिरमा मयूर-पंख छ। प्रभुलाई कामसुखत्यागी बड़ो प्रिय छ। उसलाई परमात्माले शिरमा राख्नुहुन्छ। लौकिक कामसुखलाई त्याग गर्‍यौ भने प्रभु तिमीलाई शिरमा बसाउनुहुनेछ। मयूर शारीरिक सम्बन्धद्वारा प्रजोत्पत्ति गर्दैन यो सम्मान भगवान्‌ले दिनुभएको छ।

ब्रह्माजी परमात्माको स्तुति गरिरहेका छन्। उहाँको स्वरूप पञ्चमहाभूतहरूको होइन तर स्वयंसर्जित हो। परमात्माको स्वरूप अप्राकृतिक र अलौकिक हुन्छ। जीवले उसको पूर्वजन्मको प्रारब्धकर्मानुसार शरीर पाउँदछ। परमात्मा स्वेच्छाले शरीर धारण गर्नुहुन्छ। मनुष्यलाई उसको कर्मानुसार शरीर मिल्दछ।

परमात्मा स्वेच्छाले शरीर धारण गर्नुहुन्छ या भक्तहरूको इच्छाको कारणले। निराकार निजानन्दले आज श्रीकृष्णको रूपमा अवतार लिएको छ। परमात्माका अङ्ग-अङ्ग आनन्दरूप हुन्। उहाँको स्वरूप अलौकिक र अप्राकृतिक छ।

परीक्षा लिन भनी गएको प्रयत्नको कारण ब्रह्माजीले प्रभुसँग क्षमा मागे।

'गर्भमा रहेका सन्तानको प्रहारले आमालाई क्रोधित गराउनुको साटो आनन्द दिएजस्तै मेरो अपराधलाई पनि क्षमा गरिदिनुहोस्।'

**उत्क्षेपणं गर्भगतस्य पादयोः, किं कल्पते मातुरधोक्षजागसे।**

ब्रह्माजी भन्छन्, 'मेरो शरीर पञ्चतत्त्वहरूद्वारा बनेको छ, तर तपाईंको शरीर केवल आनन्दमय हो।'

मिश्रीको खेलौना मिश्री हो, हात्ती-घोड़ा होइन। त्यसको टुक्रा भाँचेर दूधमा मिसायौ भने दूध गुलियै हुन्छ। यस्तै किसिमबाट निर्गुणबाट सगुण बनेका परमात्मा पनि आनन्दरूप हुनुहुन्छ।

भगवान् श्रीकृष्णको शरीर पूर्ण आनन्दमय छ। उहाँबाट आनन्द अभिन्न छ।

निराकार अहंकार धारण गरे पनि तत्त्व तर त्यही रहन्छ।

व्रजका गाईहरू र स्त्रीहरू धन्य छन् जसको दूधरूपी अमृत पिउनलाई यहाँले बाच्छा र गोप बालकहरूको रूप धारण गर्नुभयो। तपाईं उही हुनुहुन्छ जसलाई सन्तुष्ट गराउनका निमित्त कैयौं यज्ञयज्ञादिका कार्यहरू असमर्थ भए।

गोकुल-वृन्दावनमा जन्म पाउनेहरू सबै भाग्यशाली छन्।

जबसम्म मनुष्य प्रभुको भक्त हुँदैन तबसम्म उसका निमित्त रागद्वेष चोरसमान छन्, घर झ्यालखाना जस्तो हुन्छ र मोह गोड़ामा लगाएको नेल जस्ता हुन्छन्। भक्त बनेपछि यी सबै मोक्षदाता हुन्छन्।

सबै प्राणीहरूका आत्मा हुन् श्रीकृष्ण। समग्र जगत् श्रीकृष्णले व्याप्त छ।

जो मानिस मुरारि भगवान्को चरण पल्लवरूप नाउँको आश्रय लिन्छन् उनका निमित्त यो संसारसमुद्र बाच्छाको खुरको निशान जत्ति मात्र गहिरो हुन्छ, अर्थात् ज्यादा गहिरो हुँदैन। उनले यसलाई सजिलैसँग तर्न सक्छन्।

भक्तिका विना ज्ञान प्राप्त गर्न खोज्नु ओखलीमा भूसलाई राखेर कुट्नुजस्तै हो, जो निष्फल रहन्छ। भक्ति मात्र मोक्षदायिनी हो।

ब्रह्माजीले वन्दना र स्तुति गरेर क्षमा मागे। ब्रह्माजीले पनि भोजनमा विक्षेप गरेको थियो र स्तुति समाप्त भएर पनि श्रीकृष्ण मौन रहनुभयो।

कसैको भोजन र निद्रामा बाधा पार्नु पाप हो।

ब्रह्मलोकमा निद्रामा सुतेका बालक एक वर्षपछि बिउँझे। उनीहरूले सोचे आजै मात्र लीला भएको हो।

यो लीला एकवर्षसम्म चल्यो र तिनीहरूले अघासुर वधको कथा आफ्ना आमाहरूलाई छिटै भन्न पाएनन्।

केही महात्माहरू यसलाई ब्रह्म-मोह-निवारण-लीला भन्दछन्। श्रीधरस्वामीले यसलाई सर्वोदय लीला भनेको छ। जस्तो आनन्द यशोदालाई दिनुभो त्यस्तै आनन्द गोपिनीहरू, गोपबालकहरू, गाईहरू र बाच्छाहरूलाई श्रीकृष्णले दिनुभो। त्यसकारण यो सर्वोदयलीला हो।

साधना गर्नाले चित्त शुद्धि हुन्छ र पछि ईश्वरको प्राप्ति।

श्रीकृष्ण परमात्माको पूर्ण स्वरूप हुनुहुन्छ, त्यसकारण सबै शक्तिहरू प्राकट्य भएका छन्।

अन्य सबै अवतार अंशावतार हुन् तर राम र कृष्णको अवतार पूर्ण हो।

नृसिंहावतारमा क्रियाशक्ति प्रकट भयो र ज्ञान शक्ति गुप्त रह्यो। अन्य अवतारहरूमा मात्र एक-एक शक्ति प्रकट भयो र अन्य शक्तिहरू गुप्त रहेका थिए।

श्रीकृष्णले प्रत्येक लीलामा एक-एक देवलाई पराभव गर्नुभयो। वत्सलीलामा ब्रह्मको अभिमान चूर गर्दिनुभो, गोवर्धन-लीलामा इन्द्रको र रासलीलामा कामदेवलाई पराभव गर्दिनुभो।

एक दिन कृष्णले भन्नुभो—'आमा, म अब ठूलो भएँ। गाईहरू चराउन जाऊँ म?'

यशोदा—'अहिले तिमी सानै छौ। अलिकति अझ ठूलो होऊ। राम्रो साइत हेराएर म तिमीलाई गोपाल बनाउनेछु।'

यत्तिकैमा त्यहाँ शाण्डिल्य ऋषिको आगमन भयो। यशोदाले कृष्णको नाउँको अक्षर भनिदिएर उनलाई गोपाल बनाउने साइत सोधिन्। तब ऋषिले कार्तिक मासको शुक्ल पक्ष अष्टमीको साइत तोकिदिए। कृष्ण त्यसदिन गोपाल बन्नेवाला थिए। उनी यति उत्ताउला भएका थिए जो उनको निद्रा पनि भाग्यो।

'आमा, मलाई गाईहरू असाध्य मन पर्छन्। यिनको पूजा गर्नेछु।'

प्रातःकाल स्नानादिद्वारा निवृत्त हुनुभएकै थिएन शाण्डिल्य ऋषि आइपुगे। कृष्णले गाईहरूको पूजा गरेको उनलाई बड़ो आनन्द लाग्यो किनभने उनका स्वामीले पूजा गरिरहनुभएको थियो। गाईहरूलाई फूलमाला लगाइदिएर मिठाई खुवाइदिनुभो। गाईहरूले आशीर्वाद दिए, हाम्रा कृष्णको जयजयकार होस्।

यदि प्रभुले सम्पत्ति दिएको छ भने गाईहरूको पालन गर। आजका धनीमानिस कुकुर पाल्छन् र उसलाई आफ्ना साथ मोटरमा राखेर घुमाउन पनि लैजान्छन्। यस्तालाई यही भन्नु छ उनीहरू आगामी जन्मको तयारी गरिरहेछन्। कुकुरसँग ज्यादै स्नेह गऱ्यो भने मृत्युका समयमा उसमा वासना रहन जान्छ र आगामी जन्ममा कुकुरको योनिमा जन्म लिनुपर्ने छ। कुकुरको तिरस्कार नगर, उसलाई रोटी पनि देऊ तर उसका पछि पागल नबन।

गाईमा सबै देवताहरूको बास हुन्छ। सेवा गर्नाले अपमृत्यु टर्दछ। उसको पूजा गर्नुको अर्थ हो उसलाई भरपेट खुवाउनु-पियाउनु। टीका मात्र लगाईदिएर उसको पेट कसरी भर्ला? गाई तर व्रजभक्त हुन्।

एकनाथ महाराजले भागवत भन्दा एउटा ठट्टा गर्नुभयो। रामजीले के-के गर्नुभएको थिएन? कैयौं राक्षसहरूको वध, अनेक यज्ञ-याग, प्रजाको भलिभाँति लालनपालन गर्नुभयो। तर उहाँ

राजाधिराज हुनुभएकाले गाईहरूको सेवा गर्न पाउनुभएन। उहाँको मनमा गौसेवाको वासना रहिरह्यो र कृष्णको अवतार लिएर गाईहरूको सेवा गर्न आउनुभो। अर्थात् राम र कृष्ण एकै हुन्।

बिहानै आएर पण्डितहरूले गणपतिको पूजा गराए। कृष्ण पूर्ण पुरुषोत्तम हुनुहुन्छ। त्यसकारण धर्मका सबै मर्यादाहरूको पालन गर्नुहुन्छ। गाईहरूको पूजा गरेर उहाँले प्रदक्षिणा गर्नुभयो। यो श्रीकृष्णको पौगण्डावस्था हो। शाण्डिल्य ऋषिको आज्ञा भएपछि कृष्णले आमालाई प्रणाम गर्नुभयो। यशोदाका आँखाबाट हर्षाश्रु बगे। कृष्णले रुनाको कारण सोध्नुभयो। तब यशोदाले भन्नुभयो—'तिमी बिहानैदेखि गाई लिएर वनमा जाने छौ र बेलुका फर्कने छौ। तिम्रो मनोहर मुखलाई हेर्न नपाईकन मेरो सारा दिन कसरी बित्ला?'

जब जीव ईश्वरका विना एक क्षण पनि बाँच्न सक्दैन र यस्तो स्थितिमा पुगेपछि तब ईश्वर तुरुन्तै उसको काखमा आइपुग्नुहुन्छ।

यशोदाले कृष्णलाई जुत्ता लाइदिन खोजिन् तर उहाँले नामंजूर गर्दै भन्नुभो—म गोपाल हुँ, गाईहरूको सेवक हुँ, सेवकले कहिल्यै जुत्ता लाउन सक्छ र?

यशोदा—'बाबु, गाई पशु हुन्।'

कृष्ण—'आमा, यस्तो कुरा कहिल्यै नगर्नुहोस्। गाई पशु होइनन्, हामी सबैकी आमा हुन्। उनमा सबै देवताहरूको वास छ। म गाईको सेवक हुँ।'

जबसम्म श्रीकृष्ण गोकुलमा बस्नुभयो उहाँले चार प्रकारका संयमहरूको पालन गर्नुभएको थियो।

( १ ) गोकुलमा उहाँले सिएको लुगा कहिल्यै लाउनुभएन किनभने उहाँका साथी गोपबालक बहुतै गरीब थिए।

( २ ) जबसम्म गोकुलमा बस्नुभयो उहाँले कुनै शस्त्रास्त्र धारण गर्नुभएन। एउटा हातमा नौनी र मिश्री अनि दोस्रो हातमा बाँसुरी हुन्थ्यो। बाँसुरीको मीठो तानले उहाँले सारा गोकुललाई बाउ़ते तुल्याइदिनुहुन्थ्यो।

( ३ ) आफ्नो शिरकेश कहिल्यै काट्नुभएन। गोकुलका कृष्ण प्रेममूर्ति हुनुहुन्छ।

( ४ ) कृष्णले कहिल्यै जुत्ता लाउनु भएन।

श्रीकृष्णले गाईहरूको सेवा जस्तो गर्नुभयो त्यस्तो न कोही गर्न सक्छन् न कोही गर्न सक्लान्। गाईहरूलाई खुवाउने पियाउने वेलासम्म उहाँले केही पनि खानुहुन्नथ्यो। यस्ता कृष्णले गोकुल छोड़ेर जाँदा गाईहरूले आँसु बगाउन लागे, यसमा आश्चर्यै के भयो? पशु भएर पनि सबै गाईहरू श्रीकृष्णका नजीकै बस्न चाहन्थे।

कृष्ण आफ्नो पीताम्बरले गाईलाई पुछ्नु हुन्थ्यो, मिठाई पनि ख्वाई दिनुहुन्थ्यो। आमाले कहिले सोधिन् भने जवाफ दिनुहुन्थ्यो—'मलाई गाई बड़ो प्यारो लाग्छ। उनले ख्वाइदिएकोमा मलाई बड़ो आनन्द लाग्छ।'

अब हामी धेनुकासुर-वधको लीला हेरौं। तालवनमा एउटा राक्षस गधाको रूपमा बस्थ्यो।

एकपटक श्रीदामा र अन्य बालकहरूले उजूर गरे 'तालवनमा फल धेरै छन् तर धेनुकासुर कसैलाई पनि लिन दिँदैन।'

भगवान्ले प्रह्लादलाई वचन दिएको थियो—उसका कुनै पनि वंशजलाई मार्ने छैन। त्यसकारण बलभद्रले धेनुकासुरको वध गरेका थिए।

वनमा फल सड़ेर जाओस् तैपनि कसैलाई नदिने त्यही धेनुकासुर हो। आफूसँग धेरै भएर पनि कसैलाई केही नदिने त्यही धेनुकासुर हो, गधा हो। देहलाई सर्वस्व मान्ने, अतिशय संग्रह गर्ने धेनुकासुर हो।

धेनुकासुर तालवनको मालिक थिएन तर वर्षौंदेखि ऊ त्यहाँ बस्थ्यो र जबर्जस्ती उसले कब्जा गरेको थियो। धेरै मानिसहरू सार्वजनकि संस्थानहरूको हिसाब-किताब गर्दा-गर्दैमा त्यसमाथि कब्जा गर्छन्। केहीले यस्तो संस्थामा गोलमाल गरेर रुपियाँ-पैसा पचाउँछन्। यसप्रकार समाजको धन उड़ाउने आगामी जन्ममा गधा बन्ने छ।

धेनुकासुर देहाध्यास हो, अविद्याको कारणले हुन्छ। अविद्याले जीवलाई संसारका बन्धनहरूमा फँसाइदिन्छ। यसो भएपछि सांसारिक पदार्थहरूका निमित्त जीवका मनमा ममता, राग-द्वेष आदि उत्पन्न हुन्छ। जबसम्म अविद्या नष्ट हुँदैन तबसम्म संसार छुट्न पाउँदैन।

अविद्याले जीवलाई पाँच प्रकारले बाँध्दछ—( १ ) स्वरूप-विस्मृति, ( २ ) देहाध्यास, ( ३ ) इन्द्रियाध्यस, ( ४ ) प्राणाध्यास र ( ५ ) अन्तःकरणाध्यास।

देहाध्यासमा जीव आफूलाई बड़ो स्वरूपवान्, विद्यावान्, सम्पत्तिवान् मान्न थाल्छ, देहाभिमानी भइहाल्छ। यस्ता मानिस अरूहरूको अपमान गर्न थाल्छन्, अरूलाई सताउँछन्। यस्तो देहाध्यासलाई बलभद्रले मारे। भगवान्को आधिदैविक शक्तिद्वारा देहाध्यासको नाश हुन सक्छ।

अब आउँछ कालीयनाग दमनको कुरा।

प्रभुले कालीयनागको उद्धार गर्ने विचार गर्नुभयो। उहाँ सबै बालकहरूका साथ त्यस जलाशयनजिकै भकुण्डो खेल्न थाल्नुभयो जसमा कालीयनाग बस्थ्यो। बालक मित्रहरूले भने—'कृष्ण, यसमा नगा बस्छ र यसको पानी पनि कोही खाँदैनन्।'

खेलै-खेलमा भकुण्डो पनि त्यस जलाशयमा पऱ्यो। भगवान् जलाशयमा हाम्फाल्नुभयो। कालीयनागले उहाँलाई डस्न लाग्यो। जसै-जसै ऊ डस्दै जान्थ्यो विष अमृत बन्दै गइरहेको थियो। कृष्णले एउटा हातमा फणा समात्नुभयो र अर्कोले पुच्छर। त्यसपछि फणामाथि चढ्नुभयो।

सबै बालकहरू डराए तर कृष्णले आश्वासन दिएर फणामाथि नृत्य गर्न थाल्नुभयो। कृष्णले आफ्नो तौल बढ़ाउँदै जानुहुन्थ्यो, त्यसकारण कालीयनाग व्याकुल भयो। नाग-पत्नीहरू शरण परेर प्रार्थना गर्नथाले—'तपाईंले जो हाम्रा पतिलाई दण्ड दिनुभयो सो उचित हो किनभने यसबाट दुर्जनको पापको नाश हुन्छ। तपाईंले तर कर्मानुसार सबैलाई दण्ड दिनुहुन्छ।'

रावणको वधका समयमा मन्दोदरीले पनि यस्तै भनेकी थिइन्। उनले रामचन्द्रजीसँग प्रार्थना गरेकी थिइन् : भनेकी थिइन् 'मेरा पतिको कुकर्म उनको यस हीन दशाका निमित्त कारण हुन गयो। यिनलाई मार्नमा तपाईंलाई कुनै दोष छैन।'

नागपत्नीहरू भन्छन्—'त्यसो तर हाम्रा पति दुष्ट होइनन् किनभने उनको शिरमा तपाईंले आफ्नो चरण राख्नुभएको छ।'

श्रीकृष्णले कालीयनागलाई भन्नुभयो—'तिम्रो कारणले यो सम्पूर्ण जलाशय विषैलो हुन गएको छ, त्यसकारण तिमी यहाँबाट कहीं अन्तै टाढ़ा जाऊ।'

नाग—'प्रभु ! म जान्नँ भन्दिनँ, तर मलाई गरुड़जीको डर लाग्छ।'

भगवान्—'मेरा मङ्गलमय चरणका स्पर्शका कारण गरुड़जीले तिमीलाई कहिल्यै सताउने छैनन्।'

कालीयनाग गरुड़जीको मन्त्रले पानीमा लुकेको थियो।

कालीयनागको फणा सीमित थियो, हाम्रा हजारौं छन्। हाम्रा सङ्कल्प र विकल्प फणा हुन्। भगवान्सँग प्रार्थना गर, 'मेरा मनका कालीयनागको दमन होस्, त्यसमाथि आफ्नो चरण राखिदिबक्सियोस्।'

कालीयनागको मुखमा विष थियो, तर हाम्रा एक-एक इन्द्रियमा र मनमा पनि विष भरिएको छ। एउटा मानिस हामीलाई मन पर्दैन अर्कालाई त्यो रत्न बन्न जान्छ। यस्तो राग-द्वेष विषय-विकार आदि विषै हो। जबसम्म इन्द्रियहरू वासनारूपी विषले भरिएका हुन्छन् तबसम्म भक्ति हुन पाउँदैन। त्यसैले इन्द्रियहरूमा मिसिएको विषलाई नष्ट गर्नु छ। यस विषलाई सत्सङ्ग द्वारा कम गर्दै रहू।

कालीयनाग इन्द्रियाध्यास हो।

यमुना-भक्तिमा इन्द्रियाध्यास आयो भने शुद्ध भक्ति गर्न सकिन्न। भोग र भक्ति पारस्परिक शत्रु हुन्।

भक्तिको बहानाले इन्द्रियहरूलाई अल्मल्याउने कालीयनाग हो।

इन्द्रियबाट मात्र होइन बरु मनबाट पनि विषयहरूलाई त्याग गर्‍यौ भने भक्ति सिद्ध हुन्छ।

भक्तिमा विलासिता ( विषधर ) घुस्रिएपछि भक्ति नष्ट हुन जान्छ। भक्तिमार्गका आचार्य वल्लभाचार्य, रामानुजाचार्य, चैतन्य महाप्रभु आदि सबै परिपूर्ण वैरागी थिए। पूर्ण वैराग्यविना

भक्ति हुन सक्दैन। भक्तिज्ञान वैराग्यकी जननी हुन्। भक्तिमार्गका आचार्य केवल एउटै वस्त्र धारण गरेर सारा जगत्मा विचरण गर्थे तर पछि यस मार्गमा थुरै जसो कालीयनाग ( विलासी पुरुष ) घुस्त्रिए र भक्ति मार्गलाई उनीहरूले विषाक्त गरिदिए, अपमानित गरिदिए।

सेवा गर्नु सजिलो छैन। संसार सुखलाई मनबाट पनि त्याग गर्नेले देव सेवा र देश सेवा गर्न सक्छ। महाप्रभुले भन्नुभएको छ—'ईश्वरमा प्रभुसेवाबाट अनुराग र शारीरिक सुख-विलासबाट विराग राख्न सक्यौ भने भक्ति मार्गमा अगाड़ि बढ्न सक्छौ, देव-सेवा र देश-सेवामा इन्द्रियहरूको लालन-पालनको कुनै स्थान छैन। इन्द्रियहरूका सेवकले देश-सेवा कहिल्यै गर्न पाउने छैन।'

सबै इन्द्रियहरू वासना विषले भरिएका छन्। भगवान्ले सबै दैत्यहरूको नाश गर्नुभएको थियो, तर कालीयनागलाई दमन मात्र गरी उसलाई नियन्त्रित गर्नुभएको थियो।

इन्द्रियहरूको नाश गर्ने होइन तर दमन गर्नुपर्ने हो। उनलाई विवेकद्वारा वशमा गर्नु छ। इन्द्रियहरूलाई सत्सङ्ग गराऊ। त्यहाँ उनलाई भक्तिरसको प्राप्ति हुनेछ र ती शुद्ध हुनेछन्।

इन्द्रिय विषयहरूलाई भित्रबाट निचोरिदेऊ र उनलाई सत्सङ्ग-मण्डलीमा पठाइदेऊ, कालीयनागलाई भगवान्ले विषरहित गरेर रमणकद्वीपमा पठाइदिनु भएको थियो। इन्द्रियहरूलाई शुद्ध गऱ्यौ भने ती भक्तिरसमा लीन हुन सक्नेछन्।

भोगद्वारा इन्द्रियहरूको क्षय हुन्छ र भक्तिद्वारा पोषण।

जो आनन्द योगी समाधिमा पाउँछन् त्यही आनन्द वैष्णवहरूले कृष्ण-कीर्तनमा पाउँछन्। कीर्तन गर्दाखेरि दृष्टि सदा कृष्णसँग जुधाई राख।

वाणी कीर्तन गर्नेछ, मन स्मरण गर्नेछ र आँखाहरूले दर्शन गर्नेछन् अनि जप सफल हुनेछ।

जबसम्म इन्द्रियहरूमा वासना-विष भरिएको हुन्छ, भक्तिको प्राप्ति हुन सक्नेछैन।

इन्द्रियाध्यास आएपछि भक्ति अशुद्ध हुन जान्छ।

विषरहित गरेर इन्द्रियहरूलाई रमणकरूपी सत्सङ्गमा पठाइदेऊ। त्यहाँ उनलाई भक्तिरस मिल्नेछ।

इन्द्रियहरूलाई भोगद्वारा होइन भक्तिरसले भिजाउनु र पालन गर्नुपर्छ। भक्तिद्वारा इन्द्रियहरूलाई रमणकद्वीप ( सत्सङ्ग )-मा रमण गराऊ।

भक्तिमार्ग अत्युत्तम हो। यसमा इन्द्रियपुष्पलाई भगवान्का चरणमा राख्नु छ। ज्ञान मार्गमा इन्द्रियहरूसँग सङ्घर्ष गर्नुपर्छ, तिनलाई मार्नुपर्छ। यसो नगर, संझाई-बुझाईकन यिनलाई प्रभुमार्गतर्फ फर्काइदेऊ।

श्रीकृष्णले दुइपटक दावाग्नि-पान पनि गर्नुभएको थियो।

यमुनाको जलबाट श्रीकृष्ण सकुशल बाहिर निस्किएको देखेर सबैलाई हर्ष भयो। उहाँले यमुनाकिनारामै रात्रिको वास गर्नुभयो। त्यस समयमा दावाग्नि फैलियो र व्रजवासीहरू घेरिए। भगवान्‌ले दावाग्निलाई पान गर्नुभयो र सबैलाई बचाइदिनुभयो।

एकपटक सबै गोपबालक खेलकूदमा मस्त भए र उनका गाईहरू चर्दै-चर्दै धेरै टाढ़ा पुगे। सबै उनलाई खोज्न भनी निस्के। यत्तिकैमा त्यहाँ दावाग्निले सबैलाई घेरिदियो। सबै बालक कृष्णलाई बचाउनका निमित्त बोलाउन थाले। कृष्णले उनलाई भन्नुभयो—सबैले आफ्ना-आफ्ना आँखा बन्द गर। म मन्त्र-जप गरिरहेछु। कृष्णले विराट् रूप धारण गर्नुभो र दावाग्निपान गरिदिनुभयो।

जुनसुकै वेलामा प्रतिकूल अवस्थाको दावाग्निमा तिमी घेरियौ भने आँखा बन्द गरेर प्रभुको ध्यान गर। प्रतिकूल अवस्थामा जीउलाई जलाउनु दावाग्नि हो। ईश्वर यस्ता व्यक्तिलाई सान्त्वना दिनुहुन्छ, म तिम्रा साथैमा छु।

संसाररूपी दावाग्निले चारैतर्फबाट दनदन बलेर जीवलाई घेर्दछ। अड्डामा माथिल्ला तहवालासँग झगड़ा हुन्छ र घरमा आएर मानिसले देख्छ आफ्नी आमा र पत्नी हात हालाहाल गरिरहेछन्। पक्ष कसको लिने आमाको या पत्नीको ? यस्तो सांसारिक दावाग्निले सबैलाई घेरेको छ। यस्ता समयमा ती गोपबालकहरूको जस्तै आँखा चिम्लिएर भगवान्‌को शरण पर्नुबाहेक अरू केही छैन। उहाँले सबै दुःखलाई पिइदिनुहुनेछ र रक्षा गर्नुहुनेछ। प्रभुको नाम-जपले सांसारिक दावाग्निलाई निभाइदिनेछ।

भगवान्‌ले प्रलम्बासुरको पनि वध गर्नुभएको थियो। प्रलम्बासुर अर्थात् ठूल-ठूला वासना। यी वासनाहरूका कारण जीवले ईश्वरसँग भेट गर्न पाउँदैन। शब्दब्रह्मको चिन्तन गर्‍यौ भने अन्तःकरणका वासनाहरूको विस्तार-विस्तार क्षय हुनेछ।

रासलीलामा जानु छ भने सबै दुर्गुणहरूलाई नाश गर। दुर्गुणरहित भएर शुद्ध भएपछि मात्र जीव रासलीलामा स्थान पाउन सक्छ।

कृष्णको बाँसुरी सुनेर उनको मधुर तानको गोपिनीहरूले जो वर्णन गरे त्यही वेणुगीत हो।

मनोहर शरद् ऋतु आयो। वृन्दावनको शोभा अनौठो भएको छ। मन्द-मन्द सुगन्धित हावा चलिरहेको थियो। भगवान्‌ले गाईहरू र गोपालहरूका साथ वृन्दावनमा प्रवेश गर्नुभयो। गाईहरूलाई चराउँदै कृष्ण वंशी बजाउन थाल्नुभयो। गोपिनीहरू वंशीको सङ्गीतमा लीन भए।

बाँसुरीवादन नादब्रह्मको उपासना हो। बाँसुरी जबसम्म बज्दैन, कृष्णको दर्शन पनि पाइँदैन।

**वेणुनाद :— व = विषयानन्द, इः ब्रह्मानन्द।**

वेणु श्रवणको आनन्द त्यो आनन्द हो, जसका सामुन्ने विषयानन्द र ब्रह्मानन्द तुच्छ ठहरिन्छन्। यस नादब्रह्मको सामुन्ने सबै आनन्द निकृष्ट हुन्छन्।

गोपिनीहरू घरमा बसेर बाँसुरी सुन्न सक्थे र भगवान्‌को लीला पनि हेर्न सक्थे।

वेणुगीतका श्लोक भिन्न-भिन्न गोपिनीहरूका हुन्। श्रीधरस्वामी भन्नुहुन्छ—'श्लोकका भिन्न-भिन्न गोपिनीहरू भएका कारण सबै श्लोक एक-अर्कासँग कुनै सम्बन्ध राख्दैनन्।'

गोपिनीहरू भन्दछन्—'हाम्रा आँखा र आँखायुक्त जीवनको यही सफलता हो। के भने जब श्यामसुन्दर श्रीकृष्ण र गौरसुन्दर बलराम गोपबालकहरूका साथ वनमा गाईहरू चराउनका निमित्त आउने-जाने हऊन्, आफ्ना दुइ ओठका बीच मुरली धारण गरेका होऊन् र हाम्रातर्फ प्रेमपूर्ण कर्के दृष्टिले हेरिरहेका हऊन् तब उसबेला हामी उनको मुख-माधुरीको पान गर्न सक्ने हुन्छौं।'

बलराम-श्रीकृष्ण उत्तम नटहरू जस्तै अत्यन्त शोभायमान छन्।

यसो तर कृष्णको दर्शन गर्ने आँखाहरू सार्थक भएका छन्। यस्तो दर्शनविना आँखाहरूको अरू कुनै सार्थकता छैन। जस्ता प्रकार नेत्रहरूको सफलता श्रीकृष्णको दर्शन पाउनमा हुन्छ, सोही प्रकार देहको सफलता सबै इन्द्रियहरूको श्रीकृष्ण-सेवामा लागिपर्नमा छ।

ए सखी ! कृष्ण वंशी बजाइरहेछन्। लौ सुन यो वंशी होइन, कृष्णकी पटरानी हुन्। मैले सुनेको छु जब उनी खान बस्दछन् तब बाँसुरी कम्मरको पटुकामा राख्दछन् र जब सुत्दछन् तब उसलाई आफ्नै साथ पलङ्गमा राख्दछन्। किनभने बाँसुरी उनकी पटरानी हुन्।

प्रभुको ओठ बाँसुरीको तकिया छ, हात गद्दी छ, आँखाहरू नोकर्नीहरू भएका छन्। परेलाहरू पंखा भएका छन् र नत्थले छाताको काम दिएको छ। यसरी यस बाँसुरीको परमात्माका साथ विवाह भएको छ, त्यसकारण उसलाई नित्य संयोग मिल्न गएको छ।

यस वेणुले आफ्नो पूर्वजन्ममा भन्न सकिन्न कुन चाहिँ तपस्या गरेकी होली, जसले गर्दा उसलाई कृष्णको अधरामृतको नित्य पान गर्ने सौभाग्य मिल्यो।

एउटी गोपिनीले बाँसुरीसँग सोधी—'ए सखी ! तिमीले यस्तो कुनचाहिँ पुण्य कमाएकी थियौ र प्रभुले तिमीलाई आफ्नी तुल्याउनु भएको छ ?'

बाँसुरी—'मैले बड़ो तपश्चर्या गरेकी थिएँ। मेरो पेट खाली छ। म आफ्ना पेटमा केही पनि राख्दिनँ।'

बाँसुरी आफ्ना पेटमा केही राख्दिन त्यसैले ऊ भगवान्‌की प्यारी छ। उता लट्ठीले सारा शत्रुता, द्वेष, कटुता आफ्ना पेटमा राख्दछ। यी सबै पेटमा सँगालेर राख्ने वस्तु होइनन्। जो बाँसुरी जस्तो बन्न सक्छ त्यो भगवान्‌लाई मन पर्छ।

बाँसुरी भन्दछिन्—ममा कैयौं गुण छन्, मैले कष्ट भोगेकी छु। ६ ऋतुहरूको मार पनि मैले खपेकी छु। कसैले मेरो पेट खुर्किएर खोक्रो तुल्याइदिएर पनि म चुपै रहें। मैले कति दुःख सहें र भगवान्ले मलाई मन पराउनु भयो।

जतिसुकै दुःखको घड़ी किन नआइपरोस्, धैर्य नछाड़। थोरै खानेको शरीर निरोग रहन्छ र धैर्य धारण गर्नेको मन।

बाँसुरी आफ्नो स्वामीको इच्छानुसार बोल्दछे। यस्तै प्रकारले भगवान्लाई जो इच्छा हुन्छ सोही बोल्ने गर, गफी मानिस अविवेकी हुन जान्छ। त्यसले आफ्नो स्वयं विनाश गर्छ र अर्कालाई पनि नोक्सान गर्छ। हामी सबैका स्वामी हुनुहुन्छ ईश्वर। उहाँको इच्छालाई हामीले वाणी सुम्पनुपर्छ।

म आफ्नो स्वामीका इच्छालाई सुरहरूमा परिणत गर्छु, जसले गर्दा सज्जन, दुर्जन, साना-ठूला, नाग, कस्तूरी, मृग, गाई सबै हल्लिन थाल्छन्। सबैलाई आनन्द लाग्ने त्यस्तो मधुर तान म दिन्छु।

बाँसुरीले धेरैजसो कुरा सहन गरेर प्रभुका सम्मुख हुन पाएकी छन्। जसले सोची विचारीकन दुःख सहन गर्छ उसको पाप डढ़ेर जान्छ। मीठो बोली बोल्ने निश्चय गर। कसैको हृदयलाई बिझाउने गरी कहिल्यै नबोल। लट्ठीको चुटाइ बिर्सन सकिन्छ तर शब्दहरूको कठोर वचन भने सँधैं संझना भइरहन्छ। केही कठोरै बोल्नु परेछ भने पनि प्रेमपूर्वक बोल।

बाँसुरीको एउटा गुण अरू पनि छ। जब ऊ एक्लै पर्छे तब ऊ मौन रहन्छे। तिमीले पनि ईश्वरको ध्यानको समयमा मौन-पालन गर। कति मानिस शरीरबाट सावधान हुन्छन् मुख टम्म पार्छन् तर मनद्वारा भने हिंड्ने-डुल्ने र बोल्ने गर्छन्। मौनको अर्थ हो मनद्वारा पनि केही नबोलिनु। मनको मौन सर्वोत्तम मौन हो।

महारानी बाँसुरीले बोलिदिएपछि आफ्ना पेटमा केही पनि राख्दिनन्।

'ए सखी, हेर, लौ बाँसुरीको स्वर सुनेर यी वृक्षहरूले पनि मदको धारा बगाइरहेछन्।'

कृष्णाको बाँसुरी बजाइले वृक्षहरूलाई आनन्द लाग्छ, किनभने उनकी छोरीको विवाह परमात्मासँग भएको छ।

**श्रुश्रुमुमुचुस्तरवो यथाऽर्याः।**

एकजना महात्मा भन्छन्—'यी वृक्षहरूको हर्षको आँसु हो, किनभने उनकी कन्या श्रीकृष्णाकी पटरानी हुन गएकी छन्।'

अर्का थरी सन्त भन्दछन्—'यी वृक्षहरू दुःखले रोइरहेछन्। उनीहरू विचार गर्छन् बाँसको मुख्य काम घरको छाना भएर परोपकार गर्नुपर्ने हो तर यसले बाँसुरी भएर घरहरू भत्काइरहिछ। कृष्णाको वंशीको ध्वनि सुनेर जो कोहीलाई पनि घरमा बस्न मन लाग्दैन। ऊ 'राधेश्याम-राधेश्याम'

को रटना गर्दै कृष्णमिलनको धुनमा घरबाट बाहिर निस्किदिन्छे। हाम्री यस कन्याले घरहरूको रक्षा गर्नुको साटो उजाड़ पारिदिने काम थालेकी छ। यस विचारबाट सबै वृक्षले अफशोच गरेर आँसु बगाउन थालेका छन्।'

एक अर्का सन्तको भनाइ यस्तो छ—'वृक्षहरूले विचार गरिरहेछन् पानीबाट डुब्न थालेकालाई जोगाउने आफ्नो जातिले पाएको काम छोड़ेर यो बाँसुरी सबैलाई आनन्दरसमा डुबाउनपट्टि पो लागेकी छ।'

## धन्याः हरिण्य आकर्ण्य वेणुरणितं सहकृष्णसारः।

ए सखी, हेर, लौ! कृष्णको बाँसुरीवादन सुनेर हरिणीहरू दगुर्दै आइरहेछन् र आँखा झिम्म नगरी एकनजरले कृष्णलाई हेरिरहेछन्। गोपिनीहरूका दृष्टि यति तीक्ष्ण छन् जो आफ्ना घरबाटै हरिणीहरूको स्थिर नजर हेर्न सक्छन्।

हरिणी आफ्ना पतिलाई पनि प्रभु समक्ष लैजान्छे। उसका पतिले उसलाई सहयोग दिन्छ। यसका पति अनुकूल छन्, तर मेरा पति देव-सेवामा प्रतिकूल छन्। अरू म के भनूँ? मभन्दा यी हरिणीहरू धन्य छन्, भाग्यशाली पनि छन् किनभने कृष्णको पूजा नयनकमल चढ़ाएर गर्दछन्। अरू केही उनीसँग छँदै छैन। यदि पति-पत्नी मिलेर पूजा गर्छन् भने भगवान् छिटै प्रसन्न हुनुहुन्छ।

'सहकृष्णसाराः' अर्थात् पतिलाई सत्सङ्गमा लगेर परमात्माको नजिक लैजाने हरिणी पत्नी साँच्चिकैको अर्थमा पत्नी हो।

पतिलाई परमात्माको सान्निध्यमा लैजाने, पतिद्वारा सत्कर्म गराउने पत्नी पतिकी मित्र हुन्छे, तर पतिलाई केवल भोगविलासमा डुबाइराख्ने पत्नी पतिकी शत्रु हुन्छे।

कृष्णसेवामा हरिणीहरूलाई उनका पतिले सहयोग दिन्छन् तर यता हाम्रा पति सहयोग दिँदैदिँदैनन् बरु बाधा पनि पारिदिन्छन्। त्यसकारण यी हरिणीहरू बड़ा भाग्यमानी छन्।

हामीभन्दा वृन्दावनका हरिणीहरू श्रेष्ठ छन् जसले आफ्ना पतिको सहयोग पाएका छन्।

'सखी, म तिमीलाई अरू के-के भनौं? वंशीनाद सुन्नासाथ गौमाताहरू चर्न छोड़ेर आफ्नो कानरूपी दुनाद्वारा वंशीको स्वर-अमृत बड़ो ध्यानले पान गर्न थाल्छन्। भगवान्को प्रेम रसिलो वंशीको धून सुनेर गाईहरू घाँस चपाउन बिर्सेर आनन्दको आँसु बगाउन थाल्दछन्, बाच्छा-बाच्छी पनि दूध पिउन बिर्सिन्छन्। कृष्णको बाँसुरीवादन मनुष्य, पशु, पंक्षी, वृक्ष सबै शान्तिपूर्वक सुन्दछन्। वृन्दावनका वनको सृष्टि दिव्य छ।'

जब कृष्ण वंशी बजाउन थाल्दछन् तब चराचुरुङ्गी पनि शान्त हुन्छन्। कैयौं ऋषि पनि पक्षीरूप लिएर वृन्दावनको लीला-निकुञ्जमा 'राधेश्याम-राधेश्याम' गर्दै यताउति उड्छन्, फिर्छन्। यी पक्षीहरू प्यास लागेमा पनि राधेश्यामको जप गर्दै पानी पिउन जान्छन्। उनलाई गङ्गाको

किनारामा मौन रहने बानी भएकाले यहाँ पनि मौन भएर कृष्णको बाँसुरी सुन्दछन्। केही चरा यस्ता पनि छन्, जो यमुनाजीको जलपान गर्नलाई रुखबाट तल ओर्लंदैनन्। जलपान गर्न जानाले कृष्णसँग विरह होला भन्ठान्दछन्। वृन्दावनका पक्षी सामान्य पक्षी होइनन्, पहिलेका मुनि हुन्। त्यसकारण उनीहरू वृक्षहरूमाथि मौन रहेर भगवान्‌को वंशी सुनेर आत्मालाई आनन्द दिन्छन्। यी पक्षीहरू धन्य छन्।

यशोदा आएर भन्न थालिन्—सधैं-सधैं कराइरहन्छु र पनि कृष्ण जुत्ता लाउँदै लाउँदैन।

सखी—'चिन्ता नगर। उनको एक मित्रले उनको शिरमाथि छाता ओढ़ाएर हिँड्छ।'

माता—'को होला त्यो ?'

गोपिनीहरू—'ती मेघराज कृष्णका मित्र हुन्। त्यसकारण जहाँ-जहाँ कृष्ण जान्छन् उनी छाया पारिदिन्छन्। कृष्णको लीला अनौठो छ। गर्मी हुनासाथ झर-झर वर्षा हुन थाल्छ।'

'पृथ्वीमा खाली पाउ हिँड्दा उसलाई कष्ट हुँदोहोला' हुँदैन, गिरिराज कृष्णका निमित्त नौनीभन्दा पनि कमलो भइदिनुभएको छ। कृष्णको चरणस्पर्शले गर्दा गिरिराजको कठोरपना हटिहाल्दछ। गिरिराज सर्वश्रेष्ठ हरिदास हुन्। गाईहरूलाई घाँस दिन्छन्। गिरिराज, कृष्णका सँगसँगै उनका प्रिय गाईहरूको पनि सेवा गर्दछन्। त्यसकारण उनी कृष्णका प्यारा छन्।

कृष्ण भगवान्‌को सेवा गर्नेलाई चाहिँ वैष्णव भनिन्छ, तर गाईहरूको, गरीबहरूको सेवा गर्नेहरू महावैष्णव भए।

परमात्माको चरणस्पर्शबाट गिरिराजलाई रोमाञ्च हुन्छ। कहीं कतै खाल्डा-खाल्डी हुन गयो भने तिनलाई सम्म पार्ने उपाय कृष्णसँग छ। उनी बाँसुरी बजाउन थाल्छन् गिरिराज आनन्दले फुल्न थाल्छन् र खाड़ल पनि पुरिन जान्छ।

'ए सखी, कृष्ण कदमको रूखमाथि चढ़ेर गाईहरूलाई बोलाइरहेछन्। वंशीद्वारा गङ्गा, गोदावरी, यमुना नाउँबाट बोलाइरहेछन्। गाईहरू आनन्दले दौड़िरहेछन्। हेर गाईहरूले त्यस वृक्षलाई घेरेर आनन्दको आवाज प्रकट गर्दैछन्। मेरा कृष्णलाई हेरिरहेछन्। कति मनोहर दृश्य छ यो। एउटा आफ्नो कुरा म पनि भनिदिऊँ ? यहाँबाट कृष्णलाई हेरिरहिछु, तब मलाई लाग्छ म बहुलाई भएर कृष्णलाई भेट्न भनी दगुरिरहेकी छु जब लोकले के भन्लान् भन्ने विचार आउँछ तब बाटामा थामिएर विचार गर्दछु—ओहो ! म कहाँबाट कहाँ दौड़ेर आइछु ?'

यी गोपिनीहरूले स्त्री र पुरुषको भेदभाव बिर्सिएमा उनले रासलीलामा प्रवेश गर्न पाउने छन्। अहिलेसम्म लोकलज्जाको-देहाध्यासको क्षीण भान छ। देहाध्यास मेटिएपछि रासलीलामा प्रविष्ट हुनेछन्। देहाध्यास नष्ट भएपछि गोपीभाव प्राप्त हुन्छ।

जब श्रीकृष्ण गाईहरूलाई बोलाउनुहुन्छ त्यसवेला नदीहरूलाई भ्रान्ति हुन्छ उनीहरूलाई बोलाइएको हो। ती बिचरा स्वयं जान सक्दैनन् तापनि तरंगरूपी हातहरूमा कमल पुष्प लिएर वेणुनादको दिशातर्फ फ्याँकिदिएर भगवान्‌लाई अभिवादन गर्दछन्।

जड़ चेतन सबै वंशीनादबाट मोहित भएका छन्। मुरलीको मधुर ध्वनिबाट आज समस्त सृष्टि आनन्दमय भएको छ। श्यामको त्यो मधुर वंशीको प्रभावको कुरा गरौं भने के भनौं ? ब्रह्मानन्दबाट सुनौं—

ऐ श्याम तेरी वंसरीने क्या सितम किया ?
तनका रहा न होश, मेरे मनको हर लिया।
बंसरीकी मधुर टेर सुनी प्रेम रस भरी,
व्रजनारी लोकलाज कामकाज तज दिया।
नभमें चढ़े विमान, खड़े देवगण सुनें,
मुनियों का छुटा ध्यान, प्रेम भक्तिरस पिया।
पशुओंने तजी घाँस, पक्षी मौन हो रहे,
यमुनाका रुका नीर, पवन थिर हो गया।
ऐसी बजाई बंसरी, सब लोक वश किया,
ब्रह्मानन्द दरश दीजिए, अभी देर क्यों किया।

नाद ब्रह्म र नामब्रह्मको ऐक्य भएपछि रासलीला हुन्छ।

वेणुगीत नादब्रह्मको उपासना हो। नाउँमा नाउँको लय नभैकन नादब्रह्म हुन पाउँदैन।

गोपिनीहरू यति तन्मय भएका थिए जो वनमा भइरहेको वेणुनादलाई उनीहरूले घरमै बसेर पनि सुन्न सक्थे।

जब दृश्य, दर्शन र द्रष्टा एक हुन जान्छन् अनि दर्शनमा एकाग्रता, तन्मयता हुन जान्छ।

ईश्वरले चाहीं प्रतिदिन बंशी बजाएर जीवलाई आफूतर्फ बोलाइरहनुभएको छ, तर यो बहिरो जीव सुन्दै सुन्दैन।

वृन्दावनको कुरा र कृष्णको कथा भन्दाभन्दै गोपिनीहरू अनायास समाधिस्थ भए।

वर्णयन्त्यो मिथो गोप्यः क्रीड़ातन्मयतां ययु।

(भा० १७-२१-२०)

कृष्ण क्रीड़ाको वर्णन गर्दा-गर्दै गोपिनीहरू श्रीकृष्णमय भए। उनका हृदयमा लीलाहरूको स्फुरण भइरहने भो। उनलाई ध्यान, धारणा आदिको आवश्यकतै थिएन।

योगीजन नाक समातेर प्राणायाम गरी ब्रह्मदर्शन गर्ने कोशिश गर्छन् र पनि उनीहरू सफल हुँदैनन्, तर त्यही ब्रह्मदर्शन गोपिनीहरूलाई अनायासै प्राप्त हुन्छ। गोपिनीहरू योगीहरूभन्दा पनि श्रेष्ठ छन्।

प्राणायाम, प्रत्याहार, ध्यान, धारणाबाट जो आनन्द योगीलाई प्राप्त हुन्छ सोही आनन्द गोपिनीहरूले अनायासै पाउँछन्, योगीहरूको जस्तो कष्ट पनि यिनलाई सहनुपर्दैन। सबै इन्द्रियहरूलाई भक्तिरसको दान दिँदै गोपिनीहरू श्रीकृष्णमा तन्मय भए। यस लीलामा अनायासै यिनको निरोध हुन जान्छ। योगीहरूद्वारा प्राप्त कष्टसाध्य ब्रह्मानन्दलाई गोपिनीहरूले अनायासै प्राप्त गर्छन्।

गोपिनीहरूको समाधि दिव्य छ। ती तर प्रेम-संन्यासिनी हुन्। तिनीहरूले श्रीकृष्णका निमित्त सांसारिक सुखलाई त्यागिदिएका छन्। शुकदेवजी जस्ता योगी पनि यिनको कथा भन्नुहुन्छ। शुकदेवजीलाई लाग्दछ आफूले संसार र वस्त्र त्यागेर संन्यासी भएको हुँ। उता गोपिनीहरूले भने संसारभित्रै बसी सारी लाएर पनि संन्यासिनी भएका छन्। शुकदेवजी यिनको लीलाको वर्णन गर्दा-गर्दै बहुलाउनु भएको छ। यी गोपिनीहरूको होइन, ज्ञानीको, योगीको कथा हो।

ज्ञान र भक्तिलाई बढायौ भने रासलीलामा प्रवेश पाइन्छ। ज्ञान र भक्ति बढाएर के लाभ? व्रजवासी गोवर्द्धन पर्वतमाथि गएका थिए। तिमी पनि वर्षमा एक आधा महिनाको छुट्टी लिएर पवित्र तीर्थमा वास गर। प्रवृत्तिलाई कम गरेर निवृत्तिको अवलम्बन गर। एघार महिना नोकरी कामकाज गऱ्यौ, अब एक महिना गङ्गा, नर्मदा जस्तो कुनै पनि पवित्र नदीको किनारामा बसेर जप, ध्यान, कीर्तन गर। प्रतिवर्षमा एक महीना भगवान्का निमित्त निवृत्त भएर तीर्थवास गर। सारा वर्ष घरमै बस्नु ठीक होइन। गृहस्थको घर भोगभूमि हो, त्यहाँ ठूला-साना पाप भईहाल्छन्। ममताले विषमता ल्याउँछ र विषमताले पाप।

पन्द्र सौ विष्णु सहस्त्रनाम पाठ गर्नाले एक विष्णुयागको फल पाइन्छ। पवित्र तीर्थहरूमा बसेर यही पाठ गर। सांसारिक प्रवृत्तिहरूमा लागिरहनाले राम्ररी भक्ति गर्न सजिलो छैन। घरमा भगवान्का साथसाथै स्त्री-सन्तान, धन-सम्पत्तिको पनि पूजा भइरहन्छ। त्यसकारण भक्ति पूर्णतः सफल हुन पाउँदैन।

रासलीला भागवतको फल हो। रासलीलामा पुरुष र नारीको होइन पूर्ण पुरुषोत्तम र शुद्ध जीवको मिलन हुन्छ।

सबै इन्द्रियहरूद्वारा भक्तिरसको पान गर्दै जुन जीवले आफ्नो स्त्रीत्व या पुरुषत्व बिर्सिदिएको छ त्यो मात्र गोपी हो। आफ्नो पुरुषत्व या नारीत्वको संझना भइरह्यो भने गोपी भाव जागेर आउँदैन। यस सर्वोत्तम गोपीभावमा आफ्नो देहभाव, आफ्नो नारीत्व या पुरुषत्वको विस्मरण हुनुपर्छ। देहभान बाँकी रहेका खण्डमा काम नष्ट हुँदैन। काम बिर्सिएमा मात्रै गोपीभावको जागरण हुन्छ। परमात्मालाई यसरी स्मरण गर जसले देहभानै नरहोस्।

ज्ञानमार्गका अनुसार, अज्ञानका कारण त्यस भेदको आभास हुन्छ जसलाई नाश गर्नु छ। भक्तिमार्गले चाहिँ भेदको नाश गरेर अभेद सिद्ध गर भन्छ। भक्त, भक्तिका सहाराले भेदको नाश गरी श्रीकृष्णका साथ एक हुन जान्छ।

वासनाको क्षय भएपछि मात्र जीवन सुध्रिन थाल्छ। पूतना-वासना र तृणावर्त रजोगुणको नाश भएपछि जीव सात्त्विक हुनेछ।

भक्तिरसले सबै इन्द्रियहरूलाई पुष्ट गर्छ। दावाग्नि शान्त भएपछि वेणुगीत सुन्नसकिन्छ। यी सबै तयारी रासलीलामा जानलाई भएको छ।

ईश्वरको प्रत्यक्ष स्वरूप हो नादब्रह्म। यसमा तन्मयता भएपछि परब्रह्मको प्राप्ति हुनेछ।

वेणुगीतमा ब्रह्मचारिणी गोपिनीहरूको रास हो। यज्ञ-पत्नीहरूको प्रसङ्गमा विवाहिता र गोवर्द्धन लीलामा वानप्रस्थी गोपिनीहरूका साथ रास हो।

वेणुनादमा नादब्रह्मको उपासना गर्दै गोपिनीहरू तन्मय भए। गोपिनीहरूले कात्यायनीको व्रत गरेकाले श्रीकृष्णले उनलाई दिव्य वस्त्रहरूको दान दिनुभयो।

एकपटक गोपबालकहरूलाई भोक लागेछ र उनले कृष्णसँग कुरा गरे। कृष्णले उनलाई यज्ञ गरिरहेका ब्राह्मणहरूकहाँ पठाउनुभयो। ब्राह्मणहरूले केही पनि दिएनन्, तर ब्राह्मणहरूका पत्नीहरूले उनलाई भोजन गराए। यही हो यज्ञपत्नीहरूको संक्षिप्त कथा।

अन्नदान सर्वोत्तम दान हो। भगवान् गरीबहरू र परम पवित्र ब्राह्मणहरूका मुखद्वारा भोजन गर्नुहुन्छ। सबैलाई यथाशक्ति भोजन गराऊ।

अब आउँछ गोवर्धनलीला। गोवर्धनलीलापछि आउने छ रासलीला।

गोको अर्थ हो ज्ञान र भक्ति। ज्ञान र भक्तिलाई बढ़ाउने लीलालाई गोवर्धन लीला भन्छन्। ज्ञान र भक्ति बढ्नाले देहाध्यास नष्ट हुन्छ र जीवलाई रासलीलामा पस्न पाइन्छ।

ज्ञान र भक्तिलाई बढ़ाउनका निमित्त के गर्नुपर्ने हो ? घर छोड्नुपर्छ। गोप-गोपिनीहरूले घर छोड़ेर गिरिराजमाथि गएर बसे। हाम्रो घर भोगभूमि हुनाको कारण राग-द्वेष, अहंभाव-तिरस्कार, वासना आदिले हामीलाई जेलेको छ। घरमा विषमता हुन्छ र पाप पनि। भोगभूमिमा भक्ति कसरी बढ्न सक्ला ? सात्त्विक भूमिमा मात्र भक्ति बढ्न सक्छ।

साधारण गृहस्थको घर विविध वासनाहरूका सूक्ष्म परमाणुले भरिएको हुन्छ। यस्तो वातावरणमा भक्तिका निमित्त बाधक हुन्छ। यस्ता वातावरणमा सारा वर्ष बसेर न भक्ति बढ़ाउन सकिन्छ र न ज्ञान। त्यसकारण एकाध महिना कुनै शान्त पवित्र थलोमा गएर, कुनै पवित्र नदीको किनारामा वास गरेर भक्ति र ज्ञानको आराधना गर्नु श्रेयस्कर हुन्छ।

त्यसो हुन नसकेका खण्डमा घरैलाई तीर्थ बनाऊ। प्रवृत्ति छोड्न सकिन्न तापनि त्यसलाई थोरबहुत घटाएर निवृत्तिलाई बढ़ाऊ, प्रभुले जेपनि दिएको होस् त्यसबाट सन्तुष्ट होऊ। प्रवृत्तिको अतिशयता हुनु हुँदैन। प्रवृत्तिमा निवृत्तिको आनन्द तर हुनैपर्छ। निवृत्तिको आनन्दले जीवलाई प्रवृत्तिको चिन्तनतर्फ हटाएर लैजान्छ तापनि निश्चय गर निवृत्तिको आनन्द नपाइएमा पनि प्रवृत्तिको विषयानन्दलाई भोग्नु छैन। निवृत्तिका समयमा भजनानन्दको लाभ उठाउनु छ भने लौकिक सुखको विषयानन्द छोड्नैपर्छ।

फोहरभित्रबाट अत्तरको सुगन्ध कसरी पाइएला ? प्रवृत्तिमा शान्ति र सात्त्विक आनन्द कहाँ पाउनु ? प्रवृत्तिमयता नछोड़ीकन भक्तिको उदय कसरी होला ?

गोको अर्थ इन्द्रिय पनि हो। इन्द्रियहरूको संवर्द्धन त्यागबाट हुन्छ, भोगबाट हुँदैन। भोगबाट इन्द्रियहरू क्षीण हुन्छन्। भोगमार्गबाट हटाएर उनलाई भक्तिमार्गपट्टि लानु छ। अँ त्यसवेला इन्द्रियादि देवले वासनाको वर्षा गरिदिन्छन्। मनुष्यको भक्तिलाई तिनले देखिसहँदैनन्। प्रवृत्तिमार्गलाई छोड़ेर निवृत्तिका तर्फ बढ्न खोज्दा विषयवासनाको वर्षाले बाधा पुऱ्याउन आउँछ। त्यसकारण निवृत्त लिए पनि निवृत्तिको सात्त्विक आनन्द दुर्लभजस्तो हुन जान्छ। इन्द्रियहरूका देव इन्द्रले प्रभुभजन गर्नथालेको जीवलाई सताउँछन्। उपनिषद्मा पनि भनेको छ निवृत्ति लिएर प्रभुभक्ति गरिरहने जीवलाई इन्द्रले सताइरहन्छन्। उनी सोच्दछन् 'मेरो शिरमा गोड़ा टेकेर, मलाई कुल्चिएर यो जीव अगाड़ि बढ्ने छ।' त्यसकारण ध्यान, सत्कर्म, भक्ति आदिमा जीवको अपेक्षा देव ज्यादा बाधक हुन्छन्। जीवले सदा ध्यान गरेका खण्डमा स्वर्गका देवहरूभन्दा पनि श्रेष्ठ हुन जान्छन्। त्यसकारण जहिले पनि इन्द्र-इन्द्रियहरूका अधिपति भक्तिमार्गमा विघ्न पार्न आए भने गोवर्धननाथको आश्रय लिनु।

गोवर्धनलीलाको बड़ो आनन्द छ। गोवर्धनलीला रासलीलाको उपोद्‌घात हो। यसमा पूज्य र पूजक एक भइहाल्छन्। पूज्य र पूजक जबसम्म एक हुन पाउँदैनन् तबसम्म आनन्द आउँदैन। पूजा गर्ने श्रीकृष्णले गिरिराजमाथि चढ़े। यो तर अद्वैतको प्रथम खुड्‌किलो हो, रासलीलाको फल हो।

गोवर्धनलीलाले ज्ञान र भक्तिलाई बढ़ाउँछ। तिनको बढ्नाले रास-लीलामा पस्न पाइन्छ, तर त्यस अवस्थामा इन्द्रिय-वासनाको वर्षाले जोगिनु बहुतै जरूरी छ।

पूज्य र पूजक, सेव्य र सेवक एक भइहाल्छन्, तब सेवा राम्ररी हुन जान्छ। परमात्माको समान पवित्र नबनीकन प्रभु-पूजाको अधिकार पाईंदैन, शास्त्रहरूमा अङ्गन्यास, करन्यास आदि विधिहरू उल्लेख भएका छन्। तिहारमा गोवर्धनपूजा गरिन्छ किनभने बितेका सबै दुःखहरूलाई बिर्सिएर शत्रुतालाई मेटाउनु छ। विरोध जबसम्म जाँदैन, पूजा हुन पाउँदैन।

गोवर्धन-पूजाका समयमा कृष्ण सात वर्षका हुनुहुन्थ्यो।

पूज्य र पूजक जब एक हुन्छन्, तब रासफल पाइन्छ। यसैकारणले रासलीला गोवर्धनलीलाका पछि आउँछ।

प्रत्येक वर्ष नन्दबाबा इन्द्रयाग गर्थे। यज्ञको तयारी हुन लागेको देखेर कृष्ण सोध्नुहुन्छ—'बाबा, यी सबै किन भइरहेछ।'

कुनचाहिँ देवताका निमित्त, के उद्देश्यले यो यज्ञ गरिन थालिएको छ ?

नन्दबाबाले संझाउन थाले—'वर्षाका देव हुन् इन्द्र। इन्द्रले वर्षा गराउँछन्, धान्य र घाँस उम्रन्छ र सबै जीव आनन्दले बाँच्न सक्छन्। इन्द्र हाम्रा ईश्वर हुन्। उनलाई प्रसन्न गर्नका निमित्त हामी यज्ञ गरिरहेछौं।'

कृष्ण कुनै पनि देवको न अपमान गर्नुहुन्छ र न उपेक्षा।

कृष्णले भन्नुभयो—'इन्द्रको यज्ञ गर्नु ठीक हो, तर उनलाई ईश्वर किन मान्ने? कुनै पनि व्यक्तिले सो यज्ञ गरेर इन्द्रपद पाउन सक्छ। इन्द्रको इन्द्रलाई चिन्नु हुन्छ?'

नन्दबाबा—'बाबु, को हो त्यो?'

कृष्ण—'यी मेरा गोवर्धननाथ इन्द्रका इन्द्र हुन्। उनी चारै दिशाका देव हुन्। पूर्वमा जगन्नाथजी, दक्षिणमा रामेश्वर, पश्चिममा द्वारिकानाथ र उत्तरमा बद्रीनाथ छन्। यी चारोटैको मध्यमा छन् गोवर्धननाथ। उनी सबैका स्वामी हुन्, त्यसकारण बीचमा बसेका छन्। बाबा, उनैको पूजा गर्नुहोस्। कति वर्षदेखि तपाईंले इन्द्रको पूजा गर्दै आउनुभएको हो, तर कहिल्यै उसको दर्शन पनि पाउनुभएको छ के?'

बन्दबाबा—'अँहँ।'

कृष्ण—'यति वर्षहरूका पूजा भएपछि पनि उनी दर्शन दिँदैनन्। यसको अर्थ यो लाग्यो उनी अभिमानी छन्। जुन देवलाई कहिल्यै देखेको पनि छैन, उसको पूजा किन गर्नुहुन्छ? यी गोवर्धन हाम्रा प्रत्यक्ष देव हुन्। जुन पर्वत देखापरेको छ, त्यो उनको आधिभौतिक स्वरूप हो। उनको आधिदैविक स्वरूप अर्कै छ, सूक्ष्म छ। गोवर्धननाथ यस पर्वतमा सूक्ष्म रूपले बस्नुहुन्छ। उनी हामी सबैका रक्षक हुन्। मलाई कैयौं पटक उनको दर्शन भएको छ। गोवर्धननाथ दीपकको जीवन्त-ज्योति हुन्।' तपाईंहरू सबै उनकै पूजा गर्नुहोस्। तपाईंहरूलाई उनको दर्शन मिल्ने छ।

इन्द्रको अभिमानलाई मेटाइदिने श्रीकृष्णले निश्चय गर्नुभो। त्यसकारण सबैलाई संझाइरहनुभएको छ इन्द्रदेवको साटो गोवर्धननाथको पूजा गरियोस्।

नन्दबाबा—'गोवर्धनको पूजा-विधि हामी जान्दै-जान्दैनौं, त्यसकारण सो पूजा गर्ने कसरी?'

कृष्ण—'बाबा, म जान्दछु। तपाईं केही चिन्ता नगर्नुहोस्। गोवर्धननाथको पूजाको तयारी गर्नुहोस्। गरीबहरूका निमित्त अन्नको पर्वत बनाउनु छ। गरीबहरू, गाईहरू र सदाचारी ब्राह्मणहरूको पूजा ईश्वरको पूजा हो।'

सबैका घरबाट खाने-पिउने समान मगाइए। गाईहरूको जुलूस निकालियो। जसका घरबाट खाद्य सामग्री आउँदैन उसका घर अन्नपूर्णा जान्नन्।

नन्दबाबा—तिम्रा भगवान्ले भोजन गरिरहेको म देख्न पाउँछु के?

कृष्ण—'हामी सबै देख्न सक्नेछौं।'

ब्रजवासीहरूलाई बहुतै आनन्द लाग्यो। कृष्णले गोवर्धन पूजाका निमित्त तिहारको दिन निश्चित गरेको थियो। सबैले गाड़ीहरूमा खाद्यसामग्री भरी-भरीकन गोवर्धनका नजिक लिएर आए। सबै ब्राह्मणहरूलाई निम्ता दिएको थियो। ब्राह्मण वेदमन्त्रोच्चारण गर्न थाले र कृष्णले

अभिषेक। आज भगवान् कृष्ण पूजा गरिरहनुभएको छ। गोपबालकहरूद्वारा यमुनाको जल मगाइयो।

तर बालकहरू पानी ल्याउँदा-ल्याउँदा थाकेर भन्न थाले—'कृष्ण, यमुनाजी धेरै टाढ़ा छन् र तिम्रा देव छन् ठूला, लामा र चाक्ला। अभिषेकका निमित्त यति धेरै जल हामीले कसरी ल्याउन सक्ने ?'

कृष्ण—ए साथी हो ! मेरा यी गोवर्धननाथ बहुतै दयालु छन्। तिमीहरू पीर नगर।

अब कृष्ण प्रार्थना गर्न थाल्नुभो—'हे गोवर्धननाथ, मेरा मित्रहरू थाके। गङ्गा-यमुना तपाईंका चरणमै छन्। कृपा गरेर कुनैलाई प्रकट गरिदिनुहोस्।'

उसै समयमा गोवर्धनबाट गङ्गाजी प्रकट भइन्। यिनलाई मानसी गङ्गा भन्दछन्।

सबै बालक आनन्दले उफ्रिन थाले र भन्न लागे—'नदी आइन्, नदी आइन्।' कृष्णले संझाउनुभो—'यी कोही सामान्य नदी होइनन्, गङ्गाजी हुन्। गोवर्धनको अभिषेक पूर्ण भएपछि शृङ्गार गरियो। व्रजवासी भन्न लागे, 'अभिषेक दर्शनमा हामीलाई बड़ो आनन्द आयो। यी ठाकुर हामीलाई देखेर हाँस्छन्।'

व्रजवासीले चन्दन ल्याउँदा कृष्ण भन्नुहुन्छ 'ठण्डीको वेला छ, त्यसकारण चन्दनले मेरा भगवान्लाई कष्ट हुन्छ। बालकहरूले कुमकुमको तिलक लगाइदिने सोचे।'

कृष्ण—'कुमकुमको तिलक लगाइदिन सक्छौ तर त्यो कहीं नाकभित्र नजाओस्। जसले छिऊँ आओस्।'

सेवा-पूजा गर्दा मूर्तिलाई चेतन मान, जड़ होइन। मूर्ति साक्षात् भगवान् हुनुहुन्छ भन्ठान। आफ्ना देहका प्रति जो प्रेम गर्दछौ त्यस्तै प्रेम भगवान्प्रति पनि गर।

प्रभु पनि बड़ो आनन्दप्रिय हुनुहुन्छ। कृष्णले आफ्नो एक स्वरूप नन्दबाबाकहाँ छोड़ेर अर्कोले गिरिराजमा प्रवेश गर्नुभो।

सबै भन्न लागे—'कृष्ण, यो पर्वतले सास फेर्न लागिरहेछ।'

भगवान्का तीन स्वरूप हुन्छन्—आध्यात्मिक, आधिदैविक, आधिभौतिक।

कृष्णले दहीको टीका लगाइदिनुभो। दही नाक-मुखमा पसे पनि केही हर्जा छैन।

कृष्ण—अब हामी भगवान्लाई चामलद्वारा अभिवादन गरौं।

कृष्ण—'होइन, होइन, चामलले भगवान्लाई चोट लाग्ला। त्यसकारण मोतीले पूजा गर। यदि प्रेमपूर्वक मोतीले अभिवादन गर्‍यौ भने तिम्रो घर मोती-मोतीले भरिनेछ।'

भगवान्को एक स्वरूप चतुर्भुज पनि हो। त्यो आधिभौतिक स्वरूप हो।

कृष्ण आज आफैंलाई प्रणाम गर्दै हुनुहुन्छ।

'बाबा, यिनै हुन् साक्षात् परमात्मा।'

सबै सोध्न लागे, 'कृष्ण, अब हामीले के गर्नु छ ?' तब कृष्णले भन्नुभो—'मेरा प्रभुलाई भोक लागेको छ, भोग लगाऊँ।'

भगवान्लाई भोग नलगाईकन कहिल्यै नखानु। त्यसो तर भोग नलगाएका खण्डमा पनि उनी भोकै पर्दैनन् तर कहिले तिमीलाई भोकै रहनु पर्ला, यस जन्ममा होस् अथवा कुनै पनि जन्ममा।

ब्रजवासी—'के गोवर्धननाथजी पनि भोकै बस्नुहुन्छ ? के उहाँले साँच्चिनै खानुहोला ?'

कृष्ण—'अँ,मेरा नाथ दीयोको ज्योति जस्तै जीवन्त हुनुहुन्छ, प्रत्यक्ष हुनुहुन्छ, उहाँ हाम्रा सामुन्नेमा खानुहुन्छ।'

सबै खाद्य-सामग्री प्रकोष्ठको आकारमा राखियो। उसमाथि तुलसीदल पनि अर्पण गरियो।

हे गोवर्धननाथजी, तपाईंलाई कसले खुवाउन सक्छ ? तपाईं समग्र जगत्को जन्मदाता हुनुहुन्छ। हाम्रो तर भावना छ, प्रार्थना छ जो तपाईंले भोजन गरेको हेर्न पाऊँ।

गोवर्धननाथले थाल उठाएर खान थाल्नुभयो। गोपबालक आनन्दसाथ नाच्न थाले—'कृष्णभगवान् साँच्चिकै खाइरहनुभएको छ।'

सबैले भने—'कृष्णाका भगवान् साँच्चिकै दीयोको ज्योतिका समान जीवन्त र प्रत्यक्ष हुनुहुँदो रहेछ।'

गोवर्धननाथले भोजनको क्रम यथावत् राख्दा गोपबालक चिन्तित भई भन्न थाले, 'कृष्ण, यिनले सबै कुरा खाइसिध्याउलान् जस्तो लाग्छ। धेरै कालदेखि भोकै रहेका जस्ता लाग्छन्। हामीहरू निमित्त पनि केही बाँकी राख्लान् वा नराख्लान् ? तिमी कहिल्यै पनि एक्लै खाँदैनौ, यी एक्लै खाइरहेका छन्। प्रसाद पनि नपाइने हो क्या ?'

कृष्ण—'मेरा भगवान्ले जति खान्छन् उति हामीलाई पनि दिन्छ। हेर ! गोवर्धननाथका पास लक्ष्मीजी आइपुगिन्। उनले जसको घरको भोजन गर्छिन् उसका घर महालक्ष्मीजीको कृपा हुन्छ।'

गोवर्धननाथको पूजा र आरतीपछि सबै ब्रजवासी भोजन गर्न बसे। खाना कृष्णले पस्किरहेछन् र सबैलाई आग्रह गरीगरीकन ख्वाइरहेका छन्।

गोपबालक भन्दछन्—'आज यस्तो उत्तम भोजन छ एउटाको साटो तीन-चार पेट अझ भइदिए मजा आउने थियो।'

कृष्ण—'जति मन लाग्छ खाओ, तर खेर नफाल। अन्न ब्रह्म हो। उच्छिष्ट खायौ भने त्यसले तिम्रो पुण्य पनि खाइदिनेछ। प्रसादको अपमान गर्‍यौ भने गोवर्धननाथ क्रोधित हुनुहुनेछ।'

अन्नलाई कहिल्यै पनि अनादर नगर। माग्नेहरूलाई पनि जूठो अन्न दिनु हुन्न। माग्ने भएर के भयो ? त्यो पनि ईश्वरकै अंश हो।

सबैलाई प्रसाद दिइयो। सबैले रात्रिका समयमा फेदीमा विश्राम गरे।

यता नारदजी इन्द्रकहाँ आए—'नारायण, नारायण ! त्यस गोपालको ठिटोले तपाईंको अपमान गरिदिएको छ। उसले तपाईंको पूजा गराउनुको साटो गोवर्धननाथको पूजा गरायो।'

इन्द्रले साह्रै रिसाएर बाह्रवटै मेघहरूलाई आज्ञा दिए—'त्यस गोपालको ठिटाले मेरो अपमान गरेको छ, ब्रजमाथि जाइलाग र सबैको नाश गर।'

मेघहरूले ब्रजमा गएर हाहाकार मच्चाइदिए। कार्तिक महिनामा यस्तो भारी वर्षा कहिल्यै हुँदैनथ्यो। सबै डराए। नारदजी पनि व्याकुल भए।

कृष्णले भन्नुभयो—'मेरा प्रभु गोवर्धननाथले सबैको रक्षा गर्नुहुनेछ। उहाँमा विश्वास राख। उहाँले मलाई स्वप्नमा भन्नुभएको छ—म तिम्रो पूजाबाट प्रसन्न भएँ। सात दिनसम्म वर्षा भइ रहने छ। त्यसकारण उहाँको शरणमा गएपछि उहाँले हाम्रो रक्षा गर्नुहुनेछ।'

म भाररहित भएर तिम्रो औंलामा उभिएर सबैको रक्षा गर्नेछु। यस्तो पनि उहाँले भन्नुभएको छ।

'कृष्ण, यस्तो कुरा हो ? त्यसो भए छिटै गोवर्धनलाई उठाऊ।'

कृष्ण—'म एक्लैले कसरी उठाउन सकूँला ? तिमीहरूले पनि मेरो मद्दत गर्नू।'

गोवर्धननाथ फूलसमान हलुका भइदिएर कृष्णको कान्छी औंलामाथि उभिए।

श्रीगिरिधारीको जय ! परम आश्चर्य भयो। ब्रजवासीहरू दर्शनबाट तृप्त हुन पाइरहेका छैनन्।

सात दिनसम्म मुसलधार पानी बर्सिइरह्यो। गोपालहरूले सोचे—'कृष्ण एक्लै थाक्ने छन्।' तिनीहरूले आफ्नो लट्ठीको आधार दिए। 'कृष्ण ! हामीले आफ्नो लट्ठीमाथि गोवर्धनलाई उठाएका छौं। तिमी थाक्यौ होला, आफ्नो औंलालाई झिक।'

कृष्ण—'तिमीहरूको लट्ठीमा अड़िएको छ ? हुन्छ लौ म औंला झिकिदिन्छु।'

जसै कृष्णले औंला झिकिदिनुभएको थियो पर्वतको भार असह्य हुन गयो। गोपाल चिच्याए—'ए कृष्ण, यो तलतिर धसिँदै छ। चाँड़ै टेवा देऊ।'

आधार टेवा लिनुपरे केवल ईश्वरको लेऊ, अरू कसैको होइन।

जसलाई जे चाहिन्छ, गोवर्धननाथ उसलाई त्यही दिनुहुन्छ।

कृष्णले अलौकिक शक्तिको दर्शन गराइरहनुभएको छ। उहाले बंशी बजाउन थालेपछि गोवर्धननाथ झुम्न लागे। सबैलाई अतिशय आनन्द भयो।

गिरिधारीको स्वरूप यति दिव्य थियो ब्रजवासीहरूले सात दिनसम्म देहधर्म बिर्सिदिए, भोक-प्यासको पनि वास्ता गरेनन्।

यसप्रकार सात दिनसम्म भगवान् श्रीकृष्णले गोवर्धन पर्वतका मुनि सबै ब्रजवासीहरू र गाई आदिको रक्षा गरे।

अब इन्द्रलाई कृष्णको वास्तविक स्वरूपको भान भयो। यी हुन् साक्षात् परमात्मा। उनको अभिमान चूर भयो। उनी प्रार्थना गर्न लागे—'मेरो भूल भयो। नाथ, मलाई क्षमा गर्नुहोस्।' उनले मेघहरूलाई पनि थामिने आज्ञा दिए।

सबै ब्रजवासी बाहिर आएर ब्रजतर्फ गए। इन्द्रले श्रीकृष्णलाई दूधले अभिषेक गरे। त्यस दूधलाई जहाँ बटुलेको थियो त्यसलाई 'सुरभि कुण्ड' भन्दछन्।

केही मानिसहरूलाई आशङ्का भयो यो कृष्ण भरसक ईश्वर हो। एउटा सभा जस्तो भयो र यस कुराको चर्चा पनि चल्यो। कहाँ यो सात वर्षको बालक र कहाँ त्यो महान् अजडको पर्वत ? यो नन्दजीकै छोरा हो वा कसैको उठाएर ल्याएको हो ? हामीले नन्दजीलाई बोलाएर उनैसँग सोधौं।

नन्दबाबा आए र सोधियो—'यो केटो कसको हो ?'

नन्दबाबा—'यो मेरै छोरो हो। गर्गाचार्यले भनेका थिए कृष्णमा नारायणजस्तो गुण छ।'

यशोदाले यो चर्चा सुनिन् तब कृष्णलाई सोधिन्—'तँ कसको होस् रे ?'

कृष्ण—'तपाईंकै हुँ म।'

यशोदा—'मानिसहरूको भनाइ छ पिताजी र म गोरा छौं फेरि तँ किन कालो छस् ?'

कृष्ण—'आमा, जन्मको समयमा म गोरो थिएँ तर तपाईंको भूलको कारणले म कालो भएँ। मेरो जन्म जब भएको थियो त्यसवेला घनघोर अँध्यारो थियो र सबै निद्रामा डुबेका थिए। मचाहिँ अँध्यारोमा सारा रात कोल्टे फेर्दै रहें, अँध्यारो ममा टाँसिन गयो र म कालो भएँ।'

सोझी यशोदाले कृष्णको कुरा साँच्चिकै पत्याइन्। बाह्र बजेसम्म ब्यूँझेकी थिएँ र त्यसपछि थाहा पाउँदिनँ के भएको थियो। मेरै भूलले कृष्ण कालो भयो।

एकनाथ महाराज अर्कै कारण दिनुहुन्छ—'मनुष्यको कलेजो कालो छ किनभने त्यसमा कालो काम छ। श्रीकृष्ण कीर्तन, ध्यान, धारणा, स्मरणचिन्तन गर्नेको कालिमालाई कृष्णले चुसिदिनुहुन्छ। वैष्णवहरूका हृदयलाई उज्यालो पार्दा-पार्दा कृष्ण कालो हुनुभयो।'

विषयहरूका बारेमा जो विचार गरिरहन्छ, उसको अन्तर कालो हुन जान्छ। कृष्ण त्यसलाई उज्यालो पार्नमा लाग्नुभएको छ।

गोपिनीहरूको भनाई छ—'हामी गाजल लाउँछौं, उता कृष्ण हाम्रा आँखाका सामुन्ने भइरहन्छन्। त्यसैले सो गाजलले गर्दा काला भएका हुन्।'

महाभारतको उद्योग पर्वमा एउटा प्रसङ्ग छ। विष्टिका निमित्त आएका कृष्णसँग दुर्योधनले सोध्यो—तिम्रा आमा-बाबु को हुन्? यो अहिलेसम्म टुङ्गो लाग्नसकेको छैन। नन्द-यशोदा तिम्रा आमा बाबु हुन् भने तिमी किन काला छौ?

श्रीकृष्ण—'म कौरवहरूको कालभएर आएको छु, त्यसैले कालो छु।'

तर दुर्योधनसँग यस किसिमबाट कुरा गर्ने कृष्णले राधालाई अर्कै किसिमबाट भन्नुभएको छ। लीला-निकुञ्जमा दुवै बसिरहनुभएको थियो। राधाले प्रेमपूर्वक सोधिन्—'नाथ, हुन चैं तपाईं सुन्दर हुनुहुन्छ तर श्याम किन हुनुहुन्छ?'

श्रीकृष्ण—'यसो तर म गोरै थिएँ तर तिम्रो शोभालाई बढ़ाउनका निमित्त श्याम भएको हुँ। तिम्रो शोभा बढ्योभने मानिसले तिम्रो प्रशंसा गर्नेछन्। यदि हामी दुवै गोरा भएका भए तिम्रो प्रशंसा कसले गर्ने थियो?'

इन्द्रादिदेव श्रीकृष्णको पूजा गर्न आए। 'तपाईंको वास्तविक स्वरूपलाई हामीले थाहा पाउन सकेनौं, चिन्न सकेनौं। हामीलाई क्षमा गर्नुहोस्।' कामधेनुले कृष्णको अभिषेक गरिन्।

गोवर्धनलीला रहस्यमय छ। यस लीलापछि रासलीला आउँछ। गोवर्धनलीलाले ज्ञान र भक्ति बढ़ाउँछ। जब ईश्वरका व्यापक स्वरूपको अनुभव पाइन्छ अनि मात्र ज्ञान र भक्ति बढ्दछ।

गोवर्धन लीलामा पशु-पक्षीसहित सबैलाई प्रसाद बाँड़ियो।

ईश्वर जगत्मा व्याप्त हुनुहुन्छ र सारा जगत् ईश्वरमा समाहित छ।

## शिवः केवलोऽहम्।

यो वेदान्तको चरम सीमा हो, तर शुरुमा 'सबैमा ईश्वर हुनुहुन्छ' भन्ने भावना राख्नुपर्छ।

उपासनाका दुइ भेद छन्—व्यक्त र अव्यक्त।

प्रत्येकमा ईश्वरलाई देख्यो भने वासना जाग्दैन। सुन्दरीलाई मातृ-दृष्टिबाट हेर्नाले कामना कसरी जाग्न सक्छ? यस्तै किसिमबाट सबैका प्रति ईश्वरभाव धारण गर।

जड़-चेतन सबैमा कृष्णको अंश छ, यस्तो अनुभव गराउनका निमित्त पनि यो गोवर्धन-लीला रचिएको थियो।

इन्द्रियहरू जब ज्ञान र भक्तितर्फ बढ्न थाल्दछन्, वासना बाधक भएर उभिन आउँछ। दूध उम्लन थाल्यो भने त्यसमा पानीको छिटा पारिदिनाले शान्त हुन जान्छ। वासनाको वेगलाई हटाउनका निमित्त श्रीकृष्णको आश्रय लेऊ। भगवान्को शरण पर्नाले कामवासनाको भार सहने शक्ति पाइन्छ।

भगवान्‌ले हातको सबैभन्दा सानो औंलामा गोवर्धन पर्वत धारण गर्नुभएको थियो। यो औंला सत्त्वगुणको प्रतीक हो। इन्द्रियहरूको वासनारूपी वर्षा हुन थालेका वेलामा सत्त्वगुणको शरण पर, सद्ग्रन्थको सेवन गर। सद्ग्रन्थ र सन्तहरूको सत्सङ्गले वासनासँग भिड्ने शक्ति दिनेछ।

जीवले लट्ठीको आधार लिन्छ, तर प्रभुको आधारले जीवन सफल तुल्याउँछ। संसार गोवर्धनप्रभुको सहारामा छ। भगवान्‌को आधार हुनाको कारणले आनन्दै आनन्द छ। उहाँको सहारा नभएमा क्षणमात्रमा लाखौं खरानी हुन्छन्।

दुःखमा, विपत्तिमा प्रभुको मात्र आश्रय लेऊ, सहारा लेऊ। गोपालहरूले पनि गोवर्धननाथकै भरोसा गरेका थिए। शरणमा परेपछि प्रभुले दुःखबाट बचाएर रक्षा गर्नुहुन्छ। सबै ब्रजभक्त अन्य देवहरूको भर नपरेर श्रीकृष्णका शरणमा गए। उनका सारा सुख-दुःख भगवान्‌ले बेहोर्नुभयो। गिरिराजधारणको लीलामा यही भाव छ।

गीतामा पनि भगवान्‌ले भन्नुभएको छ—'हे अर्जुन, जो अनन्य प्रेम-साथ मेरो भक्ति गर्दछ, ती सबै जीवहरूको सांसारिक र भौतिक दुःखहरूबाट मुक्त गर्ने अभिभारा मैले लिएको छु। इनका योगक्षेमको वहन म गर्दछु।'

ज्ञान र भक्ति बढ़ेपछि रासलीलामा प्रवेश पाइन्छ। त्यस समयमा इन्द्रियहरू वासनाको वर्षा गर्न आइहाल्नेछन्।

सबै प्रयत्नहरूका अन्तमा ईश्वरको कृपा माग्नैपर्छ। गोवर्धनलीलामा अद्‌भुत तत्त्व छ। त्यसमा पूज्य र पूजक एक बन्दछन्, सेव्य र सेवक एक हुन्छन्।

भनेको पनि छ—*'शिवो भूत्वा शिवं यजेत्।'* शिव बनेर शिवको पूजा गर।

ईश्वर जस्तो हुनुको, ईश्वरका साथ एक हुनाको अर्थ हो आफ्नो इच्छालाई उहाँका इच्छामा मिलाइदिनु। जब जीवले आफ्नो इच्छालाई भगवान्‌को इच्छामा मिलाइदिन्छ तब ऊ भक्तिमार्गमा अगाड़ि बढ्दछ। सतत् ब्रह्मसम्बन्ध बनाइराख्यौ भने तिमी ब्रह्मरूप हुन सक्नेछौ।

गोवर्धनलीलामा पूजा गर्ने पनि कृष्ण हुनुहुन्छ र जसको पूजा भइरहेछ, त्यस गोवर्धनमा पनि उहाँ हुनुहुन्छ।

गोवर्धनलीलामा सेवक-सेव्य, भक्त-भगवान्‌को तद्रूपता देखाइएको छ। कृष्ण गोवर्धनको अर्थात् स्वयंको पूजा गरिरहनुभएको छ। जीव र ईश्वर यहाँ एक भएका छन्।

यही 'सः अहम् सोऽहम्' भाव हो।

हामी पनि गिरिराजधारीलाई वन्दना गरेर स्तुति गरौं—

**भक्ताभिलाषी चरितानुसारी दुग्धादि चौर्येण यशोविसारी।**
**कुमारतानन्दित घोषनारी मम प्रभुः श्री गिरिराजधारी॥**

भक्त इच्छानुसारी, बाललीलामा दूध आदि चोरेर यश फैलाउने, व्रजवनितारञ्जक यस्ता गिरिराजधारी श्रीकृष्ण मेरा प्रभु हुनुहुन्छ।

### वृन्दावने गोधनवृन्दचारी, मम प्रभुः श्री गिरिराजधारी।

गोवर्धन लीलाबाट गोपिनीहरूलाई विश्वास भयो कृष्ण साँच्चै ईश्वर हुनुहुन्छ। तब उहासँग एकाकार हुने भावना जाग्यो र रासलीला भयो।

भक्तिरसमा इन्द्रियहरूलाई चुर्लुम्म डुबायौ भने रासलीलामा प्रवेश पाइन्छ।

श्रीकृष्णको देवाधिदेवत्व सिद्ध गर्नका निमित्त ब्रह्मा, इन्द्र, वरुण आदिलाई होच्याउने काम भयो। ब्रह्माजीलाई म सृष्टिकर्ता हुँ भन्ने अभिमान थियो। भगवान्‌ले अनेक रूप धारण गरेर आफ्नो स्वरूपद्वारा स्वयं क्रीड़ालीला गरेर ब्रह्माजीको अभिमानलाई चूर गरिदिनुभयो। इन्द्रको स्वर्गको राजा हुने अभिमान गोवर्धन लीलाबाट दूर गरिदिनुभयो। इन्द्रले मानिलिए उनलाई स्वर्गको सिंहासनमा कृष्णले मात्र बसाएको रहेछ।

श्रीकृष्ण अवतार होइन, अवतारीपूर्ण पुरुषोत्तम हुनुहुन्छ। अट्ठाईसौं अध्यायमा वरुण देवको हारको कथापछि रासपञ्चाध्यायी आरम्भ हुन्छ। रासलीलाभन्दा अघिबाट आएको यस कथाको महिमा विशिष्ट छ।

यी ब्रजवासी गौसेवा, एकादशी व्रत, कृष्णाकीर्तन गर्दथे त्यसकारण श्रीकृष्ण मथुराबाट गोकुल आउनुभो। ब्रजवासी सोझा थिए, धेरै-पढ़ेलेखेका पनि थिएनन्। तिनीहरूलाई योगविद्या पनि थाहा थिएन। तैपनि उनको सोझोपनले गर्दा उनलाई भगवान् भेटिनुभयो। ब्रजवासी एकादशीव्रत विधिपूर्वक गर्थे अर्थात् उनीहरूले कृष्णको साँचो सेवा गरेर आनन्दपूर्वक थिए।

शास्त्रमा एकादशी व्रत विधिपूर्वक गर्नू भनेको छ। त्यस दिन सारा दिन प्रभुसेवामा बिताऊ र सारा रात जाग्राम गरेर कृष्णकीर्तन गरिरहू। कमसे कम रातीको बाह्रबजेसम्म कीर्तन अवश्य गर्नू। परमात्माको चरणमा हुनु एकादशी हो। परमात्माको चरणमा शरीरले होइन मनले बस्नु छ। एकादशीका दिन मन श्रीकृष्णका सिवाय अन्य कुनै विषयमा जानुहुन्न।

ब्रजवासी एकादशीका दिन रात्रिमा जाग्राम गर्थे। नन्दजी मध्यरात्रिका समय यमुना-स्नान गर्न गए।

रातिको एघारबजेदेखि साढ़े तीन बजेसम्मको समय भोजन, स्नान आदिका निमित्त निषिद्ध मानिएको छ। आजकल मानिस खाना बनाएर नाटक हेर्न जान्छन् र रातको बाह्र बजे खान बस्छन्। यो पुनर्जन्ममा राक्षसयोनिमा जाने तयारी गरेको भने हुन्छ। रातिको एघार बजे राक्षस तीर्थहरूमा प्रवेश गर्छन्। त्यसकारण स्नानादिको निषेध छ।

नन्दजी विचार गरे मध्य रात्रि पूरा भइहाल्यो, प्रातःकाल भयो। त्यसकारण उनले स्नान गर्नका निमित्त जलमा गोता लगाए। आसुरी समयमा स्नान गरिरहेको देखेर वरुणदेवका सेवकले नन्दजीलाई समातेर वरुणलोकमा पुर्‍याए। त्यहाँबाट उनलाई श्रीकृष्णले छुटाएर ल्याए।

अब यस कथाको रहस्य पनि हेरौं। रासलीलाभन्दा पहिले आएको छ यो वरुणदेव-पराजयको कथा। वरुणदेव जिभ्रोका स्वामी हुन् र उनका सेवक, दूत हुन् षड्रस। जबसम्म जिभ्रोमाथि नियन्त्रण हुनसक्तैन, तबसम्म रासलीलामा प्रवेश पाईंदैन। विषयीलाई रासरस पाईंदैन।

नन्द हो जीव। जीव जब चित्तनदीमा स्नान गर्न गोता लगाउँछ तब वरुणका सेवक षड्रस उसलाई दु:ख दिन उपस्थित भइहाल्छन्। जबसम्म जीव लौकिक रसको अधीन छ, तबसम्म त्यसले अलौकिक रस पाउन सक्तैन। त्यस्तो जीवले भक्ति-रस, प्रेम-रस पाउन सक्तैन।

आनन्द कुनै वस्तुमा छैन, मनको एकाग्रतामा छ। आनन्द ईश्वरसँग तदाकार हुनुमा छ। षड्रसमाथि विजय पाउनका निमित्त भक्तिरसको साधना गर। भक्ति गर्नु सजिलो छैन। जसलाई भक्ति गर्नु छ उसले मन र जिभ्रोलाई वशमा गर्नुपर्छ। जिब्रोको दासले भक्ति कसरी गर्न सक्ला? महाप्रभुजीले सुबोधिनीमा भनेको छ – भगवान्‌को सेवासँग प्रेम गर र शरीर-भोगका प्रति विराग। जिभ्रोलाई होइन जीवलाई संझाउनु छ। मानिसको धेरै समय यस जिभ्रोको लालन-पालनमा बित्दछ। काल नजिक आइरहेछ, त्यसको पनि विचार गर।

अब चीरहरण र रासलीला आइरहेछ।

गोपिनीहरणका दुइ भेद छन्—नित्यसिद्धा र साधनासिद्धा। साधनासिद्धा गोपीका पनि कैयौं भेद छन्—श्रुतिरूपा, ऋषिरूपा, सङ्कीर्णरूपा, अन्यरूपा, अनन्यरूपा आदि।

श्रुतिहरूले ईश्वरको वर्णन गर्दा-गर्दा थाके, तैपनि उनको अनुभव पाइएन। ईश्वर केवल वाणीको विषय होइन जो वेदाभिमानी देव ब्रह्मसम्बन्ध सिद्ध गरेर, ब्रह्मसाक्षात्कारका निमित्त गोकुलमा प्रकट भए। तिनै हुन् श्रुतिरूपा गोपिनीहरू।

तपस्वी भएर पनि ऋषिहरूको काम भइरह्यो तर ईश्वरको अनुभव भने पाइएन।

दर्शन र अनुभवमा अन्तर छ। दर्शनमा दृश्य र द्रष्टाको भेद छ। अनुभवमा ती दुवै एक हुन्छन्। उसमा पूर्णतः अद्वैत छ। त्यसकारण बुद्धिगत कामको नाश गरेर ब्रह्मसम्बन्ध सिद्ध गरी ब्रह्मात्मक मुक्तिको अनुभव गर्नका निमित्त जो ऋषि भएर आएका थिए, उनलाई ऋषिरूपा भन्दछन्।

सङ्कीर्णमण्डलमा प्रभुको मनोहर रूपलाई देखेर मनमा कामभाव जागृत हुनाले जुन स्वास्नीमानिसहरूले गोपीको रूप लिए, ती कामरूपा हुन्। उदाहण—शूर्पणखा।

विवाहपछि संसार-सुखहरूको उपभोग गर्दै अरुचि हुने र प्रभुका प्रति प्रेमभाव भएपछि जो पुरुषहरू र स्त्रीहरूले गोपिनीको रूप लिए उनलाई अन्यपूर्वा भनिन्छ। तुलसीदासको वैराग्यको कथा बड़ो प्रसिद्ध छ।

वस्तुगत आसक्तिलाई प्रभुगत आसक्तिको रूप दियौं भने वस्तुको आसक्ति छुट्दछ। अनेक वस्तुहरूका प्रति आसक्ति हुनु व्यावहारिक दृष्टिबाट अशक्य छ।

तुलसीदास केवल पत्नीतर्फ आसक्त थिए। संसारका अन्य सबै नारीहरू उनका निमित्त मातासमान थिए। पत्नी रत्नावलीको एउटै चेतावनीले उनको आसक्तिलाई प्रभुभक्तिमा बदलिदियो। कामासक्ति ईश्वराशक्तिमा बदलियो। कतिलाई तर सधैं थप्पड़ परे पनि सुध्रिँदैनन्।

अनन्यपूर्वा—जन्मसिद्ध पूर्णवैरागी। शुकदेव, मीरा आदि।

एक पटक व्रजका कुमारीहरूले यमुना किनारामा नग्नावस्थामा स्नान गरिरहेका थिए। त्यसैवेला उनको वस्त्र उठाएर श्रीकृष्ण कदम्बको रूखमाथि चढ़ेर कुमारीहरूलाई भन्न थाल्नुभो—'जसलाई लुगा लिनु छ, उसले यहाँ आएर लिएर जान सक्छ। नग्नावस्थामा स्नान गरेर तिमीहरूले जलदेवको अपराध गऱ्यौ। त्यसकारण दुवै हात जोड़ेर वन्दना गरी वस्त्र लैजाओ।' ती कुमारीहरूले त्यसै गरे अनि उनको वस्त्र कृष्णले फर्काइदिनुभयो।

यस चीरहरण लीलामा एउटा रहस्य छ। कुमारीहरूको मनमा यस्तो भावना थियो जो उनीहरू नारी हुन्। यस्तो भाव अहङ्कारको द्योतक हो। उनको त्यो अहंभाव हटाउनका निमित्त श्रीकृष्णले त्यस्तो व्यवहार गर्नुभो। यस लीलामा अहङ्कारको पर्दा हटाएर प्रभुलाई सर्वस्व अर्पण गर्नु एकमात्र उद्देश्य थियो।

भगवान् भन्नुहुन्छ—'तिमीहरू मेरो, आफ्नो भन्ने कुरालाई बिर्सिएर मनजिक आओ। संसार शून्य र सांसारिक संस्कार-शून्य भएर, निरावृत्त भएर म छेऊ आओ।'

द्वैतको आवरण हटायौ भने भगवान् पाइनुहुनेछ।

शरीरलाई वस्त्रले लुकाउँछ र आत्मालाई वासनाले। भगवान् तिम्रा नजीकै हुनुहुन्छ तर तिमीले देख्नै सक्तैनौ। वासनाको पर्दा च्यातियो भने भगवान् देखा पर्नुहुनेछ।

आत्मा र परमात्माबीच वासनाको पर्दा छ। त्यसकारण भगवान्को अनुभव गर्न पाईंदैन। आत्माभित्र छ अज्ञान र वासनाको पर्दा। अज्ञान र वासनाको त्यस आवरणलाई चिरेर भगवान्सँग भेट गर्न जानु छ। सिद्ध सद्गुरुको या परमात्माको कृपाले बुद्धिगत बासना हट्दछ। बुद्धिमा बसेको काम, कृष्णमिलनमा बाधक छ।

आज्ञान-वासना-वृत्तिहरूको आवरणको नष्ट हुनु चीरहरण लीला हो र आवरण नाशपछि जीवको आत्माको प्रभुसँग 'मिलन' हुनु रासलीला हो। यसैकारणले रासलीला चीरहरणको पछि आउँछ।

कामवासनाको नष्ट भएपछि ईश्वरका साथ अद्वैत हुन जान्छ।

भगवान् कहिल्यै पनि लौकिक वस्त्रहरूको चोरी गर्नुहुन्न उहाँ तर बुद्धिगत, अज्ञान, कामवासनाको चोरी गर्नुहुन्छ।

कृष्णले गोपिनीहरूलाई नग्नावस्थामा हेर्न खोजेको थियो ? विचार गर। श्रीकृष्ण सर्वव्यापी हुनुहुन्छ, जलमा पनि हुनुहुन्छ। उहाँ गोपिनीहरूका साथ मिल्नु भएको थियो तर गोपिनीहरू

अज्ञान र वासनाबाट ढाकिएकाले श्रीकृष्णको अनुभव गर्न पाउँदैनथे। त्यस बुद्धिगत अज्ञान र वासनारूपी वस्त्रहरूलाई भगवान्ले उठाएर लानुभो, यस्तो प्रभु त्यस वेला गर्नुहुन्छ जब जीव उहाँको हुन जान्छ।

भगवान् भन्नुहुन्छ—

न मयावेशितधियां कामः कामाय कल्पते।
भर्जिताः क्वथिना धानाः वीजाय नेष्यते॥

जसले आफ्नो बुद्धि ममा स्थापित गरेको छ त्यसको भोग सङ्कल्प, सांसारिक विषय-भोगका निमित्त हुँदैन। ती सङ्कल्प मोक्षदायी हुन्छन्। जसरी भुटेको धानको बीज तत्त्व नष्ट हुन्छ र कहिल्यै अंकुरित हुन पाउँदैन। यस प्रकार जसको बुद्धिभित्रबाट कामवासनाको अंकुर नष्ट हुन्छ, त्यहाँ त्यो फेरि अंकुरित हुँदैन।

प्रभुले गोपिनीहरूलाई भन्नुभयो—'हे ब्रजकुमारी हो। मलाई थाहा छ तिमीहरूको कामवासना नष्ट हुनाले तिमीहरूको हृदय शुद्ध भएको छ। तैपनि तिमीहरूले मेरो ध्यान अझै पनि गरिरहनुपर्छ। यसो गर्नाले तिमीहरूको मनमा रहेको सूक्ष्म मल नष्ट हुनेछ र मसँग भेंट हुनेछ। शरदऋतुका रात्रिमा मसँग तिमीहरू रमण गर्न पाउने छौ।'

शरदऋतुको रात्रि निर्मल हुन्छ। तिमी पनि सबै किसिमबाट शुद्ध, निर्मल र उज्ज्वल हुन सक्यौ भने ईश्वरका साथ क्रीड़ा गर्न पाउनेछौ, जब जीव ईश्वरसँग मिल्न सक्ला अनि मात्र रासलीला हुनेछ।

जीव-ईश्वरको मिलनपूर्व पूतना ( वासना )-को नाश गर्नुपऱ्यो।

अविद्या नष्ट भएपछि जीवनको गाड़ी बाटामा आउन थाल्नेछ र शकटासुरको नाश हुन्छ।

जीवन ठीक बाटामा हिँड्न थालेपछि तृणावर्त ( रजोगुण ) नष्ट भयो र सत्त्वगुण बढ्न लाग्यो।

रजोगुणको समाप्ति भएपछि कृष्णले नौनीरूपी मनको चोरी गरेर जीवन सात्त्विक बनाइदिनु भयो।

जीवन-सात्त्विक भएपछि आसक्तिको घैंटो फुट्छ। दहीको घैंटो, संसाररूपी आसक्तिको घैंटो कृष्णले फोरिदिनु भयो।

संसाराशक्ति नष्ट भयो तब प्रभु जीवको पाशमा बाँधिनु भयो। यही हो दामोदरलीला।

प्रभु बाँधिनुभएपछि दम्भ—( बकासुर ) र पाप-ताप ( अघासुर )-को बध भयो।

सांसारिक ताप नष्ट भयो तब दावाग्नि नष्ट भयो, शान्त भयो। त्यसकारण इन्द्रियहरू शुद्ध भए, अन्तःकरणको वासनाको क्षय भयो। यही हो नागदमनलीला र प्रलम्बासुरवधको कथा।

जीव ईश्वरसँग भेट्न सक्ने योग्य भयो अनि मात्र कृष्णको मधुरमुरलीको स्वर सुन्न सक्यो। वेणुगीत गाइयो अर्थात् नादब्रह्मको उपासना भयो।

यसपछि फेरि आयो गोवर्धनलीला। गो-इन्द्रियहरूको संवर्धन भयो, पुष्टि भयो र भक्तिरस उत्पन्न भयो। इन्द्रियहरूको पुष्टि भएपछि षड्रस र वरुणदेवको हार भयो।

षड्रसको हार भएपछि जीव शुद्ध हुन गयो। त्यसपछि चीरहरण लीला आयो। अज्ञान र वासनाको आवरणलाई भगवान्ले उघारिदिनुभयो।

चीरहरण लीला—वाह्यावरण, उपाधि नष्ट भयो अनि रासलीला भयो। जीव र ब्रह्मको तादात्म्य भयो।

जस्ताप्रकारले वस्त्र देहलाई ढाक्दछ, सोही प्रकार वासना र अज्ञानले आत्मालाई ढाकिदिएको हुन्छ र परमात्मालाई टाढ़ा पारिदिन्छ। जबसम्म अज्ञान र वासनाको आवरण हट्दैन, तबसम्म शिवका साथ मिलन हुँदैन।

वस्त्रहरण लीला बुद्धिगत वासना, बुद्धिगत अज्ञानलाई उड़ाएर लाने लीला हो। वासना र अज्ञानरूपी वस्त्र प्रभु मिलनमा बाधक छन्। इन्द्रियहरूको कामलाई हटाउन सजिलो छ तर बुद्धिगत कामलाई निकालेर बाहिर पठाउन बड़ो गाह्रो छ।

प्राण र प्रकृति एकसाथमै जान्छन्। यस प्रकृतिमा विजय पाउनु बहुतै कठिन छ।

योगीहरूको शारीरिक काम चैं भाग्दछ तर बौद्धिक काम भने कति पटक जस्ताको तस्तै रहिरहन्छ।

वृद्धावस्थामा इन्द्रियहरू शिथिल भएपछि शारीरिक काम चाहीं जान्छ तर बौद्धिक रहिरहन्छ।

ऋषिले पनि कामका साथ हार मानेका थिए। त्यसकारण उनले कामभावनालाई श्रीकृष्णार्पण गरेर निष्काम हुने विचार गरे र गोपी बनी गोकुलमा पुगे।

अब आइरहेछ रासलीला प्रसङ्ग।

महाप्रभुजीले दशमस्कन्धलाई गोवर्धननाथको हृदय भनेको छ र रासलीलालाई प्राण। हृदयमा पञ्चप्राण हुन्छन्। रासपञ्चाध्यायी श्रीमद्भागवतका पञ्चप्राण हुन्। यसलाई फल-प्रकरण पनि भन्छन्। श्रीधरस्वामी भन्नुहुन्छ पञ्चाध्यायी निवृत्ति धर्मको परम फल हो।

शुकदेवजी विचार गर्नु थाल्नुभयो—समाजमा रासलीला श्रवण गर्ने अधिकारी कति होलान् जो अधिकारी छैनन् तिनले यस लीलामा काम मात्र देख्ने छन्।

श्रीराधाजी शुकदेवजीकी गुरु हुन्। उनले शुकदेवजीलाई ब्रह्म सम्बन्ध गराएकी थिइन्। श्रीराधाजीको कृपाविना रासलीलाको गूढ़तत्त्व, रहस्य संज्ञन सजिलो छैन।

शुकदेवजी आफ्नो पूर्व जन्ममा सुगा थिए र लीला-निकुञ्जमा राधाको नाउँ रट्दै उड्ने-फर्ने गर्थे। उसको राधा नाउँको अखण्ड कीर्तन सुनेर दयामूर्ति राधाजी त्यहाँ आइन्। उनले

देखिन्—एउटा सुगाले उनको नाउँको जप गरिरहेको छ। उनले त्यसलाई आफ्ना नजीक बोलाइन् र हत्केलामा राखी सुम्सुम्याउँदै भनिन् 'वत्स, कृष्णं वद, कृष्णं वद, राधेति मा वद'। कृष्ण तेरा सच्चा जनक हुन् उनैका नाउँको कीर्तन गर्।

राधाजीले यस प्रकार सुगालाई मन्त्रदीक्षा दिइरहेकी थिइन् तब श्रीकृष्ण त्यहाँ आउनुभयो।

श्रीराधाजी आद्य संयोजिका र आह्लादिका शक्ति हुन्। छुट्टिएका जीवहरूलाई उनले श्रीकृष्णसँग भेंट गराइदिन्छिन्। व्रजकी अधीश्वरीदेवी श्रीराधाजी हुन्। त्यसैले महात्माहरू वृन्दावनमा 'राधे-राधे' भन्छन्। राधाजीको कृपा भएमा जीवले भगवान्को दर्शन पाउन सक्छ। उनकै कृपाले जीवको प्रभुसँग मिलन हुन्छ।

शुकदेवजी पूर्व जन्ममा शुक ( सुगा ) थिए। त्यसकारण भागवतमा *'शुकदेव उवाच'* लेख्नाको साटो *'श्रीशुक उवाच'* लेखेको छ। श्रीको अर्थ हो राधा। *'श्री शुक'* मा गुरु शिष्य दुवैको नाउँ मिसिन गएको छ।

भागवतमा अरू कुनै पनि मानिसको नाउँका अगाड़ि 'श्री' शब्दको प्रयोग गरिएको छैन। ब्रह्मा उवाच, सनत्कुमार उवाच, व्यास उवाच यस्तो मात्र लेखिएको छ। व्यासजीको नाउँको अगाड़ि 'श्री' विशेषण छैन।

केवल कृष्ण र शुकदेवका नाउँका अगाड़ि मात्र 'श्री' विशेषण प्रयोगमा ल्याइएको छ। भगवान् श्रीकृष्ण राधाजीका हृदयेश्वर हुनुहुन्छ र शुकदेवजी कृपापात्र शिष्य। त्यसकारण यी दुइटाका नाउँको अगाड़ि 'श्री' विशेषण प्रयोग गरिएको छ।

राधाजीले श्रीकृष्णलाई सुगा दिँदै भनिन्, 'यो सुगा मलाई बड़ो प्यारो लाग्छ।'

अन्तरङ्गमा राधाजी शुकदेवजीकी गुरु हुन्। जो परमात्माका साथ सम्बन्ध जोडेर आउँछ, त्यही हो महाप्रभु। उसको नाउँ प्रकट रूपबाट कसरी लिनु। भागवतमा शुकदेवजीले राधाजीको प्रकट रूपबाट नाउँ लिएको छैन। शुकदेवजीले सम्पूर्ण रासलीलाको कथा बड़ो विवेक पुऱ्याएर गरेको छ। गोपी-प्रेमको कुरा धेर जसो अप्रकट राखेको छ।

राजा परीक्षित्लाई सात दिनमा मोक्ष दिनु छ। 'राधे-राधे' गर्न थाले भने शुकदेवजी समाधिस्थ भइहाल्नुहुनेछ र राजाको के हुने होला ?

कुरा, कथा, विवरण वियोगावस्थामा धेरै हुन सक्छन्, पूर्णसंयोगावस्थामा हुँदैन।

यो कामरहित अन्तरङ्गलीला हो। एघार वर्षको बालकका प्रति कामभाव कसरी जाग्न सक्छ। सपत्नीमत्सर गोपीहरूमा थिएन, यो साधारण स्त्री-पुरुषको मिलन थिएन। यसो भएको भए शुकदेवजीजस्ता महायोगीले यसको वर्णन गर्नुहुन्थ्यै थिएन।

यस्तो कल्पनै नगर गोपी गाउँकी कुनै स्त्री हुन्, गोपी शुद्ध जीवकै नाउँ हो। शुद्ध हृदयको भाव, प्रेम-भाव नै गोपीभाव हो। देहभान बिर्सिएर, प्रत्येक इन्द्रियद्वारा भक्तिरस पान गर्ने विशुद्ध जीव चाहीं गोपी हो।

साधारण जीव गोपीको कथा भन्ने वा सुन्ने अधिकारी हुँदैन।

योभन्दा पहिले नित्यसिद्धा र साधनसिद्धा गोपीहरूको चर्चा गरिएको छ।

केही ज्ञानी ब्रह्मरूप हुन खोज्छन्। केही गोपीहरू ईश्वरका साथ एक हुन खोज्दैनन्। एक भएभने ईश्वरको रसास्वादको अनुभव गर्न पाउने भएनन्। जीव ईश्वरका साथ एक भयो भने उनका रसात्मक स्वरूपको अनुभव गर्न सक्दैन।

ईश्वर रसस्वरूप हुनाको कारण ज्ञानी पुरुष उसमा डुब्दछन् र पनि तिनीहरूले रसात्मकताको अनुभव गर्न पाउँदैनन् किनभने तिनीहरू केही भिन्न नभई ईश्वरबाट टाढ़ा नहुनाले उनको रसानुभव गर्ने शक्ति हुँदैन।

नित्यसिद्धा गोपीहरू ती हुन् जो कृष्णाका साथ आएका छन्।

साधनसिद्धा गोपीहरूका कैयौं भेद छन्—

( १ ) श्रुतिरूपा—वेदका मन्त्र गोपी बनेर आएका छन्। वेदहरूले ईश्वरको वर्णन चाहीं अतिशय गरेको छ र पनि उनले अनुभव गर्न पाएनन्। ईश्वर केवल वाणीको होइन्, ध्यानको विषय हो। संसारको विस्मरण नभईकन ईश्वर साक्षात्कार गर्न पाईंदैन। त्यसैले वेदाभिमानी देव गोकुलमा गोपी बनेर आएका हुन्।

( २ ) ऋषिरूपा—जीवको सबैभन्दा ठूलो शत्रु हो काम। ऋषिहरूले कति प्रयत्न गरेर पनि त्यसलाई मार्न सकेनन्।

तप गर्नाले शरीर र इन्द्रियहरूको काम चाहिँ जान्छ तर मनमा रहिरहेको काम, बुद्धिगत काम जाँदैन। ब्रह्मसम्बन्ध स्थापित नगरेमा बुद्धिगत काम रहिरहन्छ। त्यस कामलाई कृष्णार्पण गर्नुपर्छ।

विश्वामित्र र पराशरजस्ता शक्तिशाली ऋषि पनि कामका अगाड़ि नतमस्तक भए। सूर्यलाई तिरोहित गर्ने मुनिले कामलाई हटाउन सकेनन्। काम मर्न नसक्दा ऋषि थाके र हारेर गोपी बनी गोकुलमा आए। हामी कृष्णलाई काम अर्पण गरेर निष्कामी बन्नेछौं।

जसले कामलाई मार्न सक्दछ, त्यसका निम्ति कृष्ण टाढ़ा हुनुहुन्न। काम अनङ्ग हो, उसले जीवलाई, आत्मशक्तिलाई बिस्तार-बिस्तार मार्दछ। सात्त्विक भोजनबिना ऊ मर्न सक्दैन।

कामले श्रीकृष्णलाई दूषित गर्न सक्दैन। श्रीकृष्णको चिन्तन गर्नेलाई कामले बिगार्न सक्दैन भने स्वयं श्रीकृष्णको झन उसले के बिगार्न सक्छ ?

'गर्भ संहिता' मा एउटा कथा छ। एक पटक साउन महिनामा रासको समय भगवान् श्रीकृष्ण वड़ो अबेर गरेर आउनुभयो। तब गोपीहरूले त्यसको कारण सोधे। कृष्णाले भन्नुभयो—'मेरा गुरु दुर्वासा आउनुभएको छ। म उहाँलाई दर्शन गर्न भनी गएको थिएँ।' गोपीहरूलाई आश्चर्य भयो—'तपाईंका गुरु ?' तब कृष्णले भन्नुभयो—'अँ दुर्वासा मुनि मेरा ब्रह्म विद्याका गुरु हुनुहुन्छ।'

गोपीहरूले विचार गरे 'भगवान्का गुरु कति महान् होलान्। हामी 'उहाँलाई भोजन गराउँछौं।' श्रीकृष्णले भन्नुभयो—'मेरा गुरु भोक लागेपछि मात्र दिनमा एकपटक दूबोको रस पिउनुहुन्छ, भोजन गर्नुहुन्न। तिमीहरूको प्रेम शुद्ध भयो भने शायद भोजन गर्नुहोला।'

गोपीहरूले भाँति-भाँतिका मिष्ठान्न बनाए। विचार गरे 'अब दुर्वासालाई बोलाएर ल्याऔं। मुनिको आश्रम यमुनाको किनारामा थियो। बाढ़ी आएको थियो। गरौं अब के? उनीहरूले श्रीकृष्णसँग सोधे तब उहाँले भन्नुभो—'यमुनाजीसँग भन्नू यदि श्रीकृष्ण बालब्रह्मचारी र बालउपवासी छन् भने हामीलाई बाटो छोड़िदिनुहोस्।'

गोपिनीहरू जान्दथे श्रीकृष्ण अरूहरूलाई परमानन्द दिनका निमित्त क्रीड़ा गर्नुहुन्छ। गोपिनीहरू अधिकारी थिए।

यमुनाजीले मार्ग दिइन्। गोपिनीहरू आश्रममा आए र दुर्वासालाई भोजन गर्न आग्रह गरे। दुर्वासाले भने—'त्यसो तर खाने कुनै इच्छा छैन। तैपनि तिमीहरूको इच्छा छ भने मेरो मुखमा गाँस हालिदिँदै जाओ।' गोपीहरूले जति ख्वाए ती सबै कुरा उनका पेटमा गयो। गोपीहरूले विचार गरे—'ऋषिको सन्तान हुँदै हुँदैन यो कुरा खाँदा-खेरि संझना भयो। उनले दुर्वासालाई सोधे—'*तपाईंले भोजन राम्ररी गर्नुभयो के?*'

दुर्वासा—'हुन चाहिँ, म नित्य उपवासी छु। यदि मेरो कुरा पत्याउँदैनौ भने यमुनाजीलाई भन्नु दुर्वासा नित्य उपवासी भए उनले हामीलाई बाटो दिऊन्।' ठीक त्यस्तै भयो। गोपिनीहरूले श्रीकृष्णलाई सबै कुरा भने।

गुरु-शिष्य बराबरका छन्। यति सारा रानीहरू भएर पनि श्रीकृष्ण बालब्रह्मचारी हुनुहुन्छ र मिष्ठान्नको थुप्रो खाएर डकार्दा पनि दुर्वासा नित्य उपवासी। यी कस्ता ब्रह्मचारी हुन् र ऊ कस्ता उपवासी।

दुर्वासालाई कुनै प्रकारको वासना छैन। उहाँले खान चाहिँ धेरै खानुभो तर बिलकुलै स्वाद नलिईकन। खाने र खुवाउने नारायण हुन्। दुर्वासाको यो ब्रह्मोपासना हो। खाने र खुवाउने ब्रह्म हुन्। त्यसकारण दुर्वासाको कुरा साँचो रहेछ उहाँ नित्य उपवासी हुनुहुँदो रहेछ।

कृष्ण दुर्वासाको कुनै पनि वस्तुका प्रति कुनै आसक्ति या वासना छँदैथिएन। सबै कुरा भोगेर पनि उनीहरू निष्कामी थिए। श्रीकृष्णले गृहस्थाश्रम र संन्यासाश्रामको समन्वय गरेर देखाउनुभयो। उहाँहरू निष्कामी हुनुहुन्छ।

निष्काम श्रीकृष्णको ध्यान गर्ने व्यक्ति स्वयं पनि निष्काम भइहाल्छ। चीरहरण लीलाका ऋषिरूपा गोपीहरू पाँच-छ वर्षका कुमारी थिए। ती कुमारीहरूको इच्छा छ अब श्रीकृष्ण उनको पतिका रूपमा भेटिऊन्। यसमा भाषा चाहिँ लौकिक छ तर रहस्य अलौकिक छ। जबसम्म जीव आवरणभित्र हुन्छ, तबसम्म उसले ईश्वरलाई भेट्न सक्दैन।

श्रीकृष्णले सखीहरूलाई ठीक समयमा भेट्ने वचन दिएका थिए। ध्यान रहोस् रासमा गोपीहरूको देहसँग मिलन हुने होइन। गोपीहरूले पाञ्चभौतिक शरीरको त्याग गरिदिएका छन्। यी गोपीहरूको स्वरूप अप्राकृत चिन्तनमय आनन्दरूप हो। पञ्चमहाभूतको शरीरलाई परमात्मा

स्पर्श गर्नुहुन्न। भागवतमा स्पष्टतः भनेको छ—रासलीला पाञ्चभौतिक शरीरको त्यागपछि मात्र भएको थियो।

कसैलाई शङ्का लाग्ला, गोपीहरूको पाँच भौतिक शरीर कसरी छुट्न गयो ? श्रीकृष्णाको वियोग अग्नि हो। पतिका विरहमा जस्ता प्रकारले पतिव्रता पत्नी डढ्दछे सोही प्रकार परमात्माको विरहले जीवलाई पोल्दछ। प्रभुको विरहका समयमा जीवलाई संसारमा रमिरहनु पाप हो। श्रीकृष्णाको विरहाग्निले गोपीहरूका पाञ्चभौतिक शरीरलाई डढाइदियो र उनलाई श्रीकृष्णको जस्तो अप्राकृत रसात्मक शरीर प्राप्त भयो। पाञ्चभौतिक शरीर साथमा भयो भने परमात्मासँगको मिलन हुन पाउँदैन।

गोपिनीहरू श्रीकृष्ण विरहमा जल्दछन्। हाम्रो यो कारुण्यता हो जो यो जीव भगवान्को वियोगका समयमा पनि सांसारिक वासनाहरूका साथ खेलवाड़ गरिरहन्छ। संसारको भोग, रोगसमान छ। गोपीहरू तर परमानन्द रूपबाट मिल्न खोज्दछन्। श्रीकृष्णाका दर्शनले मात्र अब उनको तृप्ति हुँदैन। दर्शनमा द्वैत छ। गोपीहरू परमात्मासँग एकरूप हुन चाहन्छन्।

गोपिनीहरूलाई जबदेखि गोवर्धन लीलामा श्रीकृष्णका परमात्मास्वरूपको दर्शन भएको थियो तबदेखि उनमा प्रेमभावको बीजारोपण भएको थियो। उनीहरूले कृष्णको बाँसुरी पनि सुने।

प्रेमको आरम्भ द्वैतवाद हुन्छ। प्रेयसी र प्रियतम भिन्ना-भिन्नै हुन्छन्। समयाका साथ प्रेम बढ्दै जान्छ अनि दुवैलाई एक हुने इच्छा हुन्छ। 'म' अब 'तिमी' हुने इच्छा गर्छ। यस प्रकार अद्वैतको इच्छा जागेर आउँछ।

'म' मेटिएर 'तिमी' हुनु, स्वयंलाई प्रिय पात्रसँग मिलाइदिनु, प्रियपात्रसँग सायुज्य सिद्ध गर्नु प्रेम हो।

कतिपटक गोपिनीहरूलाई उनका सासूले बाहिर निस्कन दिँदैनथे। उनको व्याकुलतालाई देखेर कृष्ण उनको भान्साघरमा प्रकट भइदिनुहुन्थ्यो। जीव जब अति आतुरिन्छ, तब ईश्वर ऊसँग भेट गर्न आउनुहुन्छ। गोपिनीहरूको प्रेम बिस्तार-बिस्तार बढ्दै गइरहेछ। श्रीकृष्णसँग मिल्नु छ, एक हुनु छ। अब पलभरिको पनि विरह सहन सकिँदैन। कृष्ण-विरहले गर्दा उनीहरू मूर्च्छित हुन्थे। अब उनको अरू कुनै वासना रहेन। जीव शुद्ध भएर ईश्वरसँग भेट गर्न आतुर भइसकेको छ। अब रासलीला हुने छ।

कृष्णले आफ्ना बालमित्रहरूलाई भन्नुभएको थियो 'जहिले पनि कसैलाई मूर्च्छा आयो भने मलाई बोलाउनू।' गोपिनीहरूको मन र प्राण उहाँमै छ। गोपिनी मूर्च्छा परिन् तब कृष्णलाई बोलाइयो। उहाँले संझिनुभो 'गोपिनीहरूको प्रेमभाव बढ्दै गइरहेछ।' कृष्णले गोपिनीलाई सुमसुम्याउँदै कानमा भन्नुभो 'शरदपूर्णिमाको रातमा तिमीसँग भेट गर्नेछु। त्यतिञ्जेलसम्मलाई धैर्य गरेर मेरो ध्यान गरिरहे।'

वैष्णव तर प्रेमीसँग भेट गर्ने आशामा बाँच्दछन्। कृष्ण अवश्य भेटिनु हुन्छ।

गोकुलका सबै गोपिनीहरू रासमा गएका थिएनन्। जुन गोपिनीहरूलाई अधिकार प्राप्त थियो उनीहरू मात्र जान सक्थे।

युवावस्थामै भक्तिको रङ्ग चढ़ाउनुपर्छ। वृद्धावस्थामा भक्तिको रङ्ग चढ़ेमा ठीकै कुरा हो तर उत्तम भएन। जसले केवल वृद्धावस्थामा मात्र भक्ति गर्न थाल्छ, उसलाई युवावस्थाको काम सुखहरूको संझनाले सताउँदैरहन्छ। वृद्धावस्थामा यदि भित्रबाटै भक्ति उत्पन्न हुन पाएन भने अरूहरूको टीकाटिप्पणी गर्न मन लाग्दछ।

अरूको रहन-सहन, घर-गृहस्थी, व्यवहार आदिको चियो-चर्चो गरिरहनु सबभन्दा ठूलो पाप हो, स्त्रीहरूले जहिले पनि एक-अर्कालाई भेटे भने पति, सन्तान, बुहारी, लुगा-फाटा आदिको कुरा गर्न थालिहाल्छन्। जो भक्तिको रङ्गमा रंगिन्छन्, उनले यस्ता फाल्तु कुराहरूमा भाग लिँदैनन्। कपाल फुलेपछि पनि माला जपेन भने उसको कलेजो अझ कालो हुन जान्छ। कपालका साथसाथै कलेजो सेतो हुन सकेन भने बड़ो दुःखको कुरा हो।

कृष्ण त्यस गोपीका कानमा केही भनिरहेका थिए र गोपीको मूर्च्छा पनि हट्दै थियो। एउटी बूढ़ीले यो देखेर भन्ठानी केही गड़बड़ी छ। मैले यो मन्त्र जान्नै पर्‍यो। त्यस बुढ़ीले ढोंग गरी। घरको काम गर्दा-गर्दै जानी-जानीकन भूईंमा लम्पसार परी। बुहारीलाई दुःख लाग्यो। उसले श्रीकृष्णलाई गएर भनी, 'नाथ, पाल्नुहोस्! मेरी सासू मूर्च्छा पर्नुभएको छ।' बिचरी बुहारीलाई के थाहा उसकी सासूले छल गरिरहिछ।

कृष्णले भन्नुभो—'जसको कपाल फुलिसकेको छ त्यसलाई मेरो मन्त्रले केही फाइदा हुँदैन। त्यसकारण म जान्नँ' तर गोपीले बड़ो प्रेमपूर्वक आग्रह गरेकी हुनाले नामञ्जूर गर्न सक्नु भएन। कृष्णले बूढ़ीको रोग पत्ता लगाएर भन्नुभो—'यस बूढ़ीलाई भूत लागेछ, पीर नगर। म भूत भगाउने विद्या जान्दछु। एउटा कुनै लट्ठी ल्याऊ।' बूढ़ीले मनमनै सोची 'ए बाबा।' यत्तिकैमा लट्ठी आयो र कृष्णले त्यस बूढ़ीलाई दुइ लट्ठी हानिदिए। बूढ़ीले तुरुन्त भनी—मलाई मूर्च्छा आएको थिएन छल गरिरहेकी थिएँ। कृष्णले भने—देख्यौ, भूत बोलिरहेछ। दुइ लट्ठी अरू थपिदिए।

अब विचार गर। मनुष्यहरूको बाहिरी भेष वैष्णवको हुन्छ र मनमा काम, क्रोध, कांचन, कामिनीलाई रमाउन दिन्छ। बाहिरबाट भक्ति गर्ने ढोंग गर्दछ। यो ढोंग, यो अभिमान भनेको त्यही भूत हो जो जीवको पिटाइको कारणले हुन गएको छ।

यस्ता धेरै मानिस छन् जसको आकृति बड़ो आकर्षक, सुन्दर, लोभ लाग्ने हुन्छ तर कर्म भने भयङ्कर र घृणाजनक।

त्यस बूढ़ीको जस्तो कहिल्यै ढोंग नगर। दम्भ, ढोंग भूत हो। भक्ति अरूहरूलाई देखाउन निमित्त होइन, प्रभुलाई प्रसन्न गर्नका निमित्त गर्नु हो। कति मानिस ज्ञान र भक्तिको जति ढोंग

गर्दछन्, त्यति भित्रबाट उनीहरू खोक्रा हुन्छन्। श्रीकृष्ण तर अन्तर्यामी हुनुहुन्छ। उहाँबाट कुनै कुरा लुकेको छैन।

रासलीलाका तीन सिद्धान्त छन्—

( १ ) यसमा गोपीको शरीरका साथ केही लिनुदिनु छैन।

( २ ) यसमा लौकिक काम छैन।

( ३ ) यो साधारण स्त्री-पुरुषको होइन, जीव र ईश्वरको मिलन हो।

शुद्ध जीवको ब्रह्मका साथ विलास रास हो। शुद्ध जीवको अर्थ हो मायाको आवरणबाट रहित जीव। यस्तै जीवको मात्र ब्रह्मका साथ मिलन हुन्छ।

शुकदेवजी भन्नुहुन्छ, यस लीलाको चिन्तन गर्नुपर्छ, अनुकरण होइन। शृङ्गार र करुण रसको ऐक्यलाई सिद्ध गर्नु प्रधान रूपबाट आवश्यक छ। पतिको वियोगमा छटपटाएकी पत्नीको जस्तै ईश्वरको वियोगमा जीव छटपटाउँछ, यस्तो देखाउनुनै रासलीलाको मतलब हो। भगवान्‌को विरहमा जसको शरीर तातेको छैन, उसलाई उहाँ भेटिनुहुन्न। त्यस आतुरताको यथार्थ वर्णन गर्नका निमित्त शृङ्गार रसको आश्रय लिइएको छ।

रसमा आत्मा र परमात्माको निर्लेप निर्विकार मिलन छ। श्रीकृष्णको यो काम-विजय लीला हो।

शरद्ऋतुको पूर्णिमाको रात्रि आइपुग्यो।

**भगवानपि ता रात्रिः शरदोत्फुल्लमल्लिका।**

रासलीला काम-लीला होइन। यो त काम-विजय लीला हो। श्रीकृष्णका नजीक काम जानै सक्दैन। लौकिकको आभास भए पनि यो क्रिया कामविकाररहित छ। श्रीधरस्वामी यसलाई काम-विजय लीला भन्नुहुन्छ।

**ब्रह्मादि जयसंरूढ़ दर्पकन्दर्पदर्पहा।**
**जयति श्रीपतिर्गोपो रासमण्डल मण्डितः॥**

श्रीकृष्ण कुनै सामान्य देव हुनुहुन्न, साक्षात् परमात्मा हुनुहुन्छ। उहाँले आफ्ना लीलाहरूद्वारा सबै देवहरूलाई पराजित गर्नुभयो। वत्सलीलामा ब्रह्माको गर्व दूर भयो। ब्रह्मासँग उहाँले भन्नुभयो 'तपाईं पञ्चमहाभूतको सहाराले जगत्‌को निर्माण गर्नुहुन्छ, म सङ्कल्पमात्रले जगत्‌को सिर्जन गर्दछु।' भगवान्‌लाई सृष्टिको रचना गर्नका निमित्त कुनै पनि वस्तुको आवश्यकता पर्दैन। सङ्कल्पमात्रबाट उहाँले गोपबालकहरू र बाच्छाहरूको निर्माण गर्नुभएको थियो। त्यो रूप उहाँले स्वयं लिनुभएको थियो। अग्निको गर्व पनि नष्ट गरिदिनुभयो। इन्द्रको अभिमान पनि गोवर्धन-लीलामा चूर गरिदिनुभयो। वरुणदेवको पनि हार भयो।

जब ब्रह्मादि देवको पराजय भयो तब कन्दर्प ( कामदेव )-को अभिमान जागेर आयो अब म मात्र सबैभन्दा ठूलो देव हूँ। उसले कृष्णाका समक्ष गएर मल्लयुद्धको प्रस्ताव राख्यो। कामको एउटा नाउँ मार पनि हो। उसलाई सबैले मार्दछन्। कृष्णले कामदेवसँग सोध्नुभो—'शिवजीले तिमीलाई भस्मीभूत गरिदिएका थिए। त्यो तिमीले बिर्सियौ क्या हो ?'

कामदेव—'अँ, त्यो ठीकै हो। मबाट अलिकति गड़बड़ी भएको थियो। शिवजी समाधिस्थ हुनुहुन्थ्यो र तेजोमय ब्रह्मको चिन्तन गरिरहनुभएको थियो। त्यस समयमा म उहाँसँग लड्न जाँदा डढ्न पुगें। यो कुनै विशेष कुरा भएन।'

श्रीकृष्ण—'रामावतारमा पनि तिमी हारेका थियौ।'

कामदेव—'तपाईंले त्यस अवतारमा मर्यादाको अतिशय पालन गरेर मलाई हराइदिनुभएको थियो। त्यस अवतारमा तपाईं एकपत्नी-व्रतको पालन गर्नुहुन्थ्यो र म हारेको थिएँ।'

जीवले यदि मर्यादाको पालन गर्छ भने कामलाई साधारण जीवले पनि मार्न सक्दछ।

मर्यादा पुरुषोत्तम राम कुनै अर्काकी स्त्रीतर्फ कहिल्यै दृष्टिसम्म दिनुहुँदैनथ्यो। उहाँ सदा धनुषबाणद्वारा सज्जित हुनुहुन्थ्यो—चाहे दण्डकारण्यमा होस्, चाहे सीतासँग, चाहे सुवर्ण सिंहासनमा। धनुष ज्ञानको स्वरूप हो र बाण विवेकको। ज्ञान र विवेकद्वारा सदा सज्जित रहे अन्यथा काम रावणले टाउकामा टेक्न जाला।

श्रीकृष्ण—'तब, अब तिम्रो इच्छा के छ ?'

कामदेव—'तपाईं यस कृष्णावतारमा कुनै पनि मर्यादाको पालन गर्नुहुन्न र वृन्दावनका युवतीहरूका साथ विहार गर्ने गर्नुहुन्छ। म चाहन्छु तपाईंमाथि बाण चलाऊँ। यदि तपाईं निर्विकारी रहनुभयो भने विजय तपाईंको हुनेछ र कामाधीन हुनुभयो भने मेरो। तपाईं निर्विकारी रहनुभयो भने तपाईंलाई ईश्वर मान्नेछु र कामाधीन हुनुभयो भने म ईश्वर बन्नेछु।'

कृष्णावतारमा श्रीकृष्ण पुष्टि पुरुषोत्तम हुनुहुन्छ। भगवान्‌ले रामावतारमा शरीरबाट मात्र होइन मनबाट पनि कसैको स्पर्श गर्नुभएको थिएन। मानसिक स्पर्श पनि उहाँ गर्नु हुन्नथ्यो।

कामदेवले श्रीकृष्णलाई भन्यो—मर्यादाको पालन साधारण जीवलाई मात्र हो, ईश्वरका निमित्त होइन। शरदपूर्णिमाको रात्रिमा तपाईंले युवतिहरूसँग बिहार गर्नुहोला। त्यस समयमा म बाण चलाउने छु। जसले जित्ने छ ऊ ईश्वर हुनेछ।

कामदेवले तर विचार गरेको थियो कृष्णलाई हराउन बड़ो सजिलो छ किनभने उहाँ सारा दिन गोपिनीहरूसङ्ग स्वच्छन्दरूपले बिहार गरिरहनुहुन्छ।

श्रीकृष्ण—'तिम्रो यही इच्छा छ भने त्यस्तै हुनेछ।'

रासलीलाको मङ्गलाचरणमा श्रीधरस्वामीले भने, 'ब्रह्मादिदेवहरूको हार भयो तब कामदेवलाई घमण्ड भयो र ऊ भगवान्‌का साथ युद्ध गर्न आयो, भगवान्‌ले उसलाई हराइदिनुभयो।

यो रासलीला कामको पराभवका निमित्त हो। श्रीकृष्ण बिहार चाहीं गोपिनीहरूका साथ गरिरहनु भएको थियो, तर उहाँको मन भने निर्विकारी थियो।'

वनमा कुनै वृक्षका मुनि एकान्तमा समाधिरूप हुनु, संयमको पालन गर्नु, कामलाई हराउनु कुनै विशिष्ट कुरा भएन तर श्रीकृष्णले अनगिन्ती सुन्दरीहरूका साथ बसेर कामको पराभव गर्नुभयो। कामले धनुषबाण फ्याँकिदिएर श्रीकृष्णको शरण पऱ्यो। यसैले श्रीकृष्णको नाउँ मदनमोहन छ। श्रीकृष्ण तर योगयोगेश्वर हुनुहुन्छ।

कामले प्रायः सबैलाई हराइदिएको थियो। यसै कारणले उसले गर्व गर्नु स्वाभाविकै थियो। रासलीलामा भगवान्‌ले उसको गर्वको पनि नाश गरिदिनु भयो।

देवी भागवतमा व्यासजी भन्छन् एकपटक उनी पनि कामाधीन भएका थिए।

पराशरले साठी हजार वर्षसम्म तपश्चर्या गरे। उनी एकपटक यमुना तरिरहेका थिए। तब नाउ ख्याइरहेकी माझीकी छोरी मत्स्यगन्धाको सौन्दर्य देखेर उनी मोहित भए। उनले त्यस कन्याको हात समाते। त्यस कन्याले भनी, कहाँ तपाईंजस्तो पवित्र ब्राह्मण कहाँ म शूद्र माझीकी छोरी ? तर कामले कहिले जाति हेर्छ ? ऋषिले कामेच्छा जाहेर गरे। मत्स्यगन्धाले भनी, 'यो दिउँसोको वेला छ, त्यसकारण हामीलाई सबैले देख्ने छन्।' दिउँसोका बखत यस्तो कर्म निषिद्ध छ। तब पराशरले आफ्नो तपोबलबाट अन्धकारको बादल रचेर सूर्यलाई ढाकेर चारैतर्फ अन्धकार पारिदिए।

पराशर ऋषि सूर्यलाई पनि ढाक्न सक्थे तर आफ्नो कामलाई भने रोक्न सकेनन्।

कामलाई जित्नु बड़ो कठिन काम छ। जसले कामको आधीन भएर उसको चोट खान्छ, त्यो साधारण जीव हो। जसले कामलाई मारेर उसलाई आफ्नो अधीनमा राख्छ, त्यो ईश्वर हो।

यस रासलीलाको चिन्तन गर्नाले कामवासना नष्ट हुन्छ। यस लीलामा जीव र ईश्वरको मिलनको निरूपण छ। यो मिलन उच्च कक्षाको हो।

प्रेमको आरम्भ द्वैतबाट हुन्छ र अन्त अद्वैतमा।

श्री महाप्रभुजी भन्नुहुन्छ—रासलीला चाहीं भागवतको फल हो। जीव र ईश्वरको मिलन त्यही फल हो।

भागवतको उद्देश्य हो ईश्वरको जीवन देखाउनु र उनको प्राप्ति गर्नु।

रासलीलामा शुकदेवजीले कुनै पनि गोपीको नाउँ नलिएर काश्चित्, कन्या, अपरा शब्दहरूको प्रयोग गरेको छ। यसै कारणले श्रीधरस्वामी भन्नुहुन्छ—'जीवमात्रलाई प्रभुको आह्वान छ। उहाँले सबैलाई बंशी बजाएर बोलाउनुहुन्छ। उहाँ सबैका सच्चा स्वामी हुनुहुन्छ।'

श्रीधर स्वामी भन्नुहुन्छ—'रासलीलाका पाँच अध्याय पञ्चप्राणहरूका सूचक प्रतीक हुन्। पञ्चप्राणका ईश्वरका साथ रमण चाहीं रास हो।'

रास पञ्चाध्यायी काम-विजयका निमित्त हो। जो शस्त्रद्वारा घाइते हुन सक्दैन, त्यस्तो योद्धा पनि कामको पुष्प-बाणले घाइते हुन्छ। जसले कामलाई मार्न सक्छ, त्यसले काललाई पनि मार्न सक्छ।

कामविजयका निमित्त धेरै महात्माहरूले चामल र दूधमात्रको आहार गरेर रात्रिको दोस्रो प्रहरमा रासलीलाको पाठ र चिन्तन गर्छन्। उनीहरू मनमनै कल्पना गर्छन् उनीहरू वृन्दावनमा छन्। रास-मण्डलीको बीचमा राधाकृष्ण हुनुहुन्छ। कृष्णले एक हातमा बाँसुरी समाएको छ र दोस्रो हात राधाजीको काँधमा राखिएको छ। एक-एक राधाका साथ एक-एक कृष्ण छन्। यस रासलीलाको चिन्तनले कामवासना नष्ट हुनेछ।

कामले विशेषतः रात्रिको दोस्रो प्रहरमा धेरै सताउँछ। त्यसकारण त्यस समय स्नानादि गरी पवित्र भएर रासलीलाको चिन्तन गऱ्यौं भने कामले सताउने छैन।

रासलीला अनुकरणीय होइन, चिन्तनीय हो। त्यसको चिन्तन कामनाशी हुन्छ।

वेणुगीतको बाँसुरी पशु, पंछी, नदी सबले सुन्दछन् तर रासलीलाको बाँसुरी ईश्वरमिलनातुर अधिकारी जीव-गोपीले मात्र सुन्दछ।

**निशम्य गीतं वदनङ्गवर्धनं ब्रजस्त्रियः कृष्णग्रहीतमानसः।**

जसको चित्त श्रीकृष्णले हरिलिएको थियो ती व्रजनारीहरू बाँसुरी सुनेर आतुरतापूर्वक श्रीकृष्णलाई भेट्न भनी दुगुरे। गोपिनीहरू आफ्ना सांसारिक कामहरूलाई एकतर्फ पन्छाएर भगवान्सँग भेट गर्न दगुर्छन्। ती आफ्ना सखीहरूलाई पनि बोलाउन रोकिँदैनन्।

जुन गोपीको नाउँ लिएर बाँसुरी बजाइन्थ्यो, त्यो गोपीले सुन्थी। गोपीहरूको आतुरतालाई हेर—

**दुहन्त्योऽभिययुः कश्चिद् दोहं हित्वा समुत्सुकाः।**

जुन गोपीहरू गाई दुहिरहेका थिए, तिनीहरू पनि बाँसुरीको तान सुनेर काम छोड़ी उत्सुकतापूर्वक दौड़िहाले।

उनको तन्मयता हेर—

**व्यत्यस्तवस्त्राभरणाः काश्चित् कृष्णान्तिकं ययुः।**

कोही गोपिनीहरू बेढङ्गको वस्त्रालङ्कार लगाएर कृष्णसँग भेट गर्न भनी हिँड़े। जब देहाध्यासले छोड्दछ, तब यस्तो दशा हुन्छ।

शृङ्गार गर्दागर्दै एक गोपिनीले कृष्णको बाँसुरी सुनेर यति व्याकुल भई र घाँटीमा लाउने चन्द्रहार हातमा लगाइछ।

घरको लिपपोत गर्दा एउटी गोपिनी गोबरले फोहर भएको हात लिँदै दगुरिहाली।

रासलीलामा यदि लौकिक कुरो हुँदो हो, त्यसमा गोपिनीहरू अरू केही हुन्थे। यसप्रकार दगुरेर जानु साटो दुइ घण्टासम्म शृङ्गार गरी, ऐनामा आफ्नो अनुहार हेरी, राम्री भई निस्कन्थे, तर यस्तो होइन। शुकदेवजी वर्णन गर्नुहुन्छ—

**लिम्पन्त्यः प्रमृजन्त्योऽन्याः।**

केही गोपिनीहरू घर पोतिरहेका थिए। तिनीहरूले गोबर लागेको फोहोर हात नधोईकन कृष्णलाई भेट्न भनी दौड़िहाले। यसले यही भन्छ र यो लौकिक कामको कुरा भएन।

ईश्वरसँग भेट गर्ननिमित्त यस्तै आतुरता हुनुपर्छ।

रामकृष्ण परमहंस सदा सदृष्टान्त कुरा गर्थे।

एउटा शिष्यले आफ्ना गुरुसँग सोध्यो—'ईश्वर प्राप्तिका निमित्त जिज्ञासा र व्याकुलता कस्तो हुनुपर्छ ?'

गुरुजी—'यो विषयवर्णनको होइन, शब्दातीत अनुभवको हो। रामबाण जसलाई लागेको हुन्छ, त्यसले मात्र त्यसको वेदना जान्न सक्छ। कुनै प्रसङ्गका समयमा सबै कुरा बुझाइदिनेछु।'

एकपटक दुवै नुहाउन भनी गए। जसै शिष्यले पानीभित्र गोता लगाएको थियो गुरुले उसको टाउको पनि बलले पानीमा गाड़ीदिए। सास फेर्नमा कष्ट भयो अनि शिष्य छटपटाउन थाल्यो, बाहिर निस्कनाका निमित्त व्याकुल भयो। गुरुले हात पकड़िए अनि शिष्यले पानीबाट बाहिर निस्किएपछि आरामको सास फेऱ्यो। गुरुले सोधे—'कस्तो भयो अनुभव ?' शिष्यले भन्यो—ए, मेरो प्राणै निस्किरहेको थियो। लाग्थ्यो प्राणवायु विना म मर्न लागिरहेछु।

गुरुजी—'अँ, ईश्वरलाई भेट्टाउनलाई पनि त्यस्तै छटपटी, तड़प, व्याकुलता, आतुरताको आवश्यकता पर्छ। यस्तो भयोभने मात्र ईश्वर भेटिनुहुनेछ।'

मीराबाईले भनेको छ—

**तुम देख्या बिन कल न परत है, तड़प-तड़प जिव जासी।**

रासलीला कुनै साधारण स्वास्नी मानिसको होइन। देहभान बिर्सिएकी, देहाध्यासबाट मुक्त स्त्रीको कथा हो। देहाध्यास नष्ट भएपछि प्रभुको चिन्मयी लीलामा प्रवेश पाइन्छ।

गोपिनीहरूलाई नातेदारहरूले रोके तर तिनीहरू के थामिन्थे, उनका मनमोहनले मोहमा पारिसकेका थिए।

सूरदास भन्दछन्—

**मोहन मन मोहि लियो ललित बेनु बजाई री।**
**मुरली धुनि श्रवन सुनन बिबस भई माई री॥**

लोक लाज, कुल की मरजादा बिसराई री।
घर-घर उपहास सुनत नेकु ना लजाई री॥
जप तप वेद अरु पुरान, कुछ ना सुहाई री।
सूरदास प्रभु की लीला निगम नेति गाई री॥

गोपीका हृदयको यो शुद्धभाव छ।

गोभिः इन्द्रियैः भक्तिसरम् पिबति इति गोपी।

इन्द्रियहरूद्वारा जो भक्तिरसको पान गर्छ त्यही गोपी हो।

घरमा बसेर भक्ति गर्नु सजिलो छैन। आफ्नी पत्नीका प्रति पनि मातृ-भाव राख्न सकिएका खण्डमा मात्र घरमै बसेर भक्ति गर्न सकिन्छ। भक्तिको तन्मयतामा स्त्री-पुरुषको देहभान मेटिनुपर्छ।

दर्शनका समय आफ्नो स्त्रीत्व र पुरुषत्वको भान बिर्सियो भने त्यो गोपी हो। जबसम्म देहको भान हुन्छ, मनभित्रबाट काम निस्किँदैन।

यी गोपिनीहरू को थिए ? जब ऋषि-मुनि हजारौं वर्षसम्म तपश्चर्या र ब्रह्मचिन्तन गर्दै रहेर पनि मनमा बसेको कामलाई मार्न सक्दैनथिए तब तिनीहरू त्यस कामलाई श्रीकृष्णार्पण गर्ने इच्छाले गोपिनीहरूको अवतार लिएर गोकुलमा आई बसे, यिनमा साधनसिद्धा, ऋषिरूपा, स्वयंसिद्धा, अन्धपूर्वा आदि कैयौं प्रकारका गोपिनीहरू थिए। सांसारिक भोगहरूको उपभोग गर्नुभन्दा अगावै जसलाई वैराग्य आउँछ, त्यो अनन्यपूर्वा गोपी हो।

केवल रूखको पात खाने तपस्वी ऋषिलाई पनि कामले सताउँछ भने जिभ्रोको स्वाद लिन मात्र व्यस्त रहने हामीजस्ता साधारण मानवको चर्चा के भयो र ?

तपश्चर्या र योगसाधना गर्ने ऋषि थाकी हार भई आफ्नो काम श्रीकृष्णार्पण गर्न गोपी बनेर आए। ईश्वरलाई काम अर्पण गरेर निष्कामी बन। पराशरमुनिले सूर्यलाई वशमा गर्न सके तर आफ्नो कामलाई सकेनन्।

मानिसको सबैभन्दा ठूलो शत्रु काम हो। यसबाट अन्य धेरै दुर्गुण पनि उत्पन्न हुन्छन्।

कामात् क्रोधोऽभिजायते, क्रोधात् भवति संमोहः।

अन्तमा हुन्छ बुद्धिनाश। यदि कामलाई ईश्वरमा अर्पण गऱ्यौ भने त्यो कहिल्यै पनि अंकुरित भएर आउँदैन।

संसारका सबै सुखहरूलाई मनबाट त्यागेर ईश्वरसँग मिल्नका निमित्त गोपिनीको जस्तै निक्लने मानिस धन्य हुन्। यसै कारणले भगवान् गोपीहरूको स्वागत गर्नुहुन्छ—'महाभाग्यशाली नारीहरू, आओ।'

## स्वागतं वो महाभागाः।

भागवतकार गोपिनीहरूलाई महाभाग्यशाली भन्दछन्। नारदजी पनि आफ्नो भक्ति सूत्रमा गोपीहरूको दृष्टान्त दिनुहुन्छ—

## यथाव्रजगोपिकानाम्।

प्रमाणित भयो यी गोपीहरू कुनै सामान्य स्त्रीहरू होइनन्, यिनीहरू भगवान्कै भक्त थिए।

भगवान्ले प्रत्येक गोपीलाई महाभाग्यशाली भनेको छ। 'महाभागाः' मोटर-विमानमा घुम्ने, बङ्गलामा बस्ने भाग्यशाली होइनन्। जसका शिरमा कालको छाया होस्, त्यसलाई भाग्यशाली कसरी मान्ने ?

भाग्यशाली त्यो हो जो सांसारिक सुखहरूलाई र कालको डरलाई छोड़ेर भगवान्तर्फ दौड़िएर जान्छ। ईश्वरसँग भेट गर्नका निमित्त अतिशय व्याकुल हुने त्यो जीव महाभाग्यशाली हो। यसै कारणले वंशीनाद, अधिकारी गोपी-जीवलाई सुनिएको थियो। वंशीको नाद सबैले सुनेका थिए।

सांसारिक विषयहरूको उपभोगबाट कहिल्यै तृप्ति हुँदैन। ईश्वरको मिलनका निमित्त दृढ़ निश्चय गर। संसार-सुख सबैभन्दा ठूलो महादुःख हो र यस कुरालाई सत्य मानेर जसले संसारसुखहरूलाई त्यागेको छ त्यसलाई भगवान्ले आफ्नो गराउनुहुन्छ।

प्रभुप्रेममा जो पागल बनेको छ, त्यो भाग्यशाली हो। परमात्मा यस्तै जीवलाई मात्र स्वागत गर्नुहुन्छ।

श्रीकृष्णले गोपीहरूलाई सोध्नु भयो—'यसरी दगुरीकन किन आएका छौ तिमीहरू ? के व्रजमा केही सङ्कट आइपरेको छ ? त्यहाँ सबै कुशल-मङ्गल छन् ? तिमीहरूलाई प्रसन्न गर्न म के गरूँ ? रात्रिको वेला यस घनघोर वनमा स्त्रीले बस्नु ठीक छैन। के वृन्दावनको शोभा हेर्न आएका हौ ? के यस सुन्दर रात्रीको सौन्दर्य हेर्न आएका हौ ? शोभा हेरेर घर तुरुन्त फर्किहाल। त्यहाँ तिम्रा पति, सन्तान आदिले बाटो हेरिरहेका होलान्। आफ्नो पतिको सेवा र सन्तानको लालन-पालन गर।'

अन्तर्मुख दृष्टि गरेर जीव जब भगवान्का नजिक पुग्दछ तब ऊसँग सोध्नुहुन्छ—'मकहाँ किन आएका हौ ?' संसारमा रत्तिई बस त्यहाँ तिमीलाई सुख पाइने छ। म सुख होइन, केवल आनन्द मात्र दिनसक्छु। तिमीहरू सबै फर्किएर जाओ। त्यहाँ सबै प्रतीक्षा गरिरहेका होलान्।

एक अर्थ हो, घर जाओ। दोस्रो अर्थ यस्तो पनि निस्कन सक्छ, जो जीव भगवान्को स्वरूपका साथमा गई मिसिन्छ, ऊ कहिल्यै घर फर्कन सक्दैन। जीवलाई परमात्मा सहसा भेटिनुहुन्न। जीवलाई भ्रान्ति हुन्छ भगवान् उसलाई संसारमा फर्कन भनिरहनुभएको छ।

त्यसो तर भगवान् चाहनुहुन्न गोपी ( शुद्ध-जीव ) संसारमा फर्केर जाओस्, तर उहाँ उसको प्रेम परिपूर्णताको जाँच गर्न चाहनुहुन्छ। त्यसकारण उहाँले भनिरहनुभएको छ सुख संसारमै छ।

भगवान् आदर्श देखाउनुहुन्छ सेवा गर्नु पत्नीको धर्म हो। पतिमा ईश्वरभाव नराख्ने नारीको यो लोक र परलोक दुवै बिग्रन्छ।

कलियुगमा स्त्रीहरू र शूद्रहरूलाई मुक्ति छिटै पाइन्छ, शूद्रले आचार-विचारको पालन नगरोस् र केवल राम-नाम जप्दै रहे तापनि काम चल्छ तर ब्राह्मणलाई आचार-विचारको पालन गर्नैपर्छ, अन्यथा उसको पतन हुनेछ। यदि स्त्रीले घरकाज र कुटुम्बका सबै जनाको सेवा गर्दा-गर्दै रामनाम लिँदै रही भने मन्दिरमा जाने कुनै आवश्यकता रहँदैन। जुन मुक्ति योगीहरूले पाउँछन्, सोही मुक्ति ती स्त्रीहरूलाई अनायासै प्राप्त हुनेछ। पतिव्रता नारीले अनसूयाको जस्तै भगवान्लाई पनि बालक बनाउन सक्दछन्।

प्रभुले आफ्ना सम्मुख आएका गोपिनीहरूलाई धर्मोपदेश दिनुभयो। स्त्रीलाई बाहिर जाने जरूरी छैन। बाहिर अल्लारिने स्त्री स्वेच्छाचारिणी भएर पतित हुन्छे।

जो स्त्री घरमै बसीकन राम्ररी गृहिणीधर्मको पालन गर्छे, उसलाई पवित्र भएर बस्ने अनुकूलता रहन्छ। आफ्ना पति, पतिका सम्बन्धी तथा आफ्ना पुत्रपुत्रीहरूमा ईश्वरको भावना राखेर उनको सेवामा आफ्नो तनमन धन समर्पण गरिदिएर परमात्माको स्मरण गर्दै रहोस्। मन्दिरमा नगए पनि अनायासै उसलाई त्यहीं सद्गति हुन्छ, जो योगीहरू र संन्यासीहरूले पाउँछन्।

पति र पुत्र-पुत्रीहरूमा ईश्वरको अंश छ भन्ठान र उनको जीउज्यान दिएर सेवा गर। उनका साथ-साथ बसेरै ईश्वरको चिन्तन गर। पतिमा ईश्वरको भावना गरेर, वियोगावस्थाको अनुभव गरेर स्मरण र ध्यानद्वारा चित्तलाई एकाग्र गर।

तिमीहरू आफ्ना-आफ्ना घर जाओ। माता अनसूयाले पति सेवाकै प्रभावले ब्रह्मा, विष्णु, महेशलाई बालक बनाइदिएकी थिइन्। पतिव्रता-धर्म सबैभन्दा ठूलो धर्म हो।

एउटी पतिव्रता नारी आफ्ना पतिको जीउज्यान दिएर सेवा गर्थिन्। एक दिन उनका पति काम-धन्धा सकेर धेरै रात बिताई आए। धेरै थाकेका थिए तब पत्नीले आफ्नो काखमा उनको शिर राखेर सुताइदिइन्। पति तुरुन्तै गाढ़ा निद्रामा परे। एउटा खाटमा उनको दुइ वर्षको छोरो सुतेको थियो, खाटमुनि जाडो नहोस् भनेर कोइलाको आगो राखेको थियो। छोराले निद्रामा कोल्टे फेर्न थाल्यो। यता आमा विचार गर्न लागी कहीं छोरो त्यो आगोमा पर्नगयो भने के होला ? म पतिलाई उठाऊँ ? त्यसो गर्नाले निद्रामा बाधा पर्ला। म दुलहालाई कसरी कष्ट दिन सक्छु ? म छोरालाई उठाउँदिनँ। पति-सेवा गर्दै उनी ईश्वरस्मरण गर्न थालिन्। बालक आगोमा पऱ्यो तर त्यो सच्चा पतिव्रता नारीको छोरो थियो, अग्निले उसलाई केही गर्न सकेन। अग्नि चन्दनजस्तै शीतल